# वन गाथा

## वन सम्बन्धी लेखहरुको संग्रह




लेखक

युवराज कंडेल



डिजिटल संस्करण

२०८१

# BAN-GATHA

Collection of Forest Related Articles



Written by

Yubaraj Kandel

Digital Edition

2024



Published by:

PURALU Center for Environment Advocacy and Research

Tilottama-8, Rupandehi

Contact: 9805460212

email: nature.yrk@gmail.com

## मेरो भन्नु

मैले सन् १९९५ देखि लेख लेख्न सुरू गरेको थिएँ । झन्डै ३ दशकमा मैले वन र वातावरणका मुद्दाहरूमा १५०० भन्दा बढी लेख र समाचारहरु लेखेको थिएँ । ती लेख र अन्य सामाग्रीहरु एकै ठाउँमा सङ्ग्रह गर्दा वन र वातावरण क्षेत्रमा अध्ययन अनुसन्धान गर्न चाहनेहरुलाई सजिलो हुने सुझाव धेरैजनाले दिइरहेका छन् । मैले लेखेका धेरै लेखहरू मेरो सङ्ग्रहमा रहेका पत्रपत्रिका र जर्नलमा भएपनि त्यसको सफ्टकपी भने छैन । सन् २०११ पछि मैले लेखेका र प्रकाशन भएका लेखहरुको सफ्टकपी  मसंग भएको र त्यसलाई एकीकृत गर्नको लागि यो पुस्तक तयार गरेको छु । यस पुस्तकमा लुम्बिनी प्रदेशको वनलाई केन्द्रित गरेर सन् २०१७ पछि लेखेका लेखहरु सङ्ग्रहित छन् ।यो पुस्तक मैले नेपाली भाषामा लेखेको र पत्रपत्रिका तथा जर्नलहरुमा प्रकाशित भएका लेखहरुको संग्रह हो । नेपाली भाषा नबुझ्ने पाठकहरुलाई पनि लेखको विषयवस्तुको जानकारी दिनको लागि प्रत्येक लेखको अन्त्यमा अंग्रेजी भाषामा लेखको सारसंक्षेप पनि राखेको छु ।  यस पुस्तकमा रहेका लेखहरुले ती लेख प्रकाशन हुँदाको अवस्थाको विश्लेषण गर्ने भएकोले अहिलेको अवस्थामा तथ्याङ्कहरु मेल खाँदैनन् । तरपनि वनको विगत र वर्तमानका साथै वन सम्बन्धी नीति र कार्यक्रमहरु बुझ्नको लागि यो पुस्तक उपयोगी हुने विस्वास छ । मलाई लेख लेख्न आवश्यक सूचनाहरू उपलब्ध गराउने लुम्बिनी प्रदेश वन मन्त्रालय तथा सङ्घीय वन मन्त्रालयका वन प्राविधिक र प्रशासकहरु, सामुदायिक वनसँग सम्बन्धित व्यक्तिहरुलाई विशेष धन्यबाद दिन चाहन्छु । मेरा लेखहरु प्रकाशन गरिदिने सबै पत्रपत्रिका र जर्नलका सम्पादकहरूका साथै मेरा लेख रचनाहरु पढेर बेलाबेलामा मलाई सल्लाह सुझाव दिने, कमीकमजोरी केलाईदिने सबै पाठकहरूप्रति आभारी छु ।

युवराज कंडेल
श्रावण ६, २०८१ गुरुपूर्णिमा

I have been writing articles since 1995, spanning nearly three decades during which I have authored over 1500 articles on forest and environmental issues. Many have suggested that compiling these articles and materials in one accessible location would greatly benefit those studying and researching in the field of forestry and environment. While many of my articles have been published in newspapers and journals, there is a lack of digital copies available. However, starting in 2011, I have maintained soft copies of my work and have compiled them into this book. This book is a collection of articles written by me in Nepali language and published in newspapers and journals. I have also put a summary of the article in English at the end of each article in order to inform the readers who do not understand the Nepali language about the content of the article.This collection focuses on articles written after 2017, specifically highlighting the forests of Lumbini province. Although the data presented in this book may not reflect the current situation due to the timing of publication, it is intended to provide valuable insights into the history and current state of forests, as well as the policies and programs surrounding them. I extend my sincere gratitude to the forest technicians and administrators of the Lumbini State Forest Ministry and the Federal Forest Ministry, as well as those involved in community forestry, for their invaluable contributions to my work. Additionally, I would like to thank the editors of newspapers and journals who have published my articles, and all the readers who have provided feedback and guidance over the years.

Yubaraj Kandel
July 11, 2024

बिषय सूची

वन र वातावरण संरक्षणमा संलग्न
सबैजनाप्रति यो पुस्तक समर्पित छ ।

# प्रदेशको आवधिक योजनामा वन

Forests in Periodic Plan of Province 5

युवराज कंडेल

*पहिलो पटक प्रदेश सरकारले आवधिक योजना बनाउदा वन क्षेत्रलाई समेट्नु राम्रो कुरा हो. तर पनि योजनाको मस्यौदालाई हेर्दा प्रदेश सरकारले लागु गर्न खोजेको योजना अमुर्त र परम्परागत देखिन्छ । योजनामा उल्लेख गरिएका रणनीति र कार्यक्रमहरु नेपाल सरकारले हालसम्म कार्यान्वियन गरेका योजनाहरुमा उल्लेखित कुरा भन्दा फरक भएको देखिदैन । वैज्ञानिक वन व्यवस्थापन, वन उद्यम, वृक्षरोपण, जैविक विविधता र जलाधार संरक्षण जस्ता कुराहरु नेपाल सरकारका विगतका योजनाहरुमा सधै परेपनि उपलब्धि अति कम भएको देखिएको छ । यिनै कुराहरु प्रदेशको योजनामा दोहोरिदा प्रदेश योजनाकारहरुसंग प्रदेशको समृद्धिको लागि वनको कसरि उपयोग गर्ने दुर दृष्टि नभएको त हैन भन्ने शंका गर्नुपर्ने हुन्छ ।*

पाँच नम्बर प्रदेश सरकार गठन भएको १५ महिना वितिसकेको छ । प्रदेश सरकार गठन भएदेखि नै प्रदेशलाई समृद्ध बनाउने र प्रदेशबासीहरुलाई सुखी बनाउने संकल्प सरकारले गरको थियो । प्रदेशलाई योजनावद्ध विकासको बाटोमा अघि बढाउनको लागि प्रदेश सरकार गठन हुने वित्तिकै २०७४ चैत्र ६ गते प्रदेश सरकारले प्रदेश योजना आयोग ( गठन तथा कार्य संचालन ) २०७४ स्वीकृत गरि मुख्यमन्त्री अध्यक्ष रहने गरि प्रदेश योजना आयोग गठन गरेको थियो । यहि क्रममा योजनाबद्ध विकास गरी समृद्ध प्रदेश बनाउन प्रदेश नं. ५ को प्रदेश सरकारको आर्थिक वर्ष २०७४।७५ को वार्षिक नीति तथा कार्यक्रममा प्रदेशको आवधिक योजना वनाउने कार्यलाई प्राथमिकता साथ उल्लेख गरेको थियो । प्रदेश योजना आयोगले प्रथम प्रादेशिक योजनाको अवधारणा पत्र तयार पारेर २०७५ साल भदौ महिनामा सरोकारवालाहरूसंग अन्तरक्रिया सम्पन्न गरेको थियो । उक्त अन्तरक्रिया पश्चात् मन्त्रालयका प्रतिनिधिहरू र केही विज्ञहरू समावेश पाँचवटा कार्यदल बनाएर योजनाको आधारपत्रको मस्यौदा तयार पारिएको थियो । आधारपत्रको मस्यौदालाई यस प्रदेशका १२ वटै जिल्लामा सरोकारवालाहरूलाई सहभागी गराई गरिएको एक दिने गोष्ठीमा प्राप्त सुझावहरूका आधारमा आधारपत्रलाई परिमार्जन गरि परिमार्जित आधारपत्रलाई राष्ट्रिय योजना आयोगमा सुझावको लागि पठाइको थियो साथै, प्रदेश विकास परिषदको बैठकमा परिमार्जित आधारपत्र माथि छलफल भइ प्राप्त निर्देशन अनुसार थप परिमार्जन समेत गरिएको छ । परिमार्जित गरिएको आधारपत्रलाई प्रदेश सरकारको मन्त्रिपरिषद्ले स्वीकृत गर्नेछ । यसको आधारमा सम्बन्धित मन्त्रालय र विज्ञहरूलाई संलग्न गराएर योजनाको विस्तृत दस्तावेज तयार हुनेछ र यसरि तयार गरिएको विस्तृत योजनालाई प्रदेश सरकारले आउदो आर्थिक वषदेखि कार्यान्वयनमा ल्याउने सरकारको तयारि छ ।

वनजंगल पाँच नम्बर प्रदेशको मुख्य प्राकृतिक सम्पदा हो । हिमाली, पहाडी र मैदानी तीनै किसिमका भूभाग र फरकफरक किसिमको हावापानी पाइने भएकोले यो प्रदेशमा धेरै किसिमका वनस्पति, जडिबुटीहरु र वन्यजन्तुहरु पाइन्छन् । प्रदेश योजना आयोगका अनुसार यस प्रदेशमा वन क्षेत्रले १००८.७ हजार हेक्टर क्षेत्र (४५ प्रतिशत) ओगटेको छ । साथै, बुट्यान ११८.८ हजार हेक्टर (५ प्रतिशत ) भूभागमा रहेको छ । राष्ट्रिय वनअन्तर्गत ३९६३ वटा सामुदायिक वन क्षेत्र (३८२.९६ हजार हेक्टर),

३४० वटा कबुलियत वन क्षेत्र (२ हजार हेक्टर), २४ वटा धार्मिक वन क्षेत्र (८०७ हेक्टर), ४ वटा संरक्षित वन क्षेत्र (३३.८८ हजार हेक्टर), ८ वटा साझेदारी वन (२२.५५ हजार हेक्टर), एक चक्ला वन (५४५ हेक्टर) र ८४९ वटा निजी वन (५२६ हेक्टर) रहेको छ । ५३७.५१ हजार हेक्टरमा सरकारद्वारा व्यवस्थित वनक्षेत्र रहेको छ । यस प्रदेशमा बाँके र बर्दिया गरी दुईवटा राष्ट्रिय निकुञ्ज र एउटा संरक्षण क्षेत्रको रुपमा कृष्णसार संरक्षण क्षेत्र पर्दछन् । ढोरपाटन शिकार आरक्षको केही भाग रुकुम पूर्वमा पर्दछ ।

शदियौ यो प्रदेशका बासिन्दाह?ले यहाका वन जंगलबाट जडिबुटी उत्पादन, संकलन र विक्री गरेर आम्दानि गर्ने र राज्यलाई राजस्व उपलब्ध गराउने काम समेत गरिरहेका छन् । तराईका वनहरू काठ उत्पादनको लागि निकै प्रसिद्ध छन् भने पहाडी र हिमाली क्षेत्रका वनहरू खोटो उत्पादन र बहुमुल्य जडिबुटीका लागि निकै महत्वपूर्ण थलो मानिन्छन । पछिल्लो समयमा प्रदेशका वन क्षेत्रहरु पर्या-पर्यटनका गन्तब्य बनिरहेका छन् । पाच नम्बर प्रदेशको वनमा प्रसस्त आर्थिक सम्भावना देखेर प्रदेश सरकारले वनलाई समृद्धिको आधार बनाउने कुराहरू सार्वजनिक गरिरहेको छ ।

नेपालको संविधानले प्रदेशको अधिकार क्षेत्रभित्र प्रदेश भित्रको राष्ट्रिय वन, जल उपयोग तथा वातावरण व्यवस्थापनलाई राखेको छ । साथै, संघ र प्रदेशको साझा सूचीमा वातावरण संरक्षण र जैविक विविधता, अन्तरप्रादेशिक रूपमा फैलिएको जंगल, हिमाल, वन संरक्षण र जल उपयोग रहेको छ । यिनै अधिकारको उपयोग गर्दै वनलाई प्रदेशको समृद्धिको आधार बनाउने प्रदेश सरकारको सोच अनुसार प्रदेश नं ५ को प्रथम आवधिक योजनाको आधारपत्र (आ.व.२०७६/७७-आब २०८०/८१)मा वन क्षेत्रको लागि समेत योजना र रणनीतिहरु समावेश गरिएको छ । वातावरणीय सन्तुलन कायम राख्दै रोजगारी र आयआर्जन हुनेगरी वनको दिगो व्यवस्थापन गर्ने दिर्घकालिन सोच राखिएको प्रदेशको पहिलो योजनाले जैविक विविधता र जलाधारको समुचित संरक्षण, व्यबस्थापन र सदुपयोगबाट वातावरणीय सन्तुलन कायम गर्दै वनपैदावारहरूको समूचित प्रयोगबाट रोजगारी र आयआर्जनमा वृद्धिगर्ने लक्ष्य लिएको छ । आवधिक योजनाको मस्यौदाले यस प्रदेशमा उल्लेख्य मात्रामा वन क्षेत्र रहनु, राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु आरक्षण हुनु, वनजन्य वस्तुहरूको बजार माग उच्च रहनु, दिगो र वैज्ञानिक वन व्यबस्थापनमा जागरुकता बढ्नु, वातावरण संरक्षणमा सरोकारवालाहरूको चासो बढ्नु यस क्षेत्रका अवसरहरूको रुपमा पहिचान गरेको छ । योजनाको मस्यौदामा वनजन्य वस्तुको उत्पादन विस्तार र यसमा आधारित उद्योगहरू स्थापना गरी रोजगारी सिर्जना गर्ने, भूस्खलन नियन्त्रण र भूसंरक्षण कायम गर्दै वातावरणीय सन्तुलन कायम गर्ने ,वनको दिगो व्यवस्थापन गर्ने वन र वातावरण क्षेत्र सम्बन्धि ३ वटा उद्देश्यहरु राखिएको छन् । उल्लेखित उद्धेस्यहरु हासिल गर्नको लागि वनसम्बन्धी प्रादेशिक नीति, कानून र उपयुक्त संरचना बनाउने, विद्यमान वनक्षेत्र कायम राखी उत्पादकत्व वृद्धिका लागि वनको सहभागितामूलक, दिगो एवम् बैज्ञानिक व्यवस्थापन गर्ने, जैविक विविधता र जलाधारको दिगो व्यवस्थापन र उपयोगमा स्थानीय समुदायको पहूँच वृद्धि गर्ने एवम् पर्यापर्यटनका आधार क्षेत्रहरूलाई पुनस्स्थापना तथा पुनर्निर्माण गर्ने, जैविक विविधता र जलाधारको दिगो व्यवस्थापन र उपयोगमा स्थानीय समुदायको पहूँच वृद्धि गर्ने एवम् पर्यापर्यटनका आधार क्षेत्रहरूलाई पुनस्स्थापना तथा पुनर्सनिर्माण गर्ने र व्यक्तिगत र व्यावसायिक दुबै शैलीका वृक्षरोपण गरेर भूस्खलन नियन्त्रण र भूसंरक्षण गर्ने रणनीतिहरु आवधिक योजनाको मस्यौदामा समावेश गरिएको छ । योजनाको कार्यान्वयन भएपछि वनजंगलको आवश्यक र लक्षित अनुपातलाई कायम राख्दै वनजन्य उत्पादन बढेको हुने, चिडियाखाना स्थापना भएको हुने, प्राणी र वनस्पति उद्यान स्थापना भएका हुने र सडकहरूमा सौन्दर्यीकरण हुने जस्ता उपलब्धिको अपेक्षा आवधिक योजनाको मस्यौदाले गरेको छ ।पहिलो पटक प्रदेश

सरकारले आवधिक योजना बनाउदा वन क्षेत्रलाई समेट्नु राम्रो कुरा हो. तर पनि योजनाको मस्यौदालाई हेर्दा प्रदेश सरकारले लागु गर्न खोजेको योजना अमुर्त र परम्परागत देखिन्छ । योजनामा उल्लेख गरिएका रणनीति र कार्यक्रमहरु नेपाल सरकारले हालसम्म कार्यान्वयान गरेका योजनाहरुमा उल्लेखित कुरा भन्दा फरक भएको देखिदैन । वैज्ञानिक वन व्यवस्थापन, वन उद्यम, वृक्षारोपण, जैविक विविधता र जलाधार संरक्षण जस्ता कुराहरु नेपाल सरकारका विगतका योजनाहरुमा सधैं परेपनि उपलब्धि अति कम भएको देखिएको छ । यिनै कुराहरु प्रदेशको योजनामा दोहोरिदा प्रदेश योजनाकारहरुसंग प्रदेशको समृद्धिको लागि वनको कसरि उपयोग गर्ने दुर दृष्टि नभएको त हैन भन्ने शंका गर्नुपर्ने हुन्छ । यति हुदाहुदैपनि कृषि तथा वागबानी वनको अवधारणा अनुरुप वनमा आधारित उपभोग्य वस्तुहरू उत्पादन गर्ने, स्थानीय तह तथा निजीक्षेत्रसंगको समन्वयमा जैविक विविधता सम्बन्धी प्रादेशिक सङ्ग्रहालय, वनस्पति उद्यान र चिडियाखाना स्थापना गर्ने, वनहरूमा पर्यटन प्रवर्द्धन, जैविक विविधता र जलाधार संरक्षणका साथै सिमसार क्षेत्रको संरक्षण र प्रयोगलाई प्राथमिकता दिने, जडीबुटीको व्यावसायिक खेती तथा दिगो उत्पादनका लागि वनक्षेत्र लिजमा दिने व्यवस्था गरिने कुराहरु प्रदेशको धरातलीय अवस्था अनुसार उपयुक्त भएको मान्नु पर्छ ।

वन अतिक्रमण, वन पैदावारको चोरी निकासी, वनसम्मको पहुचमा कमि र वनको वैकल्पिक उपयोगमा कमि, वन पैदावारबाट न्यून आर्थिक लाभ प्राप्त हुनु जस्ता समस्याहरु प्रदेशको वन क्षेत्रले भोगिरहेको छ । संघीय वन नीतिले हरेक स्थानीय तहमा कम्तिमा १० प्रतिशत वन क्षेत्र हुनुपर्ने प्रस्ताव गरेको भएपनि प्रदेश नम्बर ५ को बाँकेमा ३, कपिलवस्तुमा ५, नवलपरासीमा ३ र रुपन्देहीमा ९ स्थानीय तह वनरहित भएको बताईन्छ । सिद्धार्थनगर, ल'म्बिनी संस्कृतिक नगरपालिकासहित मर्चवारी, रोहिणी, मायादेवी, कोटहीमाई, सियारीलगायत गाउँपालिकामा वनक्षेत्र शुन्य छ । कपिलवस्तुका पनि पुर्वपश्चिम राजमार्गबाहेक दक्षिणतिरका तौलिहवा, कृष्णनगर, महाराजगन्ज नगरपालिका सहित मायादेवी, यशोधरा, शुद्धोदनलगायत गाउँपालिकामा वन क्षेत्र शुन्य छ । यी स्थानीय तहमा कसरि वन विकास गर्ने ? त्यहाका बासिन्दाहरुलाई वनसम्मको पहुँच कसरि वृद्धि गर्ने जस्ता कुराहरुमा प्रदेश सरकारले विचार गर्नैपर्छ. । वृक्षारोपण, नदि उकास जग्गामा हरियाली प्रवर्द्धन, सडक हरियाली जस्ता कुराहरुले मात्र वन विकास र विस्तार नहुने भएकोले प्रदेश सरकारले आवधिक योजनामा यी क्षेत्रको लागि विशेष कार्यक्रम ल्याउने पर्छ ।

वनश्रोत सर्वेक्षण २०१४ का अनुसार वि.स. २०३५ देखि २०४८ सम्मको अवधिमा रुपन्देही जिल्लामा ३७ प्रतिशत, नवलपरासीमा २५ प्रतिशत र कपिलवस्तु जिल्लामा १४ प्रतिशत वन घटेको तथ्यांक छ । त्यस्तै वि.सं. २०५८-२०६८ को अवधिमा नवलपरासी र रुपन्देही जिल्लाको वन वार्षिक ०.१२ र ०.२१ प्रतिशतका दरले घटेको वन श्रोत सर्भेक्षण २०१४ ले देखाएको छ । नवलपरासीमा ४९१४हे., रुपन्देहिमा ८३४६ हे., कपिलवस्तुमा ६८५४ हे., दाङ्गमा २१०१ हे. बाँकेमा १७८० हे.र बर्दियामा ५६८ हे. वन अतिक्रमणमा परेको सरकारी तथ्यांक छ । यी जिल्लाहरुको शहरी क्षेत्र, मुख्य व्यापारिक थलो र राजमार्ग छेउछाउका वनजंगलहरुमा अचेल सुकुम्बासीका महलहरु ठडिएका छन् र दुरदराजका वन क्षेत्रमा पनि झुपडीहरु ठडिने काम रोकिएका छैनन् । वन अतिक्रमण खालि गरेर वन क्षेत्रलाई पूर्ववत अवस्थामा ल्याउनु तीनै तहका सरकारको लागि फलामको च्युरा चपाउनु सरह हो । यसो भन्दैमा वन अतिक्रमणमा सरकार मौन बस्न भने कदापि मिल्दैन । प्रदेशको योजनाको नस्यौदामा वन अपराधका कृयाकलाप नियन्त्रण गर्न आवश्यककानून तथा संयन्त्र तयार गरिने बुंदा समावेश गरिएको भएपनि वन अतिक्रमण विरुद्ध कस्तो रणनीति अपनाउने भन्ने कुरा उल्लेख नहुनुले प्रदेश सरकार अतिक्रमणकारिलाई बेखुशी राख्न नचाहेको जस्तो देखिएको छ ।

आवधिक योजनाको मस्यौदामा वैज्ञानिक वन व्यवस्थापनलाइ प्राथमिकतामा राखेको देखिन्छ । केहि स्वार्थ समुहको इच्छा अनुसार निकै हतारमा ल्याइएको यो कार्यक्रमले उपलब्धि दिने भन्दापनि जैविक विविधता विनास गरिरहेको गुनासो आइरहेको समयमा यहि पद्धतिले प्रदेश सरकारले समेत वन व्यवस्थापन गर्न खोज्नुलाइ दिर्घकालिन दृष्टिले राम्रो भन्न मिल्दैन । यो योजनाको मस्यौदामा जलवायु अनुकुलन वन व्यवस्थापन, वातावरणिय सेवाका लागि भुक्तानी, वन्यजन्तु-मानव द्वन्द व्यवस्थापन जस्ता नविनतम तर दिर्घकालिन महत्वका मुद्धाहरु समेटिन सकेका छैनन् । त्यसैगरी योजनाका उद्धेश्य, रणनिति र कार्यनितिहरुमा समेत केहि बेमेल देखिएको छ । खासगरी रणनीति ३, रणनीति ४ र ५ संग तिनीहरुका कार्यनीतिहरु नमिल्दो र अस्पष्ट भएकोले आवधिक योजनालाई पूर्णता दिदा यसलाई सच्याउनुपर्ने देखिएको छ ।

नेपालका पछिल्ला ५ दशकका सरकारी नीति, रणनीति र कार्यक्रमहरु हेर्दा वनलाई आर्थिक विकासको आधार बनाइ रोजगारी वृद्धि गर्ने र यसैको माध्यमबाट गरिवी निवारण गर्ने कुरा गर्न कुनै पनि सरकार चुकेको छैन । हरेक सरकारले आवधिक योजनामा वन सम्बन्धि कुनै न कुनै नयाँ कार्यक्रमहरु ल्याइरहेका हुन्छन तर धेरैजसो त्यस्ता कार्यक्रमहरु फाईल भन्दा बाहिरै निस्कन सक्दैनन् ।

समुदायको सहभागिता हुने सामुदायिक वन कार्यक्रमा बाहेक अरु सरकारी कार्यक्रमहरु प्रभावकारी ढंगले कार्यान्वयनमा आउन सकेका छैनन् । यसो हुनुको मुख्य कारण स्थानीय अवस्था र संभावना भन्दापनि दातृ निकायको चाहनाबाट निर्देशित भएर वन सम्बन्धि कार्यक्रमहरु बनाउनु नै मुख्य कारण हो । वनलाई कृषिसंग जोडेर कार्यक्रमहरु संचालन गर्ने, वन पैदावार र जडिबुटीको उत्पादन र संकलन सम्बन्धि परम्परागत पेशाको आधुनिकीकरण, वन पैदावारको बजारीकरण र विदेश निर्यातमा सरलीकरण, समुदायलाई वनको वैकल्पिक प्रयोग गरि आयआर्जनको अवसर प्रदान गर्ने , काठपातको विक्री गरेर आम्दानी बढाउने भन्दापनि गैह्रकाष्ठ प्रजातिका वनस्पतिजन्य उत्पादनमा जोड दिने, पर्या-पर्यटन कार्यक्रम संचालन गर्ने, वैज्ञानिक वन व्यवस्थापन भित्र जलश्रोत र जैविक विविधताको संरक्षण गर्दै बहुपक्षीय पर्या-पर्यटन जस्ता कार्यक्रमलाई प्रदेश सरकारले आवधिक योजनामा समावेश गरेर स्थानीय सरकार र समुदायको सहभागितामा संचालन गर्न सकियो भने मात्र वनबाट रोजगारी र आर्थिक समृद्धि हासिल हुन र वातावरण संरक्षण हुन सक्नेछ, अन्यथा प्रदेश सरकारका वन सम्बन्धि योजनाहरु पनि विगतका नेपाल सरकारका कागजमा मात्र सिमित रहने र वनश्रोतहरु खेर गैरहने कार्यले निरन्तरता पाइरहनेछ ।

Forests in Periodic Plan of Province 5

Yubaraj Kandel

*Province 5 has recently unveiled its inaugural periodic plan, with a strong emphasis on the forest sector. It is commendable that the provincial government has prioritized the forest sector in its planning efforts. However, upon reviewing the draft of the plan, it appears to be lacking in innovation and originality. The strategies and programs outlined in the plan seem to mirror those of previous plans implemented by the Government of Nepal. While concepts such as scientific forest management, forest enterprise, tree plantation, biological diversity, and watershed protection have been consistently included in past government plans, the actual achievements in these areas have been minimal. If these same concepts are simply regurgitated in the provincial plan, one must question whether the planners lack a clear vision for leveraging the forest sector to drive prosperity in the province. It is imperative that the provincial government reevaluate its approach and consider more innovative and effective strategies for harnessing the potential of the forest sector. By thinking outside the box and exploring new avenues for sustainable forest management and utilization, Province 5 can truly unlock the economic and environmental benefits that forests have to offer.*

| ५ नं.प्रदेशको आवधिक योजनाको मस्यौदामा वन | |
|---|---|
| रणनीति | कार्यनीति |
| १. वनसम्बन्धी प्रादेशिक नीति, कानून र उपयुक्त संरचना बनाउने । | १.वन नीति, वातावरण नीति र वन तथावातावरण सम्बन्धी आवश्यक प्रादेशिक कानूनको तथा नीति नियम निर्माण गरिनेछ ।<br>२. प्रदेश अन्तर्गतका वनहरूको लगत तयार पारिनेछ।<br>३.वन अपराधका कृयाकलाप नियन्त्रण गर्न आवश्यक कानून तथा संयन्त्र तयार गरिनेछ। |
| २.विद्यमान वनक्षेत्र कायम राखी उत्पादकत्व वृद्धिका लागि वनको सहभागितामूलक, दिगो एवम् बैज्ञानिक व्यवस्थापन गर्ने । | १.सामुदायिक, कबुलियती, साझेदारी र निजी वनको दिगो तथा वैज्ञानिक व्यवस्थापन मार्फत वनजन्य उत्पादन बढाई वनको अधिकतम उपयोग गरिनेछ।।<br>२.कृषि तथा वागबानी वनको अवधारणा अनुरुप वनमा आधारित उपभोग्य वस्तुहरू उत्पादन गरिनेछ ।<br>३. फर्निचर उद्योग र घर निर्माणका लागि आवश्यक काठहरू व्यवस्थित ढंगले उपलब्ध गराइनेछ।<br>४.वन र वातावरणसम्वन्धी अनुसन्धानलाई जोड दिइनेछ।<br>५.वन डढेलो नियन्त्रण गर्न अग्नि रेखा बनाउने र नियन्त्रित जलान गर्ने काम गरिनेछ। |
| ३. जैविक विविधता र जलाधारको दिगो व्यवस्थापन र उपयोगमा स्थानीय समुदायको पहूँच वृद्धि गर्ने एवम् पर्यापर्यटनका आधार क्षेत्रहरूलाई पुनस्स्थापना तथा पुनर्सनिर्माण गर्ने। | १.स्थानीय तह तथा निजीक्षेत्रसंगको समन्वयमा जैविक विविधता सम्बन्धी प्रादेशिक सङ्ग्रहालय, वनस्पति उद्यान र चिडियाखाना स्थापना गरिनेछ।<br>२.उपयुक्त वनहरूमा पर्यटन प्रवर्द्धन, जैविक विविधता र जलाधार संरक्षणका साथै सिमसार क्षेत्रको संरक्षण र प्रयोगलाई प्राथमिकता दिइनेछ।<br>३.प्रदेशस्तरमा संरक्षण क्षेत्र र चरन क्षेत्रको व्यवस्थापन गरिनेछ।<br>४. नगर र नगर वरिपरिका वन, हरियाली, सिमसार, पानीका मुहान, खाली क्षेत्र, नदीतटको उचित व्यवस्थापन गरिनेछ ।<br>५.आकर्षक विरुवाहरू रोपेर शहरी क्षेत्र तथा सडकको सुन्दरता बढाइनेछ।<br>६. नाङ्गा डांडा र खाली भूभागमा व्यक्तिगत र व्यावसायिक दुबै तरीका अपनाई वृक्षरोपण गरी वनको प्रवर्द्धन गरिनेछ। |
| ४. जलवायू परिवर्तनलाई मध्यनजर राख्दै वातावरण संरक्षण गर्ने । | १. प्रदेशमा उपलब्ध तालतलैयाहरू संरक्षण र सम्वर्द्धन गरिनेछ ।<br>२. जैविक प्रविधिको प्रयोग गरी जैविक विविधताको संरक्षणसंगै मूल्यबान रसायनहरूको उत्पादन सुरु गरिनेछ । |
| ५.व्यक्तिगत र व्यावसायिक दुबै शैलीका वृक्षरोपण गरेर भूस्खलन नियन्त्रण र भूसंरक्षण गर्ने । | १.भूक्षय भएको ठाउँ लगायत अन्य उपर्युक्त स्थानहरूमा अभियानको रुपमा वृक्षरोपण गरिनेछ।<br>२. राष्ट्रिय तथा प्रादेशिक प्राथमिकता प्राप्त आयोजनाहरू वनक्षेत्रमा सचालन हुने अवस्थामा वातावरणीय प्रभावको मूल्याङ्कन गरी त्यसको प्रतिवेदन कार्यान्वयनलाइ अनिवार्य गरिनेछ । |

बुटवल टुडे, ८ जेठ २०७६ (22 May 019)

# दक्षिण तराईमा वन उपलब्धता, समस्या र वन विकासका उपायहरु

Forest Availability, Problems and Solutions of Forest Development in Southern Terai

युवराज कंडेल

*तराई हराभरा रहन सकेन भने उत्पादनशील र बहुसाँस्कृतिक तराईलाई जोगाईरहन पनि सकिनेछैन । तराईको प्रकृति, जीवन , सस्कृति र पर्यटनसंग वनको अतुलनीय सम्बन्ध छ, जसलाई जोगाईराख्नको लागि तराईका दक्षिणी क्षेत्रलाई हराभरा बनाउन ढिला गर्नुहुदैन । खाली ठाउँ, नदि उकास जग्गा, पर्ती जग्गा र सार्वजनिक तथा निजि जग्गामा वृक्षारोपण गरि रुख हुर्काउन स्थानीय सरकारले नागरिकलाई सहयोग गर्नुपर्छ । उत्तरी क्षेत्रमा रहेका सामुदायिक वन समुहहरुले पनि आफ्नो आम्दानीको केहि हिस्सा दक्षिणी तराईका गाउँवस्तिमा वन विकास गर्ने कार्यमा लगानी गर्नुपर्छ ।*

तराईको मुख्य पहिचान नै यहाँको वनजंगल हो । मलेरिया र गर्मीको कारणले कालापानीको रुपमा चिनिने तराईमा मानिसहरुको बसोबास कम हुदासम्म तराईको वनले नेपालको वनको मुख्य हिस्सा ओगटेको थियो । मलेरिया नियन्त्रण कार्यक्रम र तराईमा महेन्द्र राजमार्गको निर्माणपछि तराईमा बसाई सराई र वस्ती विकासले तिब्रता पाउन थाल्यो र त्यो संगै तराईको वन तीव्र रुपमा विनास हुदै जान थाल्यो । वि.स. २०६८ सालमा नेपालको तराईको कूल क्षेत्रफलको २०.८८ प्रतिशत भूभागमा मात्र वन सिमित हुन पुगेको सरकारी प्रतिवेदनले देखाउछन् । अहिले नेपालको ६.९ प्रतिशत वन र १.४७ प्रतिशत बुट्यान मात्र तराईमा रहेको छ । तराईमा रहेको अधिकांश वन पनि राष्ट्रिय निकुन्ज र मध्यवर्ती क्षेत्रमा मात्र खुम्चिएको छ ।

लुम्बिनी प्रदेशको तराई क्षेत्र ५ दशक अघिसम्म घना वन भएको क्षेत्रमा परिचित थियो । धेरैजसो स्थानमा चुरेदेखी भारतीय सिमानासम्म फैलिएका वनक्षेत्रहरु रहेका थिए । वि.स. २०२० को दशकमा यहाँको तराईमा पनि मानिसहरुको चाप बढ्न थाल्यो, जसले गर्दा यहाँको वन विनासको दर पनि तीव्र हुन थाल्यो । वि.स. २०३४- २०४८ को अवधिमा मात्र रुपन्देही, नवलपरासी र कपिलवस्तु जिल्लाको वन क्षेत्रफल क्रमश ३७ प्रतिशत, २५ प्रतिशत र १४ प्रतिशतले घटेको थियो । सोहि अवधिमा बर्दिया बाँके र दाङको वन क्षेत्र १२ प्रतिशत, १३ प्रतिशत र ४ प्रतिशतले घटेको सरकारी तथ्यांक छ । अहिले लुम्बिनी प्रदेशका नवलपरासीमा २१९२७ हेक्टर, रुपन्देहीमा २५५०८ हे., कपिलवस्तुमा ६०९६९ हे. दांगमा २००७२५ हे., बाँकेमा ११७९०९ हे. र बर्दियामा ११३६८७ हे वन रहेको छ । तराईको वन अहिले महेन्द्र राजमार्गको छेउछाउमा मात्र खुम्चिएको छ । महेन्द्र राजमार्गदेखि टाढा रहेका लुम्बिनी प्रदेशका ९ वटा पालिकाहरु वनरहित छन् भने ४ वटा पालिकामा १० हेक्टर भन्दा कम वन छ । यसैगरी ५ वटा पालिकामा ११ देखि ५० हेक्टरसम्म वन छ । १०० हेक्टर भन्दा बढी वनक्षेत्र रहेका तराईका १२ वटा पालिकाहरुमा ति पालिकाको कूल भूभागको १५ प्रतिशत भन्दा कम भाग मात्र वनले ओगटेको देखिन्छ । यी तथ्यहरुलाई हेर्दा लुम्बिनी प्रदेशका दक्षिणी क्षेत्रहरु वन विहिन हुदै गएको प्रष्ट देखिन्छ ।

४ दशक अघिसम्म रुपन्देही जिल्लाको मर्चवार क्षेत्र बाहेक लुम्बिनी प्रदेशका दक्षिणी सीमामा अवस्थित सबै बस्तीका बासिन्दाहरु १० किमिको सेरोफेरोमा वन उपलब्ध थियो । तराईमा बसाईसराई बढ्ने क्रम संगै दक्षिणी क्षेत्रमा वनहरू नयाँ वस्तीमा परिणत भए र वन उत्तरमा मात्र सिमित रहन पुग्यो । जिल्लाका मध्ये क्षेत्रमा रहेका वनहरू पनि वन छेउका नयाँ वासिन्दाहरुको कब्जामा पुग्यो ।

| वनको क्षेत्रफल | पालिकाहरु |
|---|---|
| वन नभएका पालिकाहरु | कपिलवस्तु- यशोधरा, शुद्धोधन, कृष्णनगर<br>रुपन्देही- लुम्बिनी साँस्कृतिक, कोटईमाई, सम्मरिमाई मायादेवी मर्चवारी<br>बाँके- जानकी |
| १० हेक्टर भन्दा कम | कपिलवस्तु- महाराजगंज<br>नवलपरासी प.- पाल्हिनन्दन र प्रतापपुर<br>रुपन्देही- ओमसतिया |
| ११ देखि ५० हेक्टर | नवलपरासी प.- रामग्राम<br>कपिलवस्तु- मायादेवी<br>रुपन्देही - रोहिणी ,शुद्धोधन ,सिद्धार्थनगर |
| १०० हेक्टर भन्दा बढी वन भएका तर पालिकाको कूल क्षेत्रफलको १५ प्रतिशत भन्दा कम क्षेत्र मात्र वनले ढाकेका पालिकाहरु | नवलपरासी (प.)- सुस्ता , सरावल<br>रुपन्देही- तिलोत्तमा , सियारी, गैंडहवा<br>कपिलवस्तु- कपिलवस्तु, महाराजगंज<br>बाँके- खजुरा, नेपालगंज उमनपा<br>बर्दिया- राजापुर, गुलरिया |

सामुदायिक वन समुह गठन गर्दा तराईका दक्षिणी क्षेत्रका परम्परागत वन उपभोक्ताहरु वनबाट विमुख हुन पुगे । आफ्नो वस्तीको नजिक वन नभएको र उत्तरी क्षेत्रमा रहेको वनमा पहुँच नभएकोले गर्दा वन श्रोतको प्रयोग गरेर गर्नुपर्ने सामाजिक-सास्कृतिक व्यवहारहरु प्रत्यक्ष प्रभावित भएका छन् । खासगरी जल, जमिन र जंगलसंग अभिन्न सम्बन्ध भएका थारुजातिका दैनिकी र सस्कृति खलबलिएको छ र वनसंग नजिक रहेका थारुहरु थातथलो छोड्नुमा वनमाथिको पहुँच कम हुनु पनि मुख्य कारण देखिन्छ । पालिकामा वन नहुदा र भएको वनमा पनि आवस्यक वन पैदावार नपाउदा घर निर्माण र खाना पकाउन समस्या परेको छ । दाउरा नभएकोले गोबरलाई गुँइठा बनाएर खाना पकाउनुपर्ने बाध्यता छ । मध्य र दक्षिणी तराईमा वन नहुदा जमिन मरुभूमिकरणको चपेटामा परिरहेको छ भने पानीका श्रोतहरु सुख्खा भैरहेका छन् । वन नहुदा पशुपालनमा समस्या भैरहेको छ । काठ दाउराको कमीले गर्दा विगतमा तराईमा पुर्खाले हुर्काएका आँप र अन्य वनस्पतिका बगैंचाहरु मासिने क्रम बढिरहेको छ । लुम्बिनी, रामग्राम, कुदान, निग्लिहवा जस्ता बौद्ध भूमिमा वन नहुदा आध्यात्मिकता विकास र पर्यटनमा नकारात्मक असर परिरहेको छ । अहिले प्रदेशको तराई क्षेत्रमा उद्योग संचालनमा तीव्रता आएको छ । वन नहुदा उद्योगको कारण हुने प्रदुषित वायु टाढासम्म फैलिदा सम्पूर्ण तराईकै वायु अस्वस्थकर बन्ने क्रमले तीव्रता लिएको देखिन्छ ।

प्रदेशको दक्षिणी क्षेत्रमा वनजंगल नहुदा यहाँको पछिल्लो पुस्ताले वन, वनस्पति र जीवजन्तुहरु नचिन्ने अवस्था आईसकेको छ । दक्षिणी भूभागमा वन नहुदा महेन्द्र राजमार्गको छेउछाउमा सिमित वनमा पनि अत्यधिक चाप परिरहेको छ । वनको अभावले गर्दा सामाजिक, आर्थिक, पर्यावरणीय र कृषि क्षेत्रमा विभिन्न किसिमका असरहरु बढिरहेकोले संरक्षणकर्मी र सरकारले तराईका दक्षिणी क्षेत्रका पालिकाहरुमा कसरि वन विकास गर्ने भन्ने कुरामा ध्यान दिनु जरुरि भैसकेको छ । वन नभएका स्थानमा अब सयौ हेक्टरका नया वन विकास गर्न सकिदैन, तर पालिकामा रहेका अनुत्पादक र अतिक्रमणको चपेटामा परेका क्षेत्रमा पालिकाले सानो क्षेत्रफलका वनहरू बनाउन सक्छ । तराईमा विगतमा फैलिएर बग्ने नदि र घोलाहरु खुम्चिएका छन् । नदीले छोडेको भूभागमा

अहिले अतिक्रमण तीव्र छ । यस्तो नदि उकास जग्गालाई तारबार गरेर पनि रुख बिरुवाहरु हुर्काएर वन बनाउन सकिन्छ । कुलो/ नहरका डिल, सडक किनारामा रुखहरु हुर्काएर पनि पालिकालाई हराभरा बनाउन र स्थानीयलाई काठपात, घाँस, स्याउला, दाउरा उपलब्ध गराउन सकिन्छ ।

तराईका जिल्लाका दक्षिणी पालिकाहरुमा उपयोगमा नल्याई खेर गएका प्रसस्त निजि जग्गाहरु छन् । यस्ता जग्गामा निजि वन र कृषि वन बनाउन सकिन्छ । वन क्षेत्रको रणनीति २०१६- २०२५, वन नीति २०७५, कृषि वन नीति २०७६ र वन ऐन २०७६ ले कृषि वन र निजि वन विकासको लागि आर्थिक र प्राविधिक सहयोग गर्ने रणनीति अवलम्बन गरेका छन् । लुम्बिनी प्रदेशको पहिलो आवधिक योजनाले पनि पालिकाहरुको सहयोगमा वन नभएका क्षेत्रमा अनुकूलता हेरी विभिन्न किसिमका वन विकास गर्ने नीति अवलम्बन गरेको छ । लुम्बिनी प्रदेश सरकार, वन तथा वातावरण मन्त्रालयको चालु आ.ब. को कार्यक्रममा कृषि वन तथा वृहत्तर हरियाली प्रवर्द्धन कार्यक्रम अन्तर्गत एक पालिका : एक वन नर्सरी निर्माण तथा संचालन कार्यक्रम राखिएको छ । यस कार्यक्रम अन्तर्गत पालिकाहरुलाई नर्सरी स्थापना गर्नको लागि प्रदेश सरकारले आर्थिक र प्राविधिक सहयोग दिने उल्लेख छ । यसैगरी वन कम भएका शहरी क्षेत्रमा "एक घर दुई वृक्ष , शहर हाम्रो बनाउँ स्वच्छ" कार्यक्रम पनि अघि सारिएको छ । यसले वन कम भएको स्थानमा हरियाली प्रवर्द्धन गर्न मद्दत पुग्ने देखिन्छ । प्रदेश सरकार वन मन्त्रालयले " एक पालिकाः एक नमूना कृषि वन" कार्यक्रम अघि सारेको छ ।

तराईका ६ जिल्लाका प्रत्येक पालिकामा कम्तिमा ५ हेक्टर निजि जग्गामा वन विकास गर्न आर्थिक र प्राविधिक सहयोग गर्ने वार्षिक कार्यक्रममा उल्लेख छ । पहिलोपटक सुरु गर्न लागिएको यो कार्यक्रमले निरन्तरता पाउने र नागरिकले उचित प्रोत्साहन पाउने हो भने कृषि वन कार्यक्रम र निजि वन कार्यक्रमबाट तराईलाई हराभरा बनाउन र वन सम्बन्धि आवस्यकताहरु परिपूर्ति गर्न सकिनेछ ।

तराईका चारकोशे झाडी अब एकादेशका कथा भैसकेका छन् । ति वन अब फर्काउन सकिदैन । तराई हराभरा रहन सकेन भने उत्पादनशील र बहुसाँस्कृतिक तराईलाई जोगाईरहन पनि सकिनेछैन । तराईको प्रकृति, जीवन , सस्कृति र पर्यटनसंग वनको अतुलनीय सम्बन्ध छ, जसलाई जोगाईराख्नको लागि तराईका दक्षिणी क्षेत्रलाई हराभरा बनाउन ढिला गर्नुहुदैन । खाली ठाउँ, नदि उकास जग्गा, पर्ती जग्गा र सार्वजनिक तथा निजि जग्गामा वृक्षारोपण गरि रुख हुर्काउन स्थानीय सरकारले नागरिकलाई सहयोग गर्नुपर्छ । उत्तरी क्षेत्रमा रहेका सामुदायिक वन समुहहरुले पनि आफ्नो आम्दानीको केहि हिस्सा दक्षिणी तराईका गाउँवस्तिमा वन विकास गर्ने कार्यमा लगानी गर्नुपर्छ । अहिले वनदेखी टाढा रहेका दक्षिणका परम्परागत उपभोक्तालाई उत्तरका वनमा सहज पहुँच र सुविधा दिएर वन खोसेको क्षतिपूर्ति दिनुपर्छ । तराईको प्रकृति, माटो र जीवन जोगियो भने मात्र नेपालमा आर्थिक-सामाजिक समृद्धि सम्भव हुनेछ । यो कुरा तीनै तहका सरकार, स्थानीय वासिन्दा र संरक्षणकर्मिहरुले बेलैमा बुझ्नु जरुरी छ ।

बुटवल टुडे, ३ चैत्र २०७९ बाट

# Forest Availability, Problems and Solutions of Forest Development in Southern Terai

**Yubaraj Kandel**

Up until four decades ago, forests were readily available within a 10-kilometer radius for residents of all settlements along the southern border of Lumbini province. However, due to increased migration in the Terai region, these forests were gradually converted into new settlements, pushing the forests further north. As a result, the traditional forest users in the southern Terai were marginalized, leading to a significant impact on their socio-cultural practices related to forest resource utilization.The lack of access to nearby forests has forced communities, such as the Tharus, who have historically relied on forest resources, to abandon their traditional ways of life. This has created challenges in building homes and cooking food, as firewood is scarce, forcing residents to resort to using dung as fuel. The absence of forests in the central and southern Terai has also contributed to desertification, dwindling water sources, and hindrances in animal husbandry. Furthermore, the depletion of forests has led to the destruction of mango and vegetable gardens that were once cultivated by ancestors in the region. The absence of forests also poses a threat to air quality, as industrial pollution spreads unchecked without the natural filtration provided by trees. This deterioration in air quality could have far-reaching health implications for residents across the entire Terai region.To address these challenges, municipalities can play a crucial role in creating small forested areas in unproductive or encroached lands. By planting trees along riverbeds, canals, roadsides, and unused private lands, municipalities can not only enhance the greenery of the area but also provide valuable resources such as wood, grass, and firewood to local communities. This proactive approach to reforestation can help mitigate the adverse effects of deforestation and promote sustainable practices for future generations to come.

# नगर विस्तारको चपेटामा तराईको वन

Terai forest shrinking due to urban expansion

युवराज कंडेल

*नया नगरपालिकाहरुको घोषणा संगै सुकुम्बासी वस्तीहरुमा विकास निर्माणका कार्यहरु मा तिव्रता आएको छ , जसले वन व्यवस्थापनमा कडा चुनौती थप्दै गएको छ । वन संरक्षणलाई ख्यालै नगरी अन्धाधुन्द बस्तीहरुलाई नगरपालिका घोषणा गर्दै जाने र वन भित्र बनेका बस्तीहरुमा सहरी पूर्वाधार थप्दै जाने गर्दा गैडाकोट देखि भालुबांग सम्मको जैविक मार्ग खण्डखण्ड हुने निश्चित देखिएको छ । अहिले त सुकुम्बासी हटाएर वन क्षेत्र फिर्ता ल्याउन र वन पुनरुत्थान गर्न कठिन भैरहेको बेलामा सुकुम्बासी वस्तीहरु नगर क्षेत्रमा रुपान्तरण भैसकेपछि यि कामहरु गर्ने कल्पना पनि नगरे हुन्छ ।*

लुम्बिनी अंचलका तराइका तीन जिल्लाहरु नवलपरासी, रुपन्देही र कपिलवस्तुलाइ आर्थिक , सामाजिक र सामरिक दृष्टिमा नेपालको महत्वपूर्ण क्षेत्र मानिन्छ । बुटवल भैरहवा ,तौलिहवा जस्ता पुराना ब्यापारिक केन्द्रहरु, तिलौराकोट ,लुम्बिनी र रामग्राम जस्ता सांस्कृतिक केन्द्रहरु , प्रसस्त खेतीयोग्य जमिन र घना वस्तीहरुले गर्दा यो क्षेत्र नारायणी नदि पश्चिमकै महत्वपूर्ण ठाउँ बनेको छ । यी तीन जिल्लाहरु नेपालकै तिव्र शहरीकरण भएका जिल्लाहरु बन्न पुगेका छन । अघिल्लो वर्षसम्म ४ वटा नगरपालिका मात्र रहेको लुम्बिनी अन्चलको तराइमा अहिले एउटा उप महानगरपालिका र १६ वटा नगरपालिकाहरु बनेका छन । नगरपालिकामा बसोबास गर्ने जनसंख्याको अनुपात हेर्ने हो भने यो क्षेत्र पश्चिम नेपालकै बढी शहरी जनसंख्या भएको क्षेत्र बन्न पुगेको छ ।

लुम्बिनी अंचलको शहरी जनसंख्या १० लाख २७ हजार ९३४ रहेको छ र लुम्बिनी अंचलको कूल शहरी जनसंख्याको ४३.२६ प्रतिशत जनसंख्या रुपन्देहीमा रहेको छ । यहाको एउटा उपमहानगरपालिका र पाँच वटा नगरपालिकामा ४ लाख ४४ हजार ६९६ मानिस बसोबास गरेको पाइन्छ । त्यस्तै लुम्बिनी अंचलको शहरी जनसंख्याको २३.७१ प्रतिशत जनसंख्या नवलपरासी जिल्लामा र २० प्रतिशत जनसंख्या कपिलवस्तु जिल्लामा रहेको छ । पुराना र नया नगरपालिकाको आधारमा जनसंख्या विश्लेÈण गर्दा सबैभन्दा बढी शहरीकरण रुपन्देही जिल्लामा भएको पाइन्छ । रुपन्देहीको आधा भन्दा बढी जनसंख्या (५०.५२%) जनसंख्या ६ वटा नगरपालिकामा छन । त्यसैगरि नवलपरासी र कपिलवस्तुमा शहरी जनसंख्या क्रमसः ३७.९ र ३६ प्रतिशत रहेको छ ।

कपिलवस्तुको कृष्ण नगर नगरपालिका बाहेक नया सबै नगरपालिकाहरु महेन्द्र राजमार्गको छेउछाउमा रहेका छन । गैडाकोट देखि शिवपुरगढी सम्मको करिव २ सय किमी को विचमा मात्र पछिल्लो पटक १२ वटा नगरपालिकाहरु थपिएका छन । पाँच दशक अघि फर्कने हो भने अहिले नगरपालिका बनेका सबै क्षेत्रहरु घना जंगल भएका क्षेत्रहरु हुन । अहिले बनेका सबै नगरपालिकाहरु तिव्र बसाइसराइको कारणले उच्च जनसंख्या चापको कारणले घना बस्ती बन्दै गएर नगरपालिका बनेका हुन । महेन्द्र राजमार्गको निर्माण संगै वन फडानी गरि बस्न सुरु भएका वस्तीहरु नै

आज नगरपालिका बन्न पुगेका हुन । अहिले नगरपालिका भएको क्षेत्रमा २०२० को दशक सम्म घना वनजंगलले ढाकेको देख्नेहरु यहाको गाउ सहरमा धेरै छन । मलेरिया उन्मुलन र राजमार्गहरुको निर्माण पनि तराईमा बसाइ सराइ तिव्र हुदै जादा यहाको वन पातलिने र खुम्चने क्रममा तिव्रता आयो, जसको फलस्वरुप अहिले महेन्द्र राजमार्गको छेउछाउ र चुरे पहाडमा मात्र तराईको वन सिमित हुन पुगेको छ । वि.सं. २०२०को दशकमा घना जंगल भएका अधिकांश क्षेत्रहरुमा अहिले घना वस्ती र बजारहरु बनेका छन भने सरकारी रेकर्डमा वन छ भनिएका क्षेत्रहरुमा पनि सुकुम्बासी वस्ती भरिएका छन ।

तराइका यी तीन जिल्लाहरुको वन मासिने क्रम मलेरिया उन्मुलन कार्यक्रम संगै सुरु भएको भएपनि महेन्द्र राजमार्गको निर्माण पछि वन फडानीले तिव्रता पाएको हो । वि.सं. २०२०-३० को अवधिमा छिटफुट रुपमा भएको वन विनास २०३०-२०४० को दशकमा आइपुग्दा समुहगत र रोक्नै नसकिने हुन पुगेको थियो । वि.स. २०३५ देखि २०४८ सम्मको अवधिमा रुपन्देही जिल्लामा ३७ प्रतिशत, नवल परासीमा २५ प्रतिशत र कपिलवस्तु जिल्लामा १४ प्रतिशत वन घटेको तथांक छ । पंचायत ढल्ने बित्तिकै राजनैतिक अस्थिरताको फाइदा उठाउदै वन फडानी गर्ने र वस्ति बसाल्ने काम राजनैतिक दल र तिनीहरुको अगुवाको आडमा भएको थियो । २०४८ साल पहिले मासिएका वन क्षेत्रमा सुकुम्बासीको नाममा धेरैले लालपुर्जा समेत पाइसकेका छन र त्यस्ता क्षेत्रहरु अहिले घना वस्ति बनिसकेका छन । वि.सं.२०४८ देखि माओबादी द्वन्द चरम अवस्थामा पुग्दा सम्म ( २०५८) यी जिल्लाहरुको वन विनासमा केहि कमि आएको देखिन्छ । वन विभागका अनुसार त्यो अवधिमा रुपन्देही जिल्लाको वन वाÉिक ०.२६ प्रतिशतका दरले घटेको थियो । माओबादी द्वन्द चरमोत्कÉमा पुगेको र वन कर्मचारी र सुरक्षाकर्मीहरु वन क्षेत्रमा जान डराएको अवस्थामा पहाडका विभिन्न जिल्लाबाट बिस्थापित भएर आएकाहरुले पनि सुरक्षित आश्रय र जीविकोपार्जनको लागि तराईकै वन जंगलहरु रोजे भने तराइका पुराना बासिन्दाहरुले पनि मौकाको फाइदा उठाउदै वन अतिक्रमणलाई निरन्तरता भने दिएको देखिन्थ्यो । माओबादी शान्ती प्रक्रीयामा आएपछी त झन माओबादीको आडमा महत्वपूर्ण नाका, आर्थिक महत्वका क्षेत्र र नगरोन्मुख क्षेत्रका वनहरु रातारात मासेर प्लटिंग गर्ने र बेच्ने क्रम चल्यो । फल स्वरुप नारायणी देखि राप्ती सम्म राजमार्गका छेउछाउमा सामुदायिक वन भएका ठाउमा बाहेक अन्यत्र वन मासिएर ठुला र रहरलाग्दा वस्तीहरु बनेको सहजै देख्न सकिन्छ । वि.सं. २०५८-२०६८ को अवधिमा नवल परासी र रुपन्देही जिल्लाको वन वार्षिक ०.१२ र ०.२१ प्रतिशतका दरले घटेको वन श्रोत सर्भेक्षण २०७१ ले देखाएको छ । रुपन्देही जिल्लामा सबै भन्दा धेरै वन विनाश साबिकका मक्रहर , केरवानी, देवदह , दुधराक्ष ,पर्रोहा , गजेडी र रुद्रपुर गाविस मा भएको देखिन्छ । रुद्रपुर र गजेडी बाहेक वन विनास भएर बनेका सबै सुकुम्बासी वस्तीहरु अहिले नगरपालिका बनेका छन । नवलपरासीको सुनवल, बर्दघाट, गैडाकोट र कपिलवस्तुका शिवराज, बाणगंगा र बुद्ध बाटिका नगरपालिकामा धेरै वस्तीहरु सरकारी रेकर्डमा अहिलेपनि वन क्षेत्रमा नै रहेका छन ।

तीन महिना अघि सुकुम्बासी समस्या समाधान आयोगमा परेका निवेदनहरुलाई आधार मान्दा रुपन्देही, नवलपरासी र कपिलवस्तु जिल्लामा सुकुम्बासी परिवारको संख्या क्रमसः ३५०६, ८७८० र ६७१६ तथा अव्यवसथित बसोबासी परिवारको संख्या २४६८१, २३१९४ र १४५३३ रहेको छ । रुपन्देही जिल्लाका सुकुम्बासी र अव्यवस्थित बसोबासी परिवार मध्ये लगभग ८० प्रतिशत परिवार बुटवल , देवदह , सैनामैना र तिलोत्तमा नगरपालिकामा रहेका छन। रुपन्देहीका तिलोत्तमा र देवदह नगरपालिका, नवल परासीको सुनवल, र कपिलवस्तुका शिवराज, बाणगंगा र बुद्ध

बाटिका नगरपालिकाका केहि वडाहरु त पूर्ण रुपमा वन क्षेत्र भित्रै रहेका छन ।

लुम्बिनी अंचलका तराइमा रहेका १७ मध्ये १२ वटा नगरपालिकाहरुमा वन फडानी र सुकुम्बासी समस्या धेरै भएको देखिन्छ । यी सबै नगरपालिकाहरुको उत्तरी सिमाना चुरे क्षेत्र सम्म फैलिएको छ जुन क्षेत्र जैविक विविधताको दृष्टिले महत्वपूर्ण र प्रकोपको दृष्टिमा जोखिम पूर्ण क्षेत्र मानिन्छ । यहाँ रहेको वन जंगलले चितवन राष्ट्रिय निकुन्जलाई दांगको राप्ती नदि क्षेत्रहुदै बाके राष्ट्रिय निकुन्जसंग जोड्ने भएकोले यो एक प्रमुख जैविक करिडोर को रुपमा रहेको छ । यो जैविक मार्गमा अहिले ठुलाठुला वस्ति र नगरपालिकाहरु बनेकोले जीवजन्तु ओहोरदोहोर गर्ने यो मार्ग टुकिएको छ । पछिल्लो समयमा महेन्द्र राजमार्गको छेउछाउ रहेका जंगलहरु सामुदायिक वन बनाउने क्रम चलेकोले वन फडानीमा धेरै कमि आएको भएपनि जैविक मार्गलाई जोगाउने काम भने हुन सकेको छैन । वन फडानी गरि बनेका नया वस्तीहरुमा समेत धमाधम प्लटिंग चलीरहेको छ । वन भित्रका वस्तीहरुमा समेत पक्कि सडक, विद्युत, टेलिफोन जस्ता सुबिधाहरु राज्यका निकायहरुले पुऱ्याइरहेका छन । राष्ट्रपति चुरे कार्यक्रम र वन संरक्षणका अन्य सरकारी कार्यक्रमहरुले वन क्षेत्रमा भौतिक पूर्वाधार विकासलाई रोक्न सकेका छैनन् । मानिसहरुले सुकुम्बासी क्षेत्रमा ठुलो लगानी खन्याइरहेका छन ,जसले गर्दा वन क्षेत्र फिर्ता ल्याउने र सरकारले घोषणा गरेजस्तै ४० प्रतिशत वन क्षेत्र कायम गर्ने कुरा असम्भव भएको छ ।

नवलपरासी, रुपन्देही र कपिलवस्तु जिल्ला कृषि र पर्यटनको राम्रो सम्भावना बोकेका जिल्लाहरु हुन । कृषि र पर्यटनलाई बलियो बनाउन वन जंगलको महत्वपूर्ण भूमिका हुन्छ । यी तीन जिल्लाको आर्थिक र सामाजिक जीवन संग प्रत्यक्ष रुपमा गासिएको वन तीव्र शहरीकरण संगै खुम्चदै गएको छ । अहिले नगरको सुबिधा भोग्न चाहनेहरुको सस्तो र सुरक्षित थलो सुकुम्बासी वस्तीहरु बन्न पुगेका छन । नया नगरपालिकाहरुको घोषणा संगै सुकुम्बासी वस्तीहरुमा विकास निर्माणका कार्यहरु मा तिव्रता आएको छ , जसले वन व्यवस्थापनमा कडा चुनौती थप्दै गएको छ । वन संरक्षणलाई ख्यालै नगरी अन्धाधुन्द बस्तीहरुलाई नगरपालिका घोषणा गर्दै जाने र वन भित्र बनेका बस्तीहरुमा सहरी पूर्वाधार थप्दै जाने गर्दा गैडाकोट देखि भालुबांग सम्मको जैविक मार्ग खण्डखण्ड हुने निश्चित देखिएको छ । अहिले त सुकुम्बासी हटाएर वन क्षेत्र फिर्ता ल्याउन र वन पुनरुत्थान गर्न कठिन भैरहेको बेलामा सुकुम्बासी वस्तीहरु नगर क्षेत्रमा रुपान्तरण भैसकेपछि यि कामहरु गर्ने कल्पना पनि नगरे हुन्छ । महेन्द्र राजमार्ग उत्तरका नगरपालिकाहरुको अस्तीत्व यहाको खेत, चुरे र खहरे खोलामा अडिएको छ, जसलाई अहिलेसम्म वनजंगलले जोगाएको छ । यि नगरपालिकालाई सवल र सुरक्षित बनाउनको लागी यहाको वनजंगललाई जोगाउनु पर्छ, जसको लागी यहाँको सुकुम्बासी समस्याको दिगो समाधान गरि वन फिर्ता ल्याउने र पातलिदै गएका वनको पुनरुत्थान गर्ने जस्ता काम तुरुन्त थाल्नु जरुरि छ ।

# Terai Forest Shrinking Due to Urban Expansion

Yubaraj kandel

There is now a sub-metropolitan city and 16 municipalities in the Terai of Lumbini Zone. Terai of Lumbini Zone has become the area with the most urban population in western Nepal. More than half of Rupandehi's population (50.52%) is in 6 municipalities. Similarly, the urban population in Nawalparasi and Kapilvastu is 37.9 and 36 percent respectively. Apart from Krishna Nagar Municipality of Kapilvastu, all the new municipalities are located next to Mahendra Highway. Only recently, 12 municipalities have been added in the distance of about 200 km from Gaidakot to Shivpurgarhi. All the areas that have become municipalities now are densely forested areas 5 decades ago. Eradication of malaria and the construction of highways, as the migration to the Terai intensified, the thinning and shrinking of the forest here intensified, as a result of which now the forests of the Terai have been limited to the Chure hills and the vicinity of the Mahendra Highway. B.S. During the period from 2035 to 2048, the forest has decreased by 37 percent in Rupandehi district, 25 percent in Nawal Parasi and 14 percent in Kapilvastu district.

The forest here connects the Chitwan National Park to the Rapti River area of Dang with the Bakay National Park, so it is a major biological corridor. As large settlements and municipalities have been built on this biological route, this route for the movement of animals has been broken. Plotting is going on in full swing even in the new settlements created by deforestation. The state agencies are providing facilities such as paved roads, electricity and telephone even in the settlements inside the forest. Along with the announcement of new municipalities, there has been an increase in development works in squatter settlements, which is adding a tough challenge to forest management. It is certain that the biological route will be fragmented as municipalities are declared without considering forest protection and urban infrastructure is added to the settlements built inside the forest. At present, when it is difficult to remove the squatters and bring back the forest area and restore the forest, it is not even imagined that these works will be done after the squatter settlements have been transformed into urban areas.

# लुम्बिनी प्रदेशका नगरपालिकामा वन उपलब्धता र समस्या
# Forest availability and problems in municipalities of Lumbini Province

युवराज कंडेल

तराईमा, शहरोन्मुख र शहरी क्षेत्रमा जनसंख्या केन्द्रित भएसँगै यसको अधिकांश क्षेत्र द्रुत रूपमा शहरीकरण हुँदै गएको देखिन्छ। खासगरी तराई , भित्रि मधेश र उपत्यकामा शहरीकरण शुरु भएपछी ति क्षेत्रको वन खुम्चदै गएको प्रत्यक्ष देख्न सकिन्छ । मानिसलाई शहरिया बन्न मन लाग्ने र शहरमा जग्गा जमिन किन्न नसक्ने मानिसहरु शहर बन्दै गएका बजार वरिपरिको वन अतिक्रमण गरेर बस्न थाल्ने हुदा वन विनाशको दर शहरी क्षेत्र छेउछाउमा बढी भएको देखिन्छ।

सामान्य बुझाईमा शहर भएका ठाउँहरु नै नगरपालिका हुन् । पंचायतको अन्त्यपछि नेपालमा नगरपालिका बढाउने काम शुरु भएको थियो र गणतान्त्रिक व्यवस्था शुरु भएपछी त देशमा नगरपालिकाहरुको संख्या ह्वात्तै बढेको छ । आर्थिक वर्ष २०७०/७१ सम्म नेपालमा नगरपालिकाको संख्या ५८ वटा रहेकोमा राज्य पुनःसंरचना भएपछि नगरपालिका थप गरेर २०७४/०७५ मा यो संख्या २९३ पुगेको थियो । पछिल्लो जनगणना अनुसार नगरपालिकाबासीको जनसंख्या पनि १७ प्रतिशतबाट ६६ प्रतिशत पुगेको छ । जनसंख्यालाई मात्र आधार मानेर नगरपालिका घोषणा गरेकोले नगरपालिकाको संख्या र नगरपालिकाको जनसंख्या दुवैमा भएको तीव्र वृद्धि भएको सहजै देख्न सकिन्छ । नगरपालिकाको जनसंख्या मध्ये जनघनत्व र मुख्य बजारसंगको दुरीलाई आधार बनाएर हेर्दा नेपालको २७ प्रतिशत जनसंख्या शहरमा र २९.७५ प्रतिशत जनसंख्या शहरोन्मुख क्षेत्रमा रहेको जनगणनाले देखाएको छ । भौगोलिक रुपमा हेर्दा नेपालको नगरपालिकामा बस्ने कूल ६६ प्रतिशत जनसंख्या मध्ये ३४.८ प्रतिशत तराईका नगरपालिका, २५.२ प्रतिशत पहाडका नगरपालिकामा र ३.९ प्रतिशत भित्रीमधेश तथा २.२ प्रतिशत हिमाली क्षेत्रका नगरपालिकामा छन् । शहरोन्मुख क्षेत्रहरू मुख्यतः भित्रिमधेश र तराई क्षेत्रमा केन्द्रित छन् । नेपालको कूल शहरी जनसंख्याको ५३ प्रतिशत पहाडमा र शहरोन्मुख जनसंख्याको ८५ प्रतिशत तराईमा बसोबास गरेको राष्ट्रिय तथ्यांक कार्यालयको तथ्यांकले देखाउछन् । भित्रिमधेशमा ४३ प्रतिशत जनसंख्या शहरोन्मुख क्षेत्रमा बसोबास गर्छन्, शहरी जनसंख्या ३० प्रतिशत छ । समग्र तराई क्षेत्रमा ६९ प्रतिशत जनसंख्या शहरोन्मुख क्षेत्रमा, २२ प्रतिशत शहरी क्षेत्रमा र ९ प्रतिशत मात्र ग्रामीण विषेशतायुक्त क्षेत्रमा बसोबास गर्दछ।

तराईमा, शहरोन्मुख र शहरी क्षेत्रमा जनसंख्या केन्द्रित भएसँगै यसको अधिकांश क्षेत्र द्रुत रूपमा शहरीकरण हुँदै गएको देखिन्छ। खासगरी तराई , भित्रि मधेश र उपत्यकामा शहरीकरण शुरु भएपछी ति क्षेत्रको वन खुम्चदै गएको प्रत्यक्ष देख्न सकिन्छ । मानिसलाई शहरिया बन्न मन लाग्ने र शहरमा जग्गा

जमिन किन्न नसक्ने मानिसहरु शहर बन्दै गएका बजार वरिपरिको वन अतिक्रमण गरेर बस्न थाल्ने हुदा वन विनाशको दर शहरी क्षेत्र छेउछाउमा बढी भएको देखिन्छ । बजार विस्तार हुँदै गएपछि आवस्यक पर्ने सार्वजनिक सस्था, खेल मैदान, मठमन्दिर बनाउनको लागि पनि वन क्षेत्र नै रोज्ने गरिएको छ । शहर विस्तारसंगै बढ्ने सुकुम्बासी वस्तीको लागि काठ दाउराको आपूर्ति, नगरपालिकाका किसानहरुको लागि दाउरा स्याउलाको व्यवस्था जस्ता कारणले गर्दा शहरोन्मुख क्षेत्र र शहरी क्षेत्रमा वनको क्षेत्रफल र घनत्व घट्दै गएको छ ।

नेपालको कूल वनक्षेत्र ६२ लाख ३० हजार ५७३ हेक्टर मध्ये ६७.४ प्रतिशत वन गाउपालिकामा, ३०.४ प्रतिशत नगरपालिकामा, १.६ प्रतिशत उपमहानगरपालिकामा र ०.६ प्रतिशत महानगरपालिकामा रहेको छ । गाउँपालिकामा रहेको कूल वनलाई सतप्रतिशत मान्दा सबैभन्दा बढी ( १९.७%) कर्णाली प्रदेशमा रहेको छ भने सबैभन्दा कम ( ०.४%) मधेश प्रदेशमा रहेको छ । यसैगरी नगरपालिकामा भएको वन मध्ये १९.३ प्रतिशत सुदूरपश्चिम प्रदेशमा, उपमहानगरपालिकामा रहेको वन मध्ये सबैभन्दा धेरै ( ४६.१%) लुम्बिनी प्रदेशमा रहेको वन मन्त्रालयको तथ्यांक छ । देशका १४ प्रतिशत ( १०६ वटा) पालिकाहरु वन विहिन छन्, यी मध्ये ६० प्रतिशत गाउँपालिका र ३७ प्रतिशत नगरपालिका रहेका छन् । वन भएका पालिकाहरुमध्ये १६७ वटा नगरपालिकाहरुमा दश हजार हेक्टर भन्दा कम र ७० वटा नगरपालिकामा १० हजार हेक्टर भन्दा बढी क्षेत्रफलमा वन रहेको छ । दश हजार हेक्टर भन्दा बढी क्षेत्रफलमा वन भएका ५ वटा उपमहानगरपालिका र २ वटा महानगरपालिका मात्र छन् । वनको क्षेत्रफल र फैलावटमा नगरपालिकाहरू कमजोर देखिएका छन् । पालिकाको कूल क्षेत्रफल मध्ये ५० प्रतिशत भन्दा बढी वनले ओगटेका १०३ वटा नगरपालिका र ३ वटा उपमहानगरपालिका रहेका छन् । पछिल्लो दशकमा तीव्र शहरीकरण भएका प्रदेशहरुमा लुम्बिनी प्रदेश पनि अगाडी आउँछ । यहाँ ४ वटा उपमहानगरपालिका र ३२ वटा नगरपालिका छन् । २०७८ को जनगणना अनुसार प्रदेशको कूल जनसंख्याको ५५.२ प्रतिशत जनसंख्या नगरपालिकामा रहेको छ । लुम्बिनीका १० वटा नगरपालिका मात्र पहाडी जिल्लामा रहेका छन् । घना र विस्तारित नगरपालिकाहरू सबै यस प्रदेशका तराईका जिल्लाहरुमा रहेका छन् । ५ दशक अघिसम्म घना वन रहेका क्षेत्रमा अहिले बर्दघाट, सुनवल, देवदह, तिलोत्तमा, सैनामैना, बुद्धभूमि, वाणगङ्गा, शिबराज, लमही, कोहलपुर, बारबर्दिया, मधुवन, ठाकुरबाबा नगरपालिकाहरू बनेका छन् र यी नगरपालिकाहरू विस्तारित भैरहेका छन् । लुम्बिनी प्रदेशमा नगरपालिकाहरू फैलिदै जाँदा पालिकाभित्र वनको क्षेत्रफल घट्दै गएको छ । लुम्बिनी प्रदेशको करिब २ तिहाई ( ६३.८%) वन यहाँका गाउपालिका भित्र र ३६.३ प्रतिशत वन ३६ वटा नगरपालिका ( उमनपा समेत) मा रहेको छ । अहिले सबैभन्दा ठुला नगरपालिकाहरू तराईको उत्तरी क्षेत्र र दांग उपत्यकामा छन् । अहिले तराईको उत्तरी क्षेत्रमा केहि ठाउँमा वनको अवस्था राम्रो देखिएको भएपनि ति क्षेत्रहरु तीव्र वन अतिक्रमण भएका क्षेत्रहरुमा पर्दछन् । विस्तार भैरहेका बर्दघाट, सुनवल, देवदह, तिलोत्तमा, सैनामैना र बुद्धभूमि नगरपालिकालाई हेर्दा नगरपालिका बनाईएका क्षेत्रमा वन अतिक्रमण कति जटिल छ भन्ने प्रष्ट देख्न सकिन्छ ।

| लुम्बिनी प्रदेशमा वनको क्षेत्रफल अनुसार पालिकाहरु | | | | | |
|---|---|---|---|---|---|
| वन नभएको | १००० हे. भन्दा कम | १००० देखी ५००० हे। | ५००० देखी १०००० हे. | १००००-२०००० हे. | २० हजार हे. भन्दा माथि |
| कृष्णनगर, लुम्बिनी सास्कृतिक | नेपालगञ्ज, गुलरिया, राजापुर, कपिलवस्तु, महाराजगञ्ज, रामग्राम, सिद्धार्थनगर | सन्धिखर्क, मधुवन, ठाकुरबाबा, मुसिकोट, रेसुंगा, प्युठान, तिलोत्तमा, बुटवल उमनपा | भुमिकास्थान, बारबर्दिया, बर्दघाट, रामपुर, तानसेन, देवदह, सैनामैना | कोहलपुर, बाँसगढी, तुलसीपुर, वाणगंगा, शिबराज, सुनवल, स्वर्गद्वारी, रोल्पा | शितगंगा, घोराही, लमही, बुद्धभूमि |
| श्रोत : वन श्रोत सर्भेक्षण, वन मन्त्रालय २०१४ | | | | | |

लुम्बिनी प्रदेशका २ पालिकाहरु वनविहिन छन् । यहाँका ८ वटा नगरपालिकामा १० हजार देखि २० हजार हेक्टर र ४ वटा नगरपालिकामा २० हजार हेक्टर भन्दा बढी वन रहेको छ । सबैभन्दा बढी वनक्षेत्र रहेका नगरपालिकामा शितगंगा ( ४७०७५ हे.),घोराही उमनपा ( २६०१८ हे.), बुद्धभूमि (२३७७९ हे.) र लमही ( २३६७८ हे.) रहेका छन् । राष्ट्रिय शहरी मानक अनुसार शितगंगा नगरपालिका पुरै ग्रामिण प्रकृतिको बसोबास भएको ठुलो नगरपालिका र शहर नभएको नगरपालिका भएकोले यहाँ वनको अवस्था राम्रै देखिएको छ । नगरपालिका भएपनि ग्रामिण प्रकृतिको जनसंख्या ५० प्रतिशत भन्दा धेरै भएका पालिकाहरुमा औशत ४० प्रतिशत भन्दा बढी क्षेत्रफल वनले ढाकेको देखिएको छ । शहरि र शहरोन्मुख जनसंख्या बढी भएका र चुरे पहाडसँग नजोडिएका नगरपालिकामा भने वनको अनुपात कम देखिन्छ ।

लुम्बिनी प्रदेशका उपमहानगरपालिका र दक्षिणी क्षेत्रका नगरपालिकामा बसोबास गर्ने जनताको लागि उपलब्ध वन क्षेत्रफल गाउँपालिकाका बासिन्दाको तुलनामा न्यून रहेको छ । शितगंगा नगरपालिकामा प्रतिव्यक्ति वन उपलब्धता सबैभन्दा बढी रहेको छ । यहाँ प्रतिव्यक्ति १.२५ हेक्टर वन उपलब्ध छ । शहरीकरण कम भएको र पालिकाकै क्षेत्रफल कम भएकोले त्यहाँ वन उपलब्धता बढी भएको हो । नेपालको प्रतिव्यक्ति औशत वन उपलब्धता ०.२१ हेक्टर छ, यस अनुसार प्रति हेक्टर वनमा पर्ने जनसंख्या ४.७ जना मात्र हुन आउंछ । तर, लुम्बिनी प्रदेशका शितगंगा, स्वर्गद्वारी, रोल्पा, लमही, बुद्धभूमि र भुमिकास्थानको जनसंख्यालाई मात्र राष्ट्रिय औशत भन्दा बढी वन उपलब्ध छ । लुम्बिनीका २२ वटा नगरपालिकामा प्रति हेक्टर वनमा पर्ने जनसंख्या १० भन्दा कम छ, यी सबै नगरपालिकाहरू महेन्द्र राजमार्ग उत्तर तथा पहाडी क्षेत्रका छन् । मधुवन, तुलसीपुर, ठाकुरबाबा, बुटवलमा एक हेक्टर वनमा पर्ने जनसंख्या ५० जना भन्दा कम छ । तराईको दक्षिणी सिमानामा रहेका नेपालगञ्ज, महाराजगञ्ज, सिद्धार्थनगर, रामग्राममा प्रतिहेक्टर वनमा पर्ने जनसंख्या एक हजार जना भन्दा बढी रहेको छ । सिद्धार्थनगर नगरपालिकाका प्रति हेक्टर वनलाई ६७६६ जनाले र महाराजगञ्ज नगरपालिकामा

८०८१ जनाले उपभोग गर्नुपर्ने अवस्था छ । दक्षिणी सिमानामा रहेका कृष्णनगर र लुम्बिनी सास्कृतिक नगरपालिकामा खोला खोल्सीमा र गाउँका बगैचामा केहि रुख विरुवाहरु देखिएपनि वन उपलब्ध छैन ।

पाच दशक अघिसम्म घना वन रहेका तराई र भित्रि मधेशका क्षेत्रहरुमा अहिले नगरपालिका फैलिदै गएको छ र नगरपालिका भित्र शहरीकरण पनि उच्च हुदै गएको छ । अव्यवस्थित शहरीकरणले गर्दा ठुला र घना नगरपालिका भित्र हरियाली हराईसकेको छ भने शहर नजिक रहेका वन क्षेत्रमा मानवीय चाप परेकोले वन खुम्चने र पातलिने क्रम उच्च रहेको छ । शहर बन्दै गएपछि घास, दाउरा जस्ता कृषि जीवनका वन सम्बन्धि आवस्यकताहरु शहरियालाई कम हुन्छ तर शहरलाई जीवन्त राख्नको लागि वन भने अपरिहार्य हुन्छ । शहरी सौन्दर्यता वृद्धि, जलाधार क्षेत्रको संरक्षण, पानीको दिगो आपूर्ति, काठ उपलब्धता, पर्यटन जस्ता आवस्यकता पुरा गर्नको लागि नगरपालिकामा पर्याप्त मात्रामा वन हुनै पर्छ । तराईका नगरपालिकामा जनसंख्या बढिरहेको छ र यस्तो अवस्थामा भविस्यमा वन अझ खुम्चने र वन उपलब्धता कम हुने निश्चित छ । बसाईसराईले गर्दा पहाडका वनमा चाप कम पर्दै गएकोले अबका दिनमा केही समयसम्म पहाडी क्षेत्रका वनबाट वन पैदावार उपलब्ध गराउने र तराईका नगरपालिकाका वनलाई प्राकृतिक अवस्थामै जोगाईराख्ने गरि प्रदेश सरकारले नीति ल्याउनु जरुरि छ । नगरपालिकाका मानिसका आवस्यकता पुरा गर्नका लागि शहरी वन निर्माण, नदि उकास क्षेत्रमा वन विकास, कृषि तथा निजि वन जस्ता कार्यका स्थानीय र प्रदेश सरकारले ध्यान दिनु पर्छ । तराईका नगरपालिकामा जनसंख्या थुप्रदै जाने तर वन खुम्चदै जाने प्रवृति यस्तै रह्यो भने भविस्यमा शहरका वासिन्दाले वन हेर्न गाडी चढेर जानुपर्ने अवस्था नआउला भन्न सकिदैन ।

yrkandel@gmail.com

# प्रदेशको समृद्धिमा वन : चुनौती र अवसर

Forests in the Prosperity of the Province: Challenges and Opportunities

युवराज कंडेल

*वनजंगल पाँच नम्बर प्रदेशको मुख्य प्राकृतिक सम्पदा हो । हिमाली, पहाडी र मैदानी तीनै किसिमका भूभाग र फरकफरक किसिमको हावापानी पाइने भएकोले यो प्रदेशमा धेरै किसिमका वनस्पति, जडिबुटीहरु र वन्यजन्तुहरु पाइन्छन् । शदियौं यो प्रदेशका बासिन्दाहरुले जडिबुटी उत्पादन, संकलन र बिक्री गरेर आम्दानि गर्ने र राज्यलाई राजस्व उपलब्ध गराउने काम समेत गरिरहेका छन् । तराईका वनहरू काठ उत्पादनको लागि निकै प्रसिद्ध छन् भने पहाडी र हिमाली क्षेत्रका वनहरू खोटो उत्पादन र बहुमुल्य जडिबुटीका लागि निकै महत्वपूर्ण थलो मानिन्छन । बर्दिया र बाँके राष्ट्रिय निकुन्जका साथै ढोरपाटन राष्ट्रिय निकुन्जको केहि भूभाग समेत यहि प्रदेशमा भएकाले यो प्रदेशलाई वन सम्पदामा सम्पन्न र सम्भावना भएको प्रदेश मानिन्छ ।*

कम्तीमा आधा हेक्टर वन भएको र त्यसभित्र रुखको छत्रले १० प्रतिशत ढाकेको क्षेत्रलाई विशेषज्ञहरूले वनक्षेत्र भनेका छन् । सन् २०१५ को वनस्रोत सर्वेक्षण अनुसार नेपालमा वनले करिब ५९ लाख ६२ हजार हेक्टर भू-भाग ओगटेको छ जुन नेपालको कूल क्षेत्रफलको ४०.३६% हुन आउँछ । बुट्यान क्षेत्र ६ लाख ४८ हजार हेक्टर (४.३८%) रहेको छ । यसरी नेपालको कूल क्षेत्रफल मध्ये वन तथा बुट्यान क्षेत्रले गरी जम्मा ४४.७४% भू-भाग ओगटेको छ । कूल वन क्षेत्रको ३७.८०% मध्यपहाडी भौगोलिक क्षेत्रमा, ३२.२५% उच्चपहाडी तथा उच्चहिमाली क्षेत्रमा, २३.०४% चुरे क्षेत्रमा र ६.९०% तराई क्षेत्रमा अवस्थित छ । कूल वन क्षेत्र मध्ये संरक्षित क्षेत्रमा १० लाख ३३ हजार हेक्टर (१७.३२%) र संरक्षित क्षेत्र भन्दा बाहिर ४९ लाख २९ हजार हेक्टर (८२.६८%) वन रहेको छ । मुलुकको सबैभन्दा बढी वन क्षेत्र प्रदेश ६ मा देखिएको छ। १० जिल्ला रहेको प्रदेश ६ मा ११ लाख ८३ हजार ४ सय हेक्टर वन छ। प्रतिशतका हिसाबले सबैभन्दा बढी वन क्षेत्र प्रदेश ७ मा छ। प्रदेश ७ मा झन्डै ५८ प्रतिशत अर्थात ११ लाख ४६ हजार १ सय १० हेक्टर वन क्षेत्र रहेको छ। सबैभन्दा कम वन क्षेत्र प्रदेश २ मा छ। ८ जिल्ला समेटिएको प्रदेश २ मा २ लाख ६३ हजार ६ सय ३० हेक्टर वन क्षेत्र रहे पनि प्रतिशतका हिसाबले २७ दशमलव ४९ मात्र छ । प्रदेश १ मा ४३ दशमलव ४४ अर्थात ११ लाख ३४ हजार २ सय ५० हेक्टर वन क्षेत्र छ। प्रदेश ३ मा १० लाख ९० हजार ८ सय ८० हेक्टर वन क्षेत्र ( ५३ दशमलव ७३ प्रतिशत) छ। प्रदेश ४ मा ३७ दशमलव २२ प्रतिशत (८ लाख १७ हजार २ सय ९० हेक्टर) वन क्षेत्र छ। प्रदेश ५ का १२ जिल्लामा ९ लाख ७४ हजार ३ सय ८० हेक्टर वन क्षेत्र छ। प्रतिशतका हिसाबले ५० दशमलव ४३ छ।

नेपालले अवलम्बन गरेको समुदायमा आधारित वन तथा संरक्षित क्षेत्र व्यवस्थापन (सामुदायिक वन, साझेदारी वन, मध्यवर्ती सामुदायिक वन, संरक्षण क्षेत्र, कबुलियती वन आदि) विश्वमै उदाहरणीय रहेको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार नेपालमा २२ हजार २ सय ६६ सामुदायिक वन स्थापना गरी २२ लाख ३७ हजार ६ सय ७) हेक्टर राष्ट्रिय वन संरक्षण तथा व्यवस्थापनका लागि स्थानीय उपभोक्ता समूहलाई हस्तान्तरण गरिएको छ । करिब २९

लाख ७ हजार ८७१ परिवार सामुदायिक वन उपभोक्ता समूहमा आबद्ध छन् । समूहलाई हस्तान्तरित सामुदायिक वनको क्षेत्रफल नेपालको कूल वनक्षेत्रको ३३ प्रतिशत र राष्ट्रिय वनक्षेत्रको ४१ प्रतिशत हुन आउँछ । वनको अवस्थामा सुधार आएपनि वनबाट समृद्धि , वनमा आधारित रोजगारी, काठ दाउराको सहज आपूर्ति र आयात प्रतिस्थापन जस्ता अधिकांश कुराहरु कागजमा मात्र सिमित भएका छन् ।

**५ नम्बर प्रदेशमा वन**

प्रदेश ५ को कुल भूभागको ५० दशमलव ४३ प्रतिशत अर्थात ९ लाख ७४ हजार ३ सय ८० हेक्टर क्षेत्रफल वनले ओगटेको छ । पछिल्लो तथ्यांक प्रदेश ५ मा ३ हजार नौ सय ८९ सामुदायिक वन छन् तर यहि प्रदेश मा २० गाउँपालिका वनरहित छन् । प्रस्तावित वन नीतिले हरेक स्थानीय तहमा कम्तिमा १० प्रतिशत वन क्षेत्र हुनुपर्ने प्रस्ताव गरेको भएपनि प्रदेश नम्बर ५ को बाँकेमा ३, कपिलवस्तुमा ५, नवलपरासीमा ३ र रुपन्देहीमा ९ स्थानीय तह वनरहित भएको बताईन्छ । सिद्धार्थनगर, लुम्बिनी संस्कृतिक नगरपालिकासहित मर्चवारी, रोहिणी, मायादेवी, कोटहीमाई, सियारीलगायत गाउँपालिकामा वनक्षेत्र शून्य छ । बुटवल उपमहानगरपालिकामा भने ४९ प्रतिशत वन क्षेत्र छ । कपिलवस्तुका पनि पूर्वपश्चिम राजमार्गबाहेक दक्षिणतिरका तौलिहवा, कृष्णनगर, महाराजगन्ज नगरपालिका सहित मायादेवी, यशोधरा, शुद्धोदनलगायत गाउँपालिकामा वन क्षेत्र शून्य छ ।

**प्रदेश सरकारको वनबाट समृद्धिको सपना**

वनजंगल पाँच नम्बर प्रदेशको मुख्य प्राकृतिक सम्पदा हो । हिमाली, पहाडी र मैदानी तीनै किसिमका भूभाग र फरकफरक किसिमको हावापानी पाइने भएकोले यो प्रदेशमा धेरै किसिमका वनस्पति, जडिबुटीहरु र वन्यजन्तुहरु पाइन्छन् । शदियौ यो प्रदेशका बासिन्दाहरुले जडिबुटी उत्पादन, संकलन र विक्री गरेर आम्दानि गर्ने र राज्यलाई राजस्व उपलब्ध गराउने काम समेत गरिरहेका छन् । तराईका वनहरू काठ उत्पादनको लागि निकै प्रसिद्ध छन् भने पहाडी र हिमाली क्षेत्रका वनहरू खोटो उत्पादन र बहुमुल्य जडिबुटीका लागि निकै महत्वपूर्ण थलो मानिन्छन । बर्दिया र बाँके राष्ट्रिय निकुन्जका साथै ढोरपाटन राष्ट्रिय निकुन्जको केहि भूभाग समेत यहि प्रदेशमा भएकाले यो प्रदेशलाई वन सम्पदामा सम्पन्न र सम्भावना भएको प्रदेश मानिन्छ । देश संघियतामा गएर प्रदेश सरकारको गठन भएपछी नै प्रदेश सरकारले वनलाई प्रदेशको समृद्धिको आधार बनाउने कुरा गरिरहेको छ । चालु आर्थिक वर्ष २०७५/७६ को प्रदेश सरकारको नीति तथा कार्यक्रममा कृषि तथा वन पैदावारमा आधारित उद्योगहरु खोल्न प्रोत्साहन गरिने, प्रदेशस्तरमा राष्ट्रिय वन व्यवस्थापनको लागि आवश्यक नीतिगत तथा कानुनी व्यवस्था मिलाइने, वन क्षेत्रको वैज्ञानिक व्यवस्थापनबाट यसको उत्पादन र उत्पादकत्व वृद्धि गरी काठको आन्तरिक आपूर्ति तथा अन्य प्रदेशमा निकासी गर्ने अवस्था सिर्जना गरिने, वैज्ञानिक वन व्यवस्थापन कार्यान्वयन गर्न नसकिने वन क्षेत्रहरुलाई जलाधार व्यवस्थापन, जैविक विविधता संरक्षण, पर्यटनको प्रयोजनमा उपयोग गरिने, आर्थिकरुपले महत्वपूर्ण जडीवुटी तथा गैरकाष्ठ वन पैदावारको व्यवसायिक खेती, उत्पादनमा वृद्धि र बजारीकरणलाई प्रोत्साहन गरिने, सम्भाव्यता अध्ययन गरेर आर्थिक वर्ष २०७५/७६ भित्रमा दुइवटा जडीवुटी प्रशोधन केन्द्र स्थापना गरिने कुरा उल्लेख भएको पाइन्छ । त्यसैगरी प्रदेश योजना आयोगले सार्वजनीक गरेको प्रथम आवधिक योजनाको अवधारणा पत्रमा पर्यटन र जडिबुटीलाई आर्थिक क्षेत्रको रुपमा र वनलाई अन्तरसम्बन्धित क्षेत्रको रुपमा उल्लेख गरिएको छ । संघीय सरकारको वन मन्त्रालयले ६ महिना अघि नै वनबाट समृद्धिको गुरुयोजना सार्वजनिक गरिसकेको छ भने महेन्द्र राजमार्ग उत्तरका सबैजसो स्थानीय सरकारले वन र वनमा आधारित पर्यटनलाई समृद्धिसंग जोडेर स्थानीय नीतिहरु बनाइरहेका छन् ।

| ५ न.. प्रदेशमा वनक्षेत्र ( क्षेत्रफल हेक्टरमा) | | | | | जिल्लाको कूल क्षेत्रफल |
|---|---|---|---|---|---|
| जिल्ला | वन | ५ देखि १० प्रतिशत रुख भएको जमिन | बुट्यान | अन्य वन क्षेत्र | |
| अर्घाखाँची | ७३१४२ | ७९२ | २६ | ८१८ | १२३९०९ |
| पाल्पा | ७७९७४ | ६३९ | ४१६० | ४७९९ | १४६१९१ |
| गुल्मी | ४५२१५ | ३१० | ८१४ | ११२४ | ११०७७७ |
| नवलपरासी | १०३५९३ | ६३९ | ४१६० | १८१३ | २१५२५५ |
| रुपन्देही | २५१०५ | ३७२ | ३१ | ४०३ | १३०५२२ |
| कपिलवस्तु | ५९०२५ | १७७८ | १६६ | १९४४ | १६५१३६ |
| रुकुम | १०८६३१ | १५८४३ | ६९७३ | २२८१७ | २८९५७५ |
| रोल्पा | ९४४४७ | ७३१ | ४४२० | ५१५१ | १८८५४९ |
| प्युठान | ६४३२३५ | ३४७ | ८४ | ४३१ | १३२०९२ |
| दांग | १९२६८२ | ७१४३ | ९०० | ८०४३ | ३०५९८६ |
| बाँके | ११६३६० | ६६३ | ८८६ | १५४९ | १८८०४६ |
| बर्दिया | १११५५० | १६९६ | ४४१ | २१३७ | २०००६५ |
| श्रोतः वन विभाग, वन श्रोत सर्वेक्षण प्रतिवेदन २०७२ | | | | | |

**जतातते समस्या**

केन्द्रीय तथ्याङ्क विभागको कृषि गणना २०६८ अनुसार यस प्रदेशमा ४०४५४१ हेक्टर खेती योग्य जमिन रहेको छ, जुन यस प्रदेशको कूल भूभागको २२.७ प्रतिशत जति हुन आउँछ। यस प्रदेशमा कृषि कार्यमा संलग्न ३८ लाख २० हजार जति मानिसहरु संलग्न छन् । खेतीयोग्य जमिनमा नेपालमै तेश्रो भएपनि खेतीयोग्य जमिनको असमान अवस्थितिले गर्दा वनमा प्रत्यक्ष असर पुगिरहेको छ । विगतमा धेरै वनजंगल भएका चुरे र तराईमा पछिल्ला ६० वर्षमा जग्गा आवाद गरेर खेतीपाती गर्ने र वस्ती बसाल्ने क्रम अनियन्त्रित रुपमा बढिरहेको छ । औंलो उन्मुलन सुरु भएदेखि नै नेपालको तराईमा पहाड र देश बाहिरबाट मानिस ओईरिन थालेका हुन । उब्जाउ जमिन, पशुपालन गर्न सजिलो हुने भएकोले मानिसहरु वनजंगल विनाश गरेर बस्न थालेका थिए, जुन क्रम अहिलेपनि चलिरहेको छ । राम्रो खेतीयोग्य जमिन भएका पाँच नम्बर प्रदेशका रुपन्देही, नवलपरासी, बाँके, दाङ्ग र बर्दियामा आप्रवासनदर उच्च रहेको छ र यिनै जिल्लाहरुमा बढी वन विनास भएको सरकारी तथ्यांकहरुले देखाउछन । वनश्रोत सर्वेक्षण २०१४ का अनुसार वि.सं. २०४८ देखि २०६७ सम्मको १९ वर्षे अवधिमा तराईको वन वार्षिक ९.४४ प्रतिशतका दरले घटेको देखिन्छ । पछिल्लो नौ वर्ष (२०५८-२०६७ )मा मात्र तराईको वन १६ हजार ५९९ हेक्टर घटेको थियो। प्रदेश ५ का बर्दिया र कपिलवस्तुमा वन घट्ने दर सबै भन्दा धेरै रहेको छ । वि.स. २०३५ देखि २०४८ सम्मको अवधिमा रुपन्देही जिल्लामा ३७ प्रतिशत, नवलपरासीमा २५ प्रतिशत र कपिलवस्तु जिल्लामा १४ प्रतिशत वन घटेको तथ्यांक छ। त्यस्तै वि.सं. २०५८-२०६८ को अवधिमा नवलपरासी र रुपन्देही जिल्लाको वन वार्षिक ०.१२ र ०.२१ प्रतिशतका दरले घटेको वन श्रोत सर्भेक्षण २०१४ ले देखाएको छ । नवलपरासीमा ४९१४हे., रुपन्देहिमा ८३४६ हे., कपिलवस्तुमा

प्रदेश न ५

| क्रस | प्रदेश नम्बर | जिल्लाको नाम | सा.ब.को सख्या | हस्तान्तरित क्षेत्रफल(हेक्टर) | लाभान्वित घरधुरी (सख्या) |
|---|---|---|---|---|---|
| ४७ | ५ | परासी | २४ | | |
| ४८ | ५ | रूपन्देहि | १०३ | १५४७१.०४ | ६४१९५ |
| ४९ | ५ | कपिलवस्तु | ११९ | १२६६३.२ | ३०२३० |
| ५० | ५ | पाल्पा | ६७२ | ३५९६१.०८ | ५७०७१ |
| ५१ | ५ | अर्घाखाँची | ४४० | २९६९६.५४ | ४७७८० |
| ५२ | ५ | गुल्मी | ४४९ | १८३२३.८८ | ६१३५१ |
| ५३ | ५ | पूर्वी रुकुम | १४० | | |
| ५४ | ५ | रोल्पा | ६३० | ५०३३१.६८ | ५५१५५ |
| ५५ | ५ | प्युठान | ४३० | ५४०४०.२ | ५७२८१ |
| ५६ | ५ | दाङ देउखुरी | ५१८ | १०३२४३.३६ | ९७९२२ |
| ५७ | ५ | बाँके | ११६ | २१८२५.७६ | ३०५९३ |
| ५८ | ५ | बर्दिया | ३१२ | २०३२०.३२ | ५५०३१ |
| जम्मा | | | ३९५३ | | |

प्रदेश ५ मा ४८,९१,०२५ जनसंख्या छ, भने क्षेत्रफल २२,२८८ वर्ग किमी छ।

६८५४ हे., दाङ्गमा २१०१ हे. बाँकेमा १७८० हे.र बर्दियामा ५६८ हे. वन अतिक्रमणमा

परेको सरकारी तथ्यांक छ । यी जिल्लाहरुको शहरी क्षेत्र, मुख्य व्यापारिक थलो र राजमार्ग छेउछाउका वनजंगलहरुमा अचेल सुकुम्बासीका महलहरु ठडिएका छन् र दूरदराजका वन क्षेत्रमा पनि झुपडीहरु ठडिने काम रोकिएका छैनन् । वन क्षेत्रमा वस्तीहरु बढेको कारणले वन्यजन्तुको वन्यजन्तुको आहारविहार, बृद्धि र विकासमा प्रतिकूल असर परिरहेको छ ।

अतिक्रमणले गर्दा तराईको वन खुम्चदै गएको छ भने सिमित वनजङ्गलमा उपभोक्ताहरुको बढ्दो चापले गर्दा वनहरू पातलिदै समेत गैरहेका छन् । अझ पछिल्लो समयमा वनबाट अधिकतम लाभ पाउने आशामा वैज्ञानिक वन व्यवस्थापनको नाममा वनमा रुख कटान गर्न थालेपछि वनका धेरै वनस्पति प्रजातिहरू हराउने चिन्ता बढेको छ । हिमाली र पहाडी क्षेत्रमा प्रसस्त मात्रामा जडिबुटिहरु पाइने भएपनि अबैज्ञानिक ढंगले संकलन गर्ने तर संरक्षणका कामहरु नगर्ने प्रचलनले गर्दा जडिबुटिहरु विनाश भैरहेका छन् । देशमा जडिबुटी प्रशोधन, स्तरीकरण र ब्रान्डीगको व्यवस्था नहुदा जडिबुटी उत्पादक र संकलकहरु कौडीको भाउमा जडिबुटिहरु बेच्न बाध्य छन् । पहाडी क्षेत्रमा बसाइसराईको कारणले वस्तीहरु पातलिदै गएकोले वन र वनस्पतिहरुको उपयोग हुन नसकेर खेर गैरहेका छन् । वनमा पर्या पर्यटनका प्रसस्त सम्भावनाहरु भएपनि अहिलेसम्म त्यसको अभ्यास हुन सकेको देखिदैन । यस्ता गतिविधिहरुले गर्दा वनबाट समृद्धि हासिल गर्ने कुरामा चुनौती खडा भैरहेको छ ।

**हिड्नुपर्ने बाटो**

भौगोलिक रुपमा ५ नम्बर प्रदेश जति विविधतापूर्ण छ त्यति नै समृद्ध छ जैविक विविधतामा पनि । काष्ठ र गैह्रकाष्ठ वन पैदावार तथा जडिबुटी उपलब्ध गराउनमा मात्र सिमित नरहेर यी श्रोतको व्यवसायीकरणमा ध्यान दिन सकियो भने वनले प्रदेशको समृद्धिको आधार निर्माण गर्न सक्छ । समुदायमा आधारित वन व्यवस्थापनमा सहयोग र हातेमालो गरि वनलाई काठ दाउराको अतिरिक्त जलाधार संरक्षण, जैविक विविधताको संरक्षण, कृषि तथा पशुपालन, पर्या-पर्यटन, जडिबुटी , फलफुल र पुष्प व्यवसायसंग जोडेर बहु आयामिक र दिर्घकालिन योजना बनाउने र सफल कार्यान्वयन गर्न सकेमा वन क्षेत्रले प्रदेशलाई स्वस्थ, हराभरा र दिर्घकालिन आर्थिक लाभ दीइरहन् सक्नेछ । नीति निर्माता र तिनै तहका सरकारले यसतर्फ ध्यान दिनु जरुरि छ ।

# Forests in the Prosperity of the Province: Challenges and Opportunities

Yubaraj Kandel

*Summary*

Forests play a crucial role in the prosperity of Province Number Five, serving as its main natural resource. With three distinct terrains and varying climates, the province boasts a diverse array of plants, herbs, and wildlife. The residents have long capitalized on these resources by engaging in the production, collection, and sale of herbs, thereby contributing to the state's revenue. Terai forests are renowned for timber production, while the hilly and Himalayan forests are vital for sorghum cultivation and the harvesting of valuable herbs.Notably, Bardiya and Banke National Parks, along with sections of Dhorpatan National Park, are situated within the province, underscoring its wealth of forest resources and untapped potential. Following the federalization of the country, the state government has expressed intentions to leverage forests as a cornerstone of the province's prosperity.

Geographically diverse and biologically rich, Province Number Five stands poised to harness its natural assets for economic growth.By prioritizing the commercialization of forest resources beyond timber and non-timber products, such as herbs, the province can lay the groundwork for sustainable development. Through collaborative community-based forest management, initiatives encompassing watershed protection, biodiversity conservation, agriculture, animal husbandry, eco-tourism, and the cultivation of herbs, fruits, and flowers can be pursued. A comprehensive, long-term strategy that integrates these various facets will not only promote environmental health but also yield enduring financial benefits for the province It is imperative for policymakers and government officials at all levels to recognize the potential of the forest sector and prioritize its sustainable development. By fostering a holistic approach to forest management, Province Number 5 can thrive as a green, prosperous province with lasting economic opportunities.

# वनमा लुम्बिनी सरकारका पाँच वर्ष

## Five years of Lumbini province Government in the forest sector

युवराज कंडेल

*प्रदेश सरकारको मुख्य मन्त्रालयको रुपमा काम सुरु गर्दा मन्त्रालयको तर्फबाट काम गर्ने आफ्नै निकायहरु थिएनन । संघीय कानून अनुसार जिल्ला वन कार्यालय र ईलाका वन कार्यालय, भूसंरक्षण कार्यालयहरु मात्र थिए । यी कार्यालयहरु संघीय सरकारको मातहतमा रहेको र संघीय वन ऐन नबनेको अवस्थामा यी कार्यालयहरु प्रदेश वा संघीय सरकार मध्ये कसको मातहत रहने भन्ने अस्पष्टताले गर्दा मन्त्रालयले तत्कालै गति लिन सकेको थिएन । त्यसैले मन्त्रालय बनेको ३ वर्षसम्म पनि मन्त्रालयको ध्यान वनमा भन्दा पर्यटन र उद्योगमा बढी गएको देखिन्थ्यो ।*

वनजंगल लुम्बिनी प्रदेशको प्रमुख प्राकृतिक सम्पदा हो । हिमाल, पहाड, तराई मैदानी फरक भूगोल र फरकफरक हावापानी पाईने भएकोले लुम्बिनी प्रदेश वनासम्पदामा धनी रहेको छ । लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयको पछिल्लो तथ्यांक अनुसार लुम्बिनी प्रदेशमा ९ लाख ७४ हजार ३८१ हेक्टर क्षेत्रमा वनजंगल छ, जुन प्रदेशको कूल क्षेत्रफलको ४३.७२ प्रतिशत हो । यो बाहेक ५ प्रतिशत भूभाग बुट्यानले ढाकेको छ । देशको कूल वन क्षेत्रको १४.७४ प्रतिशत वन लुम्बिनी प्रदेशमा छ । प्रदेशमा सबैभन्दा बढी वन दांग जिल्लामा ( २,००,७२५ हे.) र सबैभन्दा कम वन पश्चिम नवलपरासी जिल्लामा (२१,९२७ हे.) छ । प्रदेशका १८ पालिकामा १००० हे. भन्दा कम वनक्षेत्र रहेको छ भने ९ वटा पालिकाहरु वन रहित छन् । घना वन क्षेत्र रहेका बाँके र बर्दिया राष्ट्रिय निकुन्ज, कृष्णसार संरक्षण क्षेत्र यस प्रदेशमा रहेका छन् भने ढोरपाटन शिकार आरक्षको केहि भाग समेत यो प्रदेशमा पर्छ ।

२०७४ साल माघमा प्रदेशमा वनको काम हेर्नेगरी उद्योग, पर्यटन , वन तथा वातावरण मन्त्रालय स्थापना गरिएको थियो (२०७८ बैशाख ६ देखि पर्यटन र उद्योग अरु मन्त्रालयमा गएको ) । प्रदेश सरकार ( कार्य विभाजन ) नियमावली ,२०७४ अनुसार यस मन्त्रालयलाई प्रदेशस्तरमा वन क्षेत्रको नीति, कानून, गापदण्ड तया योजना तर्जुमा, कार्यान्वयन र नियमन, वन्यजन्तु र वन पैदावार ओसारपसारसम्बन्धी नियमन र अपराध नियन्त्रण, प्रदेशस्तरमा जैविक विविधताको अध्ययन, अनुसन्धान, व्यवस्थापन, नियमन, संरक्षण एवम् लाभांश बाँडफाड, संरक्षण क्षेत्र र चरन क्षेत्र, जैविक विविधता पार्क, चिडियाखानाको व्यवस्थापन, वन अतिक्रमण तथा वन डढेलो नियन्त्रण तथा रोकथामको जिम्मेवारी तोकिएको थियो । यसैगरी प्रदेशस्तरमा जलाधार संरक्षण तथा जलउपयोग नीति, प्रविधि विकास, व्यवस्थापन, प्रदेशभित्र भूस्खलन नियन्त्रण , हरित क्षेत्र प्रवर्द्धन , भूपरिधि क्षेत्र तथा वन क्षेत्रको पहिचान, वर्गीकरण, संरक्षण र व्यवस्थापन , संरक्षण क्षेत्र पहिचान र व्यवस्थापकीय पद्धति निर्धारण , अन्तरप्रदेशीय नदी उकास तथा सडक किनार वृक्षारोपण व्यवस्थापन, वृक्षारोपणको लागि बीउ उत्पादन, प्रदेशभित्र जडिबुटि तथा अन्य गैरकाष्ठ वन पैदावार सम्बन्धी व्यवस्थापन र वन्यजन्तु र चराचुरुङ्गी सम्बन्धी प्रादेशिक नीति, कानून तथा मापदण्ड तर्जुमा, कार्यान्वयन र नियमन जस्ता वनसँग जोडिएर आउने विषयगत जिम्मेवारीहरु पनि वन मन्त्रालयलाई नै प्रदान गरिएको थियो । प्रदेश सरकारको मुख्य मन्त्रालयको रुपमा काम सुरु गर्दा मन्त्रालयको तर्फबाट काम गर्ने आफ्नै निकायहरु थिएनन । संघीय कानून अनुसार जिल्ला वन कार्यालय र ईलाका वन कार्यालय, भूसंरक्षण कार्यालयहरु मात्र थिए । यी कार्यालयहरु संघीय सरकारको मातहतमा रहेको र संघीय वन ऐन नबनेको अवस्थामा यी कार्यालयहरु प्रदेश वा संघीय सरकार मध्ये कसको मातहत रहने भन्ने अस्पष्टताले गर्दा मन्त्रालयले तत्कालै गति लिन सकेको थिएन । त्यसैले मन्त्रालय बनेको ३

वर्षसम्म पनि मन्त्रालयको ध्यान वनमा भन्दा पर्यटन र उद्योगमा बढी गएको देखिन्थ्यो ।

**आशालाग्दो वित्तीय प्रगति**

वन तथा वातावरण मन्त्रालयको वार्षिक वित्तीय प्रगति प्रदेशका अन्य मन्त्रालयहरुको भन्दा राम्रो रहेको मानिन्छ । आ.ब. २०७४/७५ मा आर्थिक वर्ष सकिने लाग्दा अल्पकालीन नीति कार्यक्रम आएकोले त्यो वर्षलाई मुल्यांकन गर्न मिल्दैन. त्यसपछिका वर्षहरुलाई हेर्दा आ.ब. २०७५/७६ मा ७०.९६ %, आ.ब. ७६/७७ मा ७०.७३ %, आ.ब. २०७७/७८ मा ८५% र गत आ.ब.मा ७८.१७% वित्तीय प्रगति यस मन्त्रालयले हासिल गरेको देखिन्छ । मन्त्रालयको वित्तीय प्रगतिमा निर्माण कार्यको हिस्सा धेरै देखिन्छ । डिपीआर निर्माण, अध्ययन, खरिद, ठेक्कापट्टा गर्न पाईने काममा वित्तीय प्रगति ९०% भन्दा बढी रहेको छ भने संरक्षण तथा व्यवस्थापनका कार्यहरुको वित्तीय प्रगति ६० प्रतिशत भन्दा कम देखिन्छ । आ.ब २०७६/७७ मा जडीवुटी तथा गैरकाष्ठ वनपैदावार संरक्षण सम्बन्धी अन्य कृयाकलापहरू छुट्याईएको बजेट एक रुपियाँ पनि खर्च भएन भने सोहि कार्यक्रमको लागि आ.ब.२०७७/७८ मा विनियोजित बजेटको ८७ % खर्च भएको देखिन्छ । खोलाखोल्सी व्यवस्थापन, जडिबुटी तथा गैह्र काष्ठ वनस्पति विकास , भू-तयहा जलाधार व्यवस्थापनमा वित्तीय प्रगति कम भएपनि वन, वन्यजन्तु, जैविक विविधता संरक्षण तथा व्यवस्थापन कार्यक्रमको वित्तीय प्रगति पछिल्ला २ वर्षमा आशालाग्दो देखिएको छ ।

**वन संरक्षण र विकास**

५ दशक अघिसम्म लुम्बिनी प्रदेशको तराईमा नेपालकै घना वन रहेको थियो । तर २०६० सम्म आईपुग्दा यो क्षेत्रको वन धेरै नासिएको छ । वन श्रोत सर्वेक्षण अनुसार २०७१ सम्ममा लुम्बिनी प्रदेशका तराईका ६ जिल्लाहरुमा ३१,१०० हेक्टर वन अतिक्रमणमा परेको थियो । विभिन्न नाममा वन कब्जा गर्ने काम अहिलेपनि रोकिएको छैन । यति ठुलो क्षेत्रको वन अतिक्रमणमा परेको र प्रदेश सरकारको नीति तथा कार्यक्रममा वन अतिक्रमण हटाउने कुराहरु आएपनि ५ वर्षे अवधिमा करिब ४०० हेक्टर मात्र वन अतिक्रमण हटाएको मन्त्रालयका वार्षिक प्रतिवेदनहरुले देखाउछन् । पछिल्ला ५ वर्षमा वन मन्त्रालय मातहतका नर्सरीहरुले मात्र एक करोड भन्दा बढी विरुवाहरु उत्पादन गरेको प्रदेश सरकारका प्रतिवेदनहरुले देखाउछन् । तर कति विरुवा वितरण गरियो ? ति विरुवाहरु कहाँ रोपीए र कति हुर्किए भन्ने कुराको जानकारी मन्त्रालयलाई नै छैन । मन्त्रालय मातहतका निकायहरुले आ.ब. २०७६/७७ मा ५३२ हेक्टर, आ.ब. २०७७/७८ मा ६६५ हेक्टर र आ.ब. २०७८/७९ मा ६४५ हेक्टरमा वृक्षारोपण गरेको देखिन्छ । २०७८ असारमा वृक्षारोपण दिवसको अवसर पारेर प्रदेशमा एकै दिन एक लाख विरुवा रोपिएको थियो । त्यसैगरी आ.ब. २०७७/७८ मा प्रदेशभर ३१७ हेक्टरमा टिमुर, तेजपात, अल्लो, चिउरी लगायतका विरुवा रोपेर पकेट क्षेत्र घोषणा गरिएको थियो भने आ.ब. २०७८/७९ मा तराईका ६ जिल्लाका ४३ स्थानीय तहमा नमूना कृषि वनको रुपमा ४५० हेक्टरमा वृक्षारोपण गरिएको थियो । नमूना कृषि वन कार्यक्रम वन क्षेत्र कम भएका ४८ वटा पालिकामा विस्तार गरिएको छ । यसले कस्तो प्रतिफल दिन्छ भन्ने हेर्न बाँकी नै छ । नियमित वृक्षारोपण बाहेक वितेका ५ वर्षमा सडक सौन्दर्यिकरण, जैविक छेकवार, भूक्षय नियन्त्रणको लागि वृक्षारोपण भएको देखिन्छ । प्रदेशमा हैसियत बिग्रिदै गएको वन क्षेत्रलाई हेर्दा ५ वर्षमा भएको वृक्षारोपण नगन्य हो । विगतमा पनि यस्ता वृक्षारोपण कार्यक्रम हुने तर पछि विरुवा हुर्काउन वास्ता नगर्ने प्रवृति देखिने गरेकोमा पछिल्लो समयमा वन मन्त्रालय मातहतका निकायहरुले वृक्षारोपण क्षेत्रको संरक्षण र विरुवा गोडमेलका कामहरु समेत गरेकोले केहि सिमित ठाउँमा भएका वृक्षारोपणले वन विकासमा टेवा पुग्ने देखिएको छ । प्रदेश सरकारले सुरु गरेको नमूना कृषि वन कार्यक्रम सफल भएमा वन कम भएका दक्षिणी क्षेत्रहरुमा समेत हरियाली हुने आशा गर्न सकिन्छ । चालु आर्थिक वर्षमा आर्थिक सामाजिक महत्वका वृक्षहरुको तालिकिकरण र संरक्षणका कार्यक्रमहरु प्रदेश सरकारले अघि सारेको छ । यसले मासिदै गएका बगैचा, चौपारी र सामाजिक-आर्थिक महत्वका विरुवाहरु संरक्षण गर्न र नागरिकले लाभ लिन मद्दत पुग्ने आशा गर्न सकिन्छ ।

लुम्बिनी प्रदेश सरकारले वैज्ञानिक वन व्यवस्थापनलाई महत्व दिएको थियो । यो कार्यक्रमबाट प्रदेश सरकारलाई खासै फाईदा नभएपनि विभिन्न नामबाट प्रदेशमा यो कार्यक्रम चलिरह्यो । संघीय सरकारले बैज्ञानिक वन व्यवस्थापन कार्यक्रम खारेज गरेपछि पछिल्लो समयमा वन संवर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन मापदण्ड ,२०७९ ल्याएर लुम्बिनी प्रदेश सरकारले बैज्ञानिक वन

व्यवस्थापनलाई निरन्तरता दिइरहेको छ । सरकारले यो अवधिमा सामुदायिक वन कार्यक्रमलाई सहयोग गर्न चाहेको देखिएन । साझेदारी वनले सरकारको साथ पाएपनि कबुलियत वन, निजि वन विकासको अवसर प्राप्त भएन । सरकारका नीति कार्यक्रममा वन उद्यमका योजनाहरु आएपनि नीतिगत अस्पष्टताले गर्दा सामुदायिक वन समुह र वन उद्यमीहरुले यसबाट लाभ लिन सकेनन । जैविक विविधता संरक्षणको लागि जैविक पार्क, बोटानिकल गार्डेन, हरबेरियम, जिन बैंक संचालन जस्ता कार्यक्रमहरुको घोषणा भएपनि व्यवहारमा आउन सकेनन् । . एउटा वनलाई अर्को वनसँग जोड्ने जैविक मार्ग निर्माण गर्ने कुरा पनि घोषणामा मात्र सिमित रह्यो । २०७९ असार ३२ मा जगदीशपुर जलाशयलाई पंक्षी आरक्ष घोषणा गरिएको छ । आरक्षको गुरुयोजना अनुसार काम भयो भने यसले जैविक विविधता र पर्यापर्यटनमा ठुलो मद्दत पुग्नेछ । मानव-वन्यजन्तु द्वन्द कम गर्नको लागि "पिडितसंग प्रदेश सरकार"सुरु गरिएको छ । वन्यजन्तुको कारण किसानहरु पिडित भई कृषि पेशा नै छोड्नु पर्ने अवस्था आएको बेलामा आएको यो कार्यक्रमले थोरै भएपनि मल्हम लगाउन सक्छ । वन डढेलो रोक्नको लागि वनमा खेर गएका पात पतिंगरबाट कम्पोस्ट मल बनाउने कार्यक्रमले वन संरक्षण र कृषि उत्पादन वृद्धिमा योगदान पुग्ने आशा गर्न सकिन्छ ।

**कानून निर्माणमा अग्रसर**

नेपालको संबिधान २०७२ को अनुसूची ६ ले प्रदेशभित्रको राष्ट्रिय वन, जल उपयोग तथा वातावरण व्यवस्थापनलाई प्रदेश सरकारको अधिकारको सुचिमा राखेपनि वन सम्बन्धि संघीय कानूनहरुमा रहेको अड्चनले गर्दा प्रदेशको वन मन्त्रालयले काम गर्न पाएको थिएन । संघीय वन ऐन २०७६ आएपछि बल्ल लुम्बिनी प्रदेशले वन सम्बन्धि कानूनहरु बनाउन थालेको थियो । यसै क्रममा वन तथा वातावरण मन्त्रालयले हालसम्म वातावरण संरक्षण ऐन र नियमावली २०७७, प्रदेश वन ऐन २०७८, प्रदेश वन नियमावली, २०७९, नदिजन्य पदार्थ व्यवस्थापन कार्यविधि २०७५, जगदीशपुर वर्ड स्यान्चुरी व्यवस्थापन योजना २०७९, वन पैदावार आपूर्ति समिति संचालन कार्यविधि २०७९, वन सम्बर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन मापदण्ड २०७९ तयार गरि कार्यान्वयनमा समेत आईसकेका छन् । वन र वन्यजन्तु, पर्यापर्यटन, वन्य उद्यम, जैविक विविधता संरक्षण जस्ता कुराहरुमा संघीय ऐन भन्दा प्रदेश वन ऐन धेरै व्यवहारिक देखिन्छ । वन तथा वातावरण मन्त्रालयले बनाएका यस्ता ऐन, नियम, निर्देशिका र मापदण्डले वन विकास र व्यवस्थापनमा मात्र नभएर वनबाट समृद्धिको लक्ष्यमा मद्दत गर्ने नै छन् ।

**प्रदेशको प्रथम आवधिक योजनासँगको तादाम्यता**

लुम्बिनी प्रदेश सरकारले आ.ब.२०७६/७७ देखि प्रदेशको प्रथम आवधिक योजना कार्यान्वयनमा ल्याएको छ । यो योजनामा जैविक विविधता र जलाधारको समुचित संरक्षण, व्यबस्थापन र सदुपयोगबाट वातावरणीय सन्तुलन कायम गर्दै वनपैदावारहरूको समूचित प्रयोगबाट रोजगारी र आयआर्जनमा वृद्धिगर्ने लक्ष्य निर्धारण गरिएको छ । यस अन्तर्गत ५ वटा रणनीतिहरु रहेका छन् । पहिलो रणनीति अन्तर्गतका प्रदेशअन्तर्गतका वनहरूको लगत तयार पार्ने र वन अपराधका कृयाकलाप नियन्त्रण गर्न आवश्यक संयन्त्र तयार गर्ने काम भएका छैनन् । दोश्रो रणनीति अन्तर्गतको कृषि तथा वागबानी वनको अवधारणा अनुरुप वनमा आधारित उपभोग्य वस्तुहरू उत्पादन गर्ने , तेश्रो रणनीति अन्तर्गतको स्थानीय तह तथा निजीक्षेत्रसंगको समन्वयमा जैविक विविधता सम्बन्धी प्रादेशिक सङ्ग्रहालय, वनस्पति उद्यान र चिडियाखाना स्थापना गर्ने, प्रदेशस्तरमा संरक्षण क्षेत्र र चरन क्षेत्रको व्यवस्थापन गर्ने कार्यनीति अनुसारका कामहरु भएको देखिदैन । चौथो रणनीतिमा रहेको जैविक प्रविधिको प्रयोग गरी जैविक विविधताको संरक्षणसंगै मूल्यबान रसायनहरूको उत्पादन सुरु गर्ने कामको थालनी नै भएको छैन । योजनाको कार्यनीतिमा भएका वन डढेलो नियन्त्रण, वृक्षारोपण, सडक किनारा हरियाली प्रवर्द्धन, नदि उकास जग्गामा हरियाली, तालतलैया संरक्षणका केहि कामहरुको सुरुवात भने भएको छ । आउदा २ वर्षमा प्रदेश वन मन्त्रालयले के कस्तो काम गर्छ त्यसले प्रदेशको आवधिक योजनाका लक्ष्यहरु हासिल हुने कि नहुने भन्ने कुराको निर्धारण गर्नेछन् ।

<u>बुटवल टुडे, १५ माघ २०७९ बाट</u>

# Five years of Lumbini province Government in the forest sector

Yubaraj Kandel
yrkandel@gmail.com

*Summary*

The Ministry of Industry, Tourism, Forestry, and Environment was established to oversee the management of forests in the province, following the redistribution of responsibilities among ministries on Baisakh 6, 2078. In the initial years of its formation, the ministry appeared to prioritize tourism and industry over forest conservation. However, in recent years, there has been a noticeable improvement in the financial progress of the Ministry of Forests and Environment compared to other provincial ministries. While there have been challenges in areas such as stream management, vegetation development, and land management, the ministry has shown promising results in forest conservation, wildlife protection, and biological diversity management programs. In the past five years, efforts have been made to plant trees for various purposes, including beautification of roads, organic fencing, and erosion control. The state government has also taken steps to catalog and protect trees of social significance, which is expected to safeguard important plant species and benefit the community. Despite the inclusion of forest enterprise plans in government policies, there have been issues with policy clarity, hindering the ability of community forest groups and entrepreneurs to fully utilize these opportunities. Efforts to protect biological diversity have included the establishment of biological parks, botanical gardens, and herbariums, although progress in these areas has been limited. The Ministry has introduced key legislation such as the Environment Protection Act and Regulations 2077, Provincial Forestry Act 2078, and Provincial Forestry Regulations 2079. Initiatives such as forest fire control, tree planting campaigns, roadside greening projects, and riverbed restoration have been implemented as part of the first plan strategy. Moving forward, the Ministry remains committed to promoting sustainable forest management practices and biodiversity conservation for the benefit of all citizens.

Butwal Today, 29 January 2023

# लुम्बिनी प्रदेशमा डढेलोको फैलावट र असर

Dimentions and Impact of Forest Fires in Lumbini Province

युवराज कंडेल

*हाम्रो जस्तो भौगोलिक अवस्था र साधनश्रोत भएको ठाउँमा डढेलो लागेपछि नियन्त्रण गर्ने भन्दा डढेलो लाग्ने नदिने पुर्व तयारिले मात्र डढेलोको क्षति कम गर्न सकिन्छ । डढेलो लाग्ने सम्भाव्य कारणहरु बेलैमा नियन्त्रण गर्ने, वनमा अग्नि रेखा निर्माण गर्ने वन सरसफाई गर्ने, वनमा पानीका श्रोतहरुको संरक्षण गर्ने, नयाँ पोखरीहरु निर्माण गर्ने जस्ता कामहरु गर्न सकेमा वनलाई डढेलो लाग्नबाट जोगाउन सकिनेछ ।*

सन् २०२३ निकै तातो वर्ष रह्यो. मनसुन सकिएपछी हिउँदे वर्षा हुनुपर्नेमा पश्चिमका केहि ठाउँमा बाहेक मध्य र पूर्वी नेपालमा हिउँदे वर्षा भएन । तापक्रम वृद्धि हुनु र वर्षा नहुनु जस्ता कारणले गर्दा जताततै सुख्खापन बढेको छ । यहि कारण फाल्गुनको मध्यदेखि नै नेपालमा डढेलो र आगलागीका खबरहरु आईरहेका छन् । फाल्गुन महीनामा  पूर्वी क्षेत्रमा देखिएको वन डढेलो चैत्रको पहिलो सातादेखि क्रमश पश्चिमतर्फ सर्दै गएको छ । तराईका वनमा केहि कम भएपनि लुम्बिनी प्रदेश लगायत पश्चिमका चुरे र महाभारत क्षेत्रमा डढेलो बढी देखिन थालेको छ.

लुम्बिनी प्रदेशको चुरेमा प्रदेशको ४५ प्रतिशत ( ४२४.२ हजार हेक्टर) र मध्य पहाडमा ३४ प्रतिशत (३२३.३६ हजार हेक्टर) वन रहेको छ । वन तथा भूसंरक्षण विभाग र ईसिमोडले २०१९ गरेको एक अध्ययन अनुसार डढेलोका हिसाबले नेपालका १३ जिल्ला अति संवेदनशील र ११ जिल्ला संवेदनशील देखिएका छन् । अति संवेदनशील जिल्लामा लुम्बिनी प्रदेशका बर्दिया, बाँके , अर्घाखाँची र पाल्पा छन् भने संवेदनशील जिल्लामा दाङ, प्युठान र नवलपरासी ( पश्चिम) रहेका छन् । वन तथा भू संरक्षण विभागको वन डढेलो पहिचान तथा अनुगमन प्रणालीबाट प्राप्त दैनिक डढेलो प्रतिवेदनलाई विश्लेषण गर्दा सन् २०१३ देखि सन् २०२४ मार्च १९ सम्मको अवधिमा लुम्बिनी प्रदेशका विभिन्न वनहरुमा (राष्ट्रिय निकुञ्ज समेत) ७ हजार १४३ पटक डढेलोका घटना रेकर्ड गरिएको थियो । यो अवधीमा बर्दिया,बाँके, दाङ र प्युठानमा बढी डढेलो लागेको देखिन्छ । प्रदेशमै सबैभन्दा धेरै डढेलो संरक्षण क्षेत्रभित्रका वनमा लाग्ने गरेको छ । पछिल्लो १० वर्षमा मात्र बर्दिया राष्ट्रिय निकुन्ज र यसको मध्यवर्ती क्षेत्रमा १६४२ पटक र बाँके राष्ट्रिय निकुन्जमा ४४४ पटक डढेलो लागेको वन डढेलो पहिचान तथा अनुगमन प्रणालीको डेटाबेसले देखाउछ ।

डढेलो सम्बन्धि तथ्यांकहरुलाई केलाउदा तराई र तराईसँग जोडिएका चुरे पहाडमा बढी डढेलो लाग्ने गरेको देखिन्छ । अहिले प्रदेशको अधिकांश वन महेन्द्र राजमार्गदेखि उत्तरको भावर र चुरे क्षेत्रका पालिकाहरुमा रहेको छ. । यहि क्षेत्रको वनमा नै दोहोरिएर वर्षेनी डढेलो लाग्ने गरेको देखिन्छ । बाँकेको राप्ति सोनारी, दाङ्गको राजपुर, बबई र गढवा, अर्घाखाचीको शितगंगा, कपिलवस्तुको शिवराज, नवलपरासीको सुनवल, रुपन्देहीको देवदह नगरपालिकामा सबैभन्दा धेरै डढेलो लागेको तथ्यांक छ । दाङ्गको देउखुरी क्षेत्रका वनहरुमा पछिल्लो ३ वर्षमा डढेलोको मात्रा र फैलावटमा वृद्धि आएको देखिन्छ । तराई र चुरेमा मात्र नभएर प्रदेशको एकमात्र हिमाली जिल्ला रुकुम पुर्व र उच्च पहाडी जिल्ला रोल्पामा समेत डढेलोको संख्या बढ्दै गएको छ

। प्रदेशकै सबैभन्दा उच्च क्षेत्रमा पर्ने र चिसो भैरहने पुथा उत्तरगंगा पालिका तथा रुकुमको ढोरपाटन शिकार आरक्ष जोडिएको भूभागमा वर्षेनी डढेलोका तथ्यांकहरू चिन्ताजनक रुपमा बढिरहेका छन । न्यून वर्षा र बढ्दो तापक्रम वृद्धिले गर्दा अचेल डढेलो चुरेदेखी क्रमश उकालिदै गएको देखिन्छ, प्रकृतिको लागि यो घातक संकेत हो ।

लुम्बिनी प्रदेशको अधिकांश वन यहाँका राजमार्गहरुको दाया बाँया रहेको छ, जुन क्षेत्र मानव बसोबास र यातायातको उच्च चाप भएको क्षेत्र हो । यहाँका वन क्षेत्रका सडक किनारा प्लास्टिकजन्य फोहरले ढाकिएको देखिन्छ, यस्ता फोहर प्रज्वलनशील हुने भएकोले वन क्षेत्रमा यात्रा गर्दा यात्रुहरुले ननिभाई फालेका चुरोटको ठुटा फोहरमा सल्किएर आगलागी हुने गरेको देखिन्छ । शिकार गर्नको लागि लुकिछिपी वनमा आगो लगाउने, वस्तीमा आगलागी हुने डरले वनमा सानो आगो लगाएर जोखिम घटाउन खोज्दा ननिभेको आगो वनमा फैलिएर डढेलोको रुप लिने गरेको समेत देखिन्छ । चुरे क्षेत्रमा अति सुख्खा हुने र सुकेका बाबियो, खर प्रसस्त हुने भएकोले प्राकृतिक कारणबाट उत्पन्न हुने सानो फिल्काले पनि वन डढेको देखिन्छ । शिवालिक र महाभारत क्षेत्रमा मानिसको बस्ति पातलिदै जादा वनमा सुकेका घाँस दाउराहरू थुप्रने, झाडी बढ्ने क्रम बढ्दो छ, यसले पनि डढेलो बढ्नुमा महत्वपूर्ण भूमिका खेलेको छ । जलवायु परिवर्तनको कारण तातो, सुख्खापन बढ्दै गएकोले डढेलो क्रमश हिमाली भेगतर्फ सर्दै गएको छ । लामो समय पानी नपरेकोले मात्र हैन, वन क्षेत्रमा रहेका खोला, खोल्सा, तालतलैयाहरु सुक्दै र पुरिदै गएकोले पनि वन क्षेत्र सुख्खा भैरहेको छ । पहाडी र चुरे क्षेत्रमा जनघनत्व र वनप्रतिको जनचासो घट्दा पनि डढेलो लागेपछि तत्कालै नियन्त्रण गर्न कठिन भैरहेको छ । मन्त्रालय र डिभिजन वन कार्यालयले गर्ने कार्यक्रमहरु शहरमुखी र प्रचारमुखी मात्र हुने तथा सबडिभिजन र सामुदायिक वन समूहहरुले बजेट तथा जनशक्तिको कमीले गर्दा डढेलो विरुद्धको पुर्व तयारि, डढेलो लागिसकेपछि नियन्त्रण र पुनर्स्थापनामा कामहरु गर्न सकिरहेका छैनन् । यसले गर्दा डढेलोको जोखिम र क्षतिको मात्र बढ्दै गएको छ ।

डढेलो रोकथाम र नियन्त्रणलाई वन मन्त्रालय मातहतका डिभिजन कार्यालयहरुको मुख्य जिम्मेवारी मानिन्छ । वन डिभिजन कार्यालयहरुलाई लक्षित गरेर हरेक वर्ष लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयले वार्षिक कार्यक्रमहरु बनाउदै आएको पाइन्छ । वन मन्त्रालयका कार्यक्रमहरुमा डिभिजन वन कार्यालयको समग्र कार्यक्षेत्रलाई वन डढेलो संवेदनशीलताको आधारमा जोखिम नक्सा प्रकाशन, पहिचान भएको जोखिमयुक्त क्षेत्रमा डढेलो नियन्त्रण सञ्जाल गठन, सञ्जाल सवलिकरण, वन डढेलो अभिमुखीकरण, डढेलो पूर्व तयारी तथा सञ्जाल परिचालन जस्ता कार्यहरु गर्ने कुरालाई प्राथमिकतामा राखिएको छ । यसैगरी वन डढेलोको उच्च जोखिम भएका संवेदनशील क्षेत्रमा स्वीकृत वन व्यवस्थापन कार्ययोजना अनुसार स्थायी अग्निरेखा निर्माण गर्ने, हाल कायम रहेका अग्निरेखाहरुको मर्मत तथा सरसफाई गर्ने, डढेलो नियन्त्रण सम्बन्धि विद्यालय शिक्षा कार्यक्रम संचालन गर्ने, सहभागीतामूलक वन डढेलो नियन्त्रण र रोकथाम कार्यक्रम गरिने र वन डढेलो विरुद्धको सप्ताह मनाउने मन्त्रालयको वार्षिक कार्यक्रम पनि हुने गरेका छन् । वन क्षेत्रमा खेर गैरहेको र बनमा रहेका ज्वलनशिल पदार्थबाट प्राङ्गारिक मल उत्पादन गर्ने उद्यम सञ्चालन गरी वन डढेलोको जोखिम न्यूनीकरण र आयआर्जनमा वृद्धी योजना वन मन्त्रालयको पुरानै योजना हो । वनमा पोखरी निर्माण, वृक्षारोपण जस्ता कार्यक्रमहरु पनि सरकारी स्तरबाट भएको देखिन्छ । यसैगरी सामुदायिक वन समुहहरुले पनि आफ्ना कार्ययोजनामा वन डढेलो नियन्त्रणका कार्यक्रमहरु समावेश गरेर कार्य गर्दै आएका छन् । तर यस्ता कार्यक्रमहरुले वन डढेलो घटाउने काममा प्रभावकारी हुन सकेको देखिदैन ।




देशको समग्र तथ्यांकलाई हेर्दा वन क्षतिमा १३ प्रतिशत हिस्सा वन डढेलोको देखिन्छ । एकपटक डढेलोले खाएको वन पुनर्स्थापना गर्न निकै कठिन हुन्छ । डढेलो लाग्दा रुख, काठ दाउरा मात्र नष्ट हुदैनन्, महत्वपूर्ण जैविक विविधता पनि फिर्ता ल्याउने नसक्ने गरि नाश हुन्छन् । डढेलोले जमिन सुख्खा र खुकुलो बनाउने भएकोले डढेलो लागेको वनमा भूक्षयको डर बढी हुन्छ । डढेलो लाग्दा बाँदर, बँदेल जस्ता ठुला वन्यजन्तुहरु मध्ये केहि किसानहरुको खेतबारीमा आश्रय लिन पुग्छन, जसले गर्दा किसान-वन्यजन्तु द्वन्द बढ्दै जान्छ । अहिले बसाईसराईले गर्दा वन र वनसँग जोडिएका खेतबारीमा झाडी र घाँसपात भरिएको छ. जसले गर्दा वनमा लागेको डढेलो सजिलैसंग वस्तीमा पुगेर ठुलो धनजनको क्षति हुने क्रम बढ्दो छ ।

पहाडी क्षेत्रबाट बसाईसराई गरि अन्यत्र जानुमा डढेलोको डर पनि प्रमुख कारण बन्न थालिसकेको छ । डढेलो लाग्दा वन नजिक रहेका बर्दघाट, सुनवल, बुटवल, सैनामैना, जितपुर, गोरुसिंगे, चन्द्रौटा, भालुवांग, लमही, घोराही, तुलसीपुर, कोहलपुर जस्ता घना वस्तीहरुमा लामो समयसम्म वायु प्रदुषण हुने गरेको छ । यस्ता समस्याहरु वन डढेलो लागेपछि कुनैपनि उपायले समाधान गर्न सकिदैन् ।

हाम्रो जस्तो भौगोलिक अवस्था र साधनश्रोत भएको ठाउँमा डढेलो लागेपछि नियन्त्रण गर्ने भन्दा डढेलो लाग्ने नदिने पुर्व तयारिले मात्र डढेलोको क्षति कम गर्न सकिन्छ । डढेलो लाग्ने सम्भाव्य कारणहरु बेलैमा नियन्त्रण गर्ने, वनमा अग्नि रेखा निर्माण गर्ने वन सरसफाई गर्ने, वनमा पानीका श्रोतहरुको संरक्षण गर्ने, नयाँ पोखरीहरु निर्माण गर्ने जस्ता कामहरु गर्न सकेमा वनलाई डढेलो लाग्नबाट जोगाउन सकिनेछ । यस्ता कामहरु जनसहभागितामा स्थानीय सरकार र सामुदायिक वन समुहहरुले नै गर्न सक्ने भएकोले बेलैमा ध्यान दिनु आवस्यक छ ।

बुटवल टुडे, २०८० चैत्र ८ बाट

# Dimentions and Impact of Forest Fires in Lumbini Province

Yubaraj Kandel

According to  study conducted by the Forest and Land Conservation Department and ICIMOD in 2019 identified Bardiya, Banke, Arghakhanchi, and Palpa in Lumbini province as highly sensitive districts prone to fires. Additionally, Dang, Pyuthan, and Nawalparasi (West) were classified as sensitive districts. The data revealed a pattern of repeated fires in Keluda Terai and Chure hills connected to Terai. The number of fires is on the rise not only in Terai and Chure, but also in Rukum East, the sole Himalayan district of the province, and Rolpa, a high mountain district. The escalating temperatures and decreasing rainfall indicate a concerning trend of fires spreading from Chure, posing a significant threat to the environment. Factors such as littering in forest areas, human negligence, and inadequate forest maintenance have contributed to the escalation of forest fires. Climate change, rising temperatures, drought, and watershed destruction have led to the drying of forest areas. Despite waning public interest in forest conservation, immediate fire control has become increasingly challenging. The Ministry and Division Forest Office's initiatives have been primarily focused on urban areas and propaganda, while the lack of funding and manpower has hindered the ability of subdivision and community forest groups to prepare for, control, and rehabilitate post-fire situations. Consequently, the risk of fires and associated damages continues to mount. Forest fires not only result in irreversible destruction of vital biological diversity but also heighten the risk of drought in affected areas. The displacement of wildlife into agricultural lands during fires exacerbates conflicts between farmers and wild animals. Furthermore, fires contribute to long-term air pollution in densely populated regions. Once a forest fire occurs, the damage is often irreparable. The key to mitigating fire damage lies in proactive measures to prevent fires rather than reactive strategies to control them post-incident. Preparing adequately to avert fires is crucial in safeguarding our forests and ecosystems.

21 March 2024, Butwal Today

# डढेलोको जोखिम घटाउन पूर्वतयारी

## Preparedness to Reduce Forest Fire Risk

युबराज कंडेल

*डढेलो व्यवस्थापन रणनीतिमा उल्लेख भए अनुसार डढेलो सम्बन्धि ठुला गोष्ठि, प्रचारप्रसार र अनुसन्धान नगरेपनि डढेलो व्यवस्थापन गर्न सकिन्छ । डढेलो व्यवस्थापन अन्तर्गत दुई किसिमका कार्यहरु गर्नु पर्दछ( -डढेलो सम्भाव्य अवस्थाको नियन्त्रण र क्षति न्यूनीकरण । डढेलो उत्पन्नै हुन नदिनु डढेलो व्यवस्थापनको आधारभूत कार्य हो । वनमा फोहरमैला फ्याँक्न नदिने तथा जंगलमा सिमाना जोडिएका खेतवारीमा आगो बाल्न नदिएर वन डढेलो लाग्ने सम्भावनालाई घटाउन सकिन्छ । कहिलेकाही सावधानी अपनाउदा पनि डढेलो लाग्ने सम्भावना हुन्छ । यस्तो अवस्थामा जंगलमा आगो फैलिन नदिने कुरामा ध्यान दिनुपर्छ. ।*

नेपालमा हरेक वर्ष जाडोयाम सकिन थाले लगत्तै वन डढेलोका घटनाहरु बढ्ने गरेका छन् । वन मन्त्रालय अन्तर्गतको डढेलो सुचना केन्द्रका दैनिक प्रतिवेदन अनुसार माघ महिना यता मात्र देशका पहाडी र उच्च पहाडी भूभागमा एक दर्जन वनहरुमा डढेलो लागि सकेको छ । विगतमा  तराई र चुरे पर्वतमा हरेक वर्ष डढेलोका घटनाहरु दोहोरिने भएपनि पछिल्ला वर्षहरुमा उच्च पहाडी र हिमाली क्षेत्रमा समेत डढेलो लाग्ने गरेको भेटिन्छ । वन मन्त्रालयका अनुसार तराईका ९० प्रतिशत वनहरू डढेलोको उच्च जोखिममा रहेका छन् । पहाडी क्षेत्रका सल्लाघारी र खरवारी भएका वनहरू पनि पछिल्ला वर्षहरुमा निरन्तर डढेलोको चपेटामा परिरहेका छन् । गतवर्ष बैशाष महिनाको अघिल्ला दुईसातामा मात्र नेपालको १३ लाख हेक्टर वन भिषण डढेलोले खाएको रिपोर्ट सार्वजनिक भएको थियो । छिटपुट वर्षा बाहेक यो वर्ष असोज महिनापछि नेपालमा पानी नपरेकोले यो वर्ष वन क्षत्र बढि सुख्खा हुने र गत वर्ष भन्दा बढि डढेलो लाग्ने संभावना देखिएको छ ।

अधिकांश डढेलोहरु मानवीय स्वार्थ र लापरवाहीले लाग्ने गरेका छन् । ग्लोबल फायर मनिटरिंग सेन्टरका अनुसार नेपालमा लाग्ने डढेलोहरु ५८ प्रतिशत जानाजानी वा स्वार्थवश, २२ प्रतिशत लापरवाही र २० प्रतिशत दुर्घटना वा प्राकृतिक कारणले हुने गरेका छन् । नेपालमा वन प्रतिको सचेतनाको कमि र अज्ञानताको कारणले गर्दा डढेलो लाग्ने गरेको छ । वन्यजन्तुको शिकार गर्दा आगोको छेकवार लगाउने, दाउराको लागी आगो लगाएर रूख सुकाउने र वन फँडानीका प्रमाणहरु नष्ट गर्न डढेलो लगाएको पाईन्छ । डढेलो लागेको ठाउँमा नयाँ घाँस राम्ररी उम्रने र च्याउ तथा जडिबुटि उत्पादन राम्रो हुने विस्वासमा मानिसहरुले जानीजानी जंगलमा डढेलो लगाउने गर्दछन् । कतिपय मानिसहरुले खेतवारिका झारपात हटाऊन्, खरवारी सफा गर्न र वन अतिक्रमण गर्न लगाएको आगो अनियन्त्रित भएर ठुलो डढेलोको रुप लिने गरेको पाईन्छ । घुम्रपानकर्ताले चुरोट बिँडीको ठूटो ननिभाई खरवारी वा वनमा फाल्दा र वनभोज खाएको आगो ननिभाई छोड्दा त्यो आगो घाँस दाउरामा सल्किएर डढेलोको रुप लिने गरेको छ ।

अहिले नेपालका नगर र नगरोन्मुख वस्ती छेउछाउका जंगलहरु अघोषित डम्पिंग साइट बनिरहेका छन् । जंगलमा फ्याँकिएका

फोहरमैलामा प्लास्टिकजन्य पदार्थहरु, कागज, कपडा जस्ता बस्तुहरु लगायत उच्च प्रज्वलनशील पदार्थहरु समेत हुन्छन् । यस्ता पदार्थहरुमा आजको झिल्का पर्नासाथ बल्ने र स्वप्रज्वलित समेत हुन्छन् । जंगलमा जति बढी फोहरमैला फैलिएको हुन्छ त्यति नै डढेलो बढ्दै जान्छ र फोहरमैंलामा सल्किएको आगो लामो समयसम्म ननिभ्ने भएकोले वन डढेलो दोहोरिने खतरा धेरै हुन्छ ।कहिलेकाँही दुर्घटनावश पनि डढेलो लाग्ने गर्छ । प्राकृतिक कारणहरु, जस्तै चट्यांग पर्दा, सुकेका रुखहरु बिच घर्षण हुँदा र ढुंगाहरु एक आपसमा ठक्कर खादा, जंगलको बीचबाट लागिएको बिद्युत प्रशारणमा बिद्युत सर्ट हुँदा वा स्पर्किंग हुँदा आगोको झिल्का झारपातमा सल्किदा घना र सुकेका रुखहरु भएको जंगलमा डढेलो लाग्ने सम्भावना रहेपनि नेपालमा यस्ता कारणहरुको पैभाव नगण्य मात्रामा हुने गरेको छ ।

डढेलोको कारणले नया बिरुवाहरु हुर्कन बढ्न नपाउने, पुराना बिरुवाहरु सुक्दै जाने र जमिन सुख्खा भएर नयाँ बिरुवा उम्रन नसक्ने प्रक्रिया केहि वर्ष दोहोरिईरहदा जंगल उजडिदै जान्छ र अन्ततः जंगलमा मरुभूमिकरण प्रक्रिया सुरु हुन्छ । डढेलो लाग्दा वन्यजन्तुको वासस्थान र चरनक्षेत्र विनाश हुन्छ । डढेलोबाट जीवहरू जोगिन सक्दैनन नै डढेलो लाग्दा हुर्कदै गरेका जीवजन्तुहरु पनि गुँड र वासस्थान संगै जलेर खरानी हुन पुग्छन् । डढेलोलाई विस्वमा हरितगृह प्रभाव उत्पन्न गर्ने प्रमुख कारक तत्व मानिन्छ । डढेलो लाग्दा प्रसस्त मात्रामा कार्बनडाइअक्साइड ग्याँस निस्कने हुदा यसले विस्वव्यापी ऊष्णिकरणलाइ सघाइरहेको छ । डढेलोको कारणबाट जलाधार क्षेत्र सुख्खा हुन् गई नेपालका कतिपय पहाडी क्षेत्रका वस्तीहरुमा खानेपानी समस्या समेत उत्पन्न भैरहेको छ ।

नेपालमा हरेक वर्ष डढेलोमा परेर हजारौ हेक्टर जंगल स्वाहा भएपछि वन संरक्षण सम्बन्धि सरकारी र गैह्रसरकारी निकायहरु डढेलो नियान्त्रनका लागि सलबलाएको भेटिन्छ । जंगलमा आगो सल्किएपछि डढेलो रोकथामको लागि जनचेतनामुलक कार्यक्रमहरु गर्ने, गोष्ठि र प्रवचनहरु गर्ने, र्‍याली निकाल्ने जस्ता कामहरु गरेको पाईन्छ । जंगल सल्किएपछि सुरु गरिने यस्ता कार्यक्रमहरु रकम सक्ने खेल बाहेक अरु केहि हुन् सकेको छैन । नेपालमा डढेलो रोकथाम गर्ने कानूनी व्यवस्था नभएको पनि हैन । मूलुकी ऐन, २०२०मा आगो लगाउनेको महलमा यसलाई फौजदारी अभियोगको रुपमा लिइएको छ । त्यस्तै वन ऐन, २०४९ र राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण ऐन, २०२९ ले वनमा आगो लगाउन वा आगो लाग्न सक्ने क्रियाकलापहरु गर्न वन्देज लगाई कानूनी अपराधको रुपमा लिई कैद सजाय र दण्ड जरिवाना समेतको प्रावधान राखेको भए पनि वनक्षेत्रको व्यापकता, स्रोत साधनको अभाव र सर्वसाधारणको लापरवाहीले गर्दा वनडढेलो नियन्त्रणमा आउन सकेको छैन । सामुदायिक वन, सरकारद्धारा व्यवस्थित वन, कवुलियती वन, र संरक्षित क्षेत्रको व्यवस्थापनका कार्य योजनाहरुमा डढेलो व्यवस्थापनको विषयवस्तुहरुलाई यथेष्ट रुपमा सम्बोधन गरेको पाइदैन भने व्यवस्था गरेकै अवस्थामा पनि प्रभावकारी रुपमा कार्यान्वयनमा आउन सकेको छैन ।

वर्षेनी लाखौ रकम खर्च गर्दा पनि डढेलो नियन्त्रण हुन नसक्नुमा डढेलो सम्बन्धि नीतिगत व्यवस्था र अभ्यासहरुमै त्रृटी भएको प्रस्टै देखिन्छ । विस्वब्यापी ऊष्णिकरणको कारणले हरेक वर्ष ताता दिनहरु बढ्दै डढेलोको जोखिम बढिरहेको तथा डढेलो नियन्त्रण गर्ने एकीकृत र व्यवहारिक प्रयासहरु हुन नसक्दा डढेलोबाट ठूलो नोक्सान हुने क्रम बढेकोले सार्थक रूपमै डढेलो नियन्त्रण गर्नको लागि नेपाल सरकारले डढेलो नियन्त्रण रणनीति २०६७ समेत ल्याएको छ । डढेलोबाट हुने जन, धन, वन, जैविक विविधता तथा पारिस्थिकीय प्रणालीको क्षतिलाई न्यूनीकरण गर्दै यसको उचित व्यवस्थापनबाट वनको उत्पादकत्वमा टेवा पुर्याउने लक्ष्य निएको यो रणनीतिमा डढेलो व्यवस्थापन रणनीति अन्तर्गत डढेलो निरोधात्मक रणनीति र डढेलो नियन्त्रण रणनीति अघि सारिएको छ । डढेलो नियन्त्रण

गर्न भनेर ल्याइएको यो रणनीति व्यवहारिक भन्दापनि नीतिगत र अनुसंधानमूखी भएको कारणले रणनीति बनेको ६ वर्ष भैसक्दापनि डढेलो व्यवस्थापनका ठोस कार्यहरु हुन सकेका छैनन् ।

डढेलो व्यवस्थापन रणनीतिमा उल्लेख भए अनुसार डढेलो सम्बन्धि ठुला गोष्ठि, प्रचारप्रसार र अनुसन्धान नगरेपनि डढेलो व्यवस्थापन गर्न सकिन्छ । डढेलो व्यवस्थापन अन्तर्गत दुई किसिमका कार्यहरु गर्नु पर्दछ( -डढेलो सम्भाव्य अवस्थाको नियन्त्रण र क्षति न्यूनीकरण । डढेलो उत्पन्नै हुन नदिनु डढेलो व्यवस्थापनको आधारभूत कार्य हो । वनमा फोहरमैला फ्याँक्न नदिने तथा जंगलमा सिमाना जोडिएका खेतवारीमा आगो बाल्न नदिएर वन डढेलो लाग्ने सम्भावनालाई घटाउन सकिन्छ । कहिलेकाही सावधानी अपनाउदा पनि डढेलो लाग्ने सम्भावना हुन्छ । यस्तो अवस्थामा जंगलमा आगो फैलिन नदिने कुरामा ध्यान दिनुपर्छ । हिउँदमा रुखका पातहरु भुईमा झर्ने भएकोले डढेलोको लागि आधार तयार भैरहेको हुन्छ । अधिकांश सामुदायिक वन समुहहरुमा हिउदकै समयमा वनमा कटानी छटानिका कामहरु गरिन्छ । यी कार्य गर्दा वनमा त्यत्तिकै छोडिने हाँगाबिगा र पात पतिंगरले गर्दा वनमा ठुलो डढेलो लाग्ने गरेको पाईन्छ । गर्मि सुरु नहुदै जंगलभित्र रहेका झारपात , काटिएका हागाबिगा तथा सुकेका काठदाउरालाई नियमित रूपमा हटाउने र जंगल सरसफाई गर्नाले जंगलमा आगो फैलिनबाट रोक्न सकिन्छ ।

डढेलोको जोखिम धेरै भएका जंगलमा गर्मि याम सुरु नहुदै आगो फैलिन नदिन अग्नि नियन्त्रण रेखा बनाउनु राम्रो हुन्छ । वारम्बार डढेलो दोहोरीरहने जंगलको विचविचमा खालि बाटोजस्तो ठाउं ( फायर लाईन ) बनाएर र जंगल भित्र निश्चित दुरीमा एउटै रेखामा सदावहार विरुवा लगाएर ( ग्रीन लाईन ) जंगलको डढेलोलाई फैलिनबाट रोक्न सकिन्छ । तराइका वनका ताल तलैयाहरुलाइ जोगाउने तथा पहाडी क्षेत्रमा वनको सिरान ( माथील्लो सतह )मा पानि पोखरी बनाएर पानी संकलन गरेर राख्ने हो भने डढेलो लाग्दा नियन्त्रण गर्न सजिलो हुन्छ । गर्मि सुरु नहुदै यस्ता पुर्व तयारि गरियो भने डढेलोको सम्भावनालाई घटाउन सकिन्छ ।

डढेलो लागिसकेपछि नियन्त्रण गर्न निकै कठिन हुन्छ । धेरैजसो डढेलो रोक्न सकिने भएपनि पुर्व तयारीको कमीले गर्दा डढेलो नियन्त्रण भन्दा बाहिर गएर ठुलो मात्रामा धनजन तथा जैविक विविधताको विनास हुने गरेको छ । आगो लागेपछि कुवा खन्ने हतार भनेजस्तै नेपालमा डढेलोले वन खरानी भएपछि मात्र आगलागी नियन्त्रणका चर्चाहरु चल्छन र अरु बेलामा डढेलोको जोखिम तर्फ कमैको मात्र ध्यान जाने गर्छ । सबै वनहरुमा डढेलो लाग्न सक्ने भएकोले यसतर्फ सदैव चनाखो रहनु जरुरि छ । डढेलोबाट प्रत्यक्ष रुपमा वन नजिकका वासिन्दाहरु बढी प्रभावित हुने भएकोले डढेलो नियन्त्रणका पुर्व तयारीका कार्यहरु गर्न सरकारको मुख ताक्नु भन्दा स्थानीय जनताहरु नै बढी सक्रिय हुनु जरुरि छ ।

yrkandel@gmail.com

# Preparedness to Reduce Forest Fire Risk

Yubaraj Kandel

According to the Ministry of Forestry, 90 percent of the Terai forests are at high risk of fire. In recent years, the forests of Sallaghari and Kharwari have also been consistently plagued by fires. The majority of these fires are a result of human negligence, lack of awareness, and disregard for the forest environment. While some fires may occur accidentally, natural causes such as lightning strikes, friction between dry trees, and electrical shorts are minimal in Nepal. Despite efforts to raise public awareness, hold conferences, and conduct fire removal activities after fires have started, these initiatives have often been viewed as mere money-making schemes. Legal provisions for imprisonment and fines have not been effective in curbing forest fires due to the vastness of forested areas, limited resources, and public apathy in Nepal. It is evident that there are shortcomings in current policies and practices related to fire management, as even substantial financial investments have failed to bring fires under control.

Effective fire management involves two key components: preventing potential fire conditions and minimizing damage. The primary goal of fire management is to prevent fires from occurring in the first place, as once a fire ignites, it becomes extremely challenging to contain. While most fires are preventable, inadequate preparedness often leads to uncontrollable blazes that result in significant loss of resources and biodiversity. Local residents living near forests are directly impacted by fires, it is imperative for community members to take a proactive role in fire prevention efforts, surpassing the government's involvement. Collaborative efforts between government agencies, local communities, and environmental organizations are essential to effectively manage and mitigate the risks associated with forest fires in Nepal.

# वनमा बदलिएका प्रदेश नीति

## Changing Forest Policy and Programme of Lumbini Province

युवराज कंडेल

*प्रदेश सरकारले ल्याएका ६ वटा नीति कार्यक्रमहरुलाई हेर्दा सरकारले वन क्षेत्रमा के गर्ने भन्ने बारेमा अझैसम्म स्पष्ट नभएको प्रष्ट देखिन्छ । वन सम्बन्धि अधिकांश कुराहरु अरुको भरमा वा साझेदारीमा गर्ने भनिएको छ र यस्ता कतिपय कार्यक्रमहरुको सुरुवात समेत हुन सकेको छैनन् । जडिबुटी र गैह्र काष्ठ प्रजातिका वनस्पतिको खेतीको व्यवसायीकरण, वन्यजन्तु-मानव द्वन्द न्यूनीकरणको ठोस कार्ययोजना, पर्यापर्यटनको खाका, वृक्षारोपणको दिगोपन प्रदेश सरकारले सुनिस्चित गर्न सकेको छैन । वर्षेनी कार्यक्रमहरुको नाम, स्वरूप र कार्यान्वयन हुने स्थान बदलिदा कार्यक्रमहरु प्रभावकारी हुन सकेका छैनन् ।*

नीति तथा कार्यक्रम भनेको वर्षभरी सरकारले गर्ने मुख्यमुख्य कामको खाका र सरकारलाई मार्गदर्शन समेत हो । नीति तथा कार्यक्रममा टेकेर प्रदेश सरकारले बजेट ल्याउने र वार्षिक कार्यक्रमहरु संचालन गर्ने भएकोले आउदो वर्षमा सरकारले के कुरालाई प्राथमिकता दिएको रहेछ भनेर नागरिकलाई चासो हुने गर्छ. तर नेपालको सन्दर्भमा नीति कार्यक्रमा सरकारको कर्मकाण्डी गफ जस्तै भएका छन् । वास्तविक आवस्यकता र प्राथमिकता यकिन नगरी नागरिकलाई आशा देखाउनको लागि फूलबुट्टा भरेर कार्यक्रमहरु सार्वजनिक गर्ने तर त्यसै अनुसारको बजेट व्यवस्थापन नगर्ने, नीति तथा कार्यक्रमहरुमा तालमेल नहुनेगरी वर्षेनी परिवर्तन गरि नयानया नारा ल्याउने तर आफैले घोषणा गरेका नीति तथा कार्यक्रमहरु कति सफल भए भन्ने कुरामा सरकारको ध्यान नजाने भएकोले हरेक वर्ष धेरै नीति तथा कार्यक्रमहरु झुटका पुलिन्दा जस्ता हुने गरेका छन् ।

लुम्बिनी प्रदेशको झन्डै आधा भूभाग वनले ओगटेको छ । प्रदेशको पर्यटन, जलश्रोत र जनजिविकासंग प्रत्यक्ष रुपमा वन जोडिएको छ । वनमा प्रदेशको समृद्धिका थुप्रै सम्भावनाहरु रहेका छन् । तर बढ्दो शहरीकरण, सुकुम्बासी समस्या, मानव-वन्यजन्तु द्वन्द , अनियन्त्रित विकास निर्माण कार्य, वनमा वर्षेनी बढ्दै गएको डढेलोको ग्राफ जस्ता कारणले गर्दा वनमा चुनौतिहरु समेत धेरै छन् । वन क्षेत्रमा देखिएका चुनौतिहरु सामना गर्दै वनलाई प्रदेशको समृद्धिको आधार बनाउन भन्दै लुम्बिनी प्रदेश सरकार स्थापना भएदेखि नै सरकारका हरेक नीति तथा कार्यक्रमहरुमा वन सम्बन्धि नयाँनयाँ कुराहरु आईरहेका छन् । प्रस्तुत लेखमा ६ वटा वन सम्बन्धि नीति कार्यक्रमहरुको समिक्षा गर्ने प्रयास गरिएको छ ।

**आ.ब. २०७५/७६**

प्रदेश सरकारको पहिलो वार्षिक नीति कार्यक्रममा प्रदेशको वन सम्बन्धि नीति कानून निर्माण गर्ने, वैज्ञानिक वन व्यवस्थापन लागू गरेर काठ उत्पादन वृद्धि गर्ने, वैज्ञानिक वन व्यवस्थापन कार्यान्वयन गर्न नसकिने वन क्षेत्रहरुलाई जलाधार व्यवस्थापन, जैविक विविधता संरक्षण, पर्यटनको प्रयोजनमा उपयोग गरिने, जडिबुटी तथा गैह्र काष्ठ पैदावारको व्यवसायिक खेतीमा प्रोत्साहन गर्ने र त्यो वर्ष २ वटा जडिबुटी प्रसोधन केन्द्र स्थापना गर्ने कुराहरु थिए । यसैगरी जगदिशपुर तालक्षेत्रमा "आगन्तुक चरा अध्ययन केन्द्र" र दाङस्थित नेपाल संस्कृत विश्वविद्यालसंगको सहकार्यमा जडिवुटी उद्यान स्थापना लगायत प्रदेशभित्रको भौगोलिक धरालतको अवस्था अनुसार वोटानीकल गार्डेन, जियोलोजिकल गार्डेन तथा जुलोजिकल गार्डेनहरु स्थापना गर्दै लैजाने कुराहरु वार्षिक नीति तथा कार्यक्रमका साथै डढेलो नियन्त्रण, वन अतिक्रमण हटाउने, भूस्खलन नियन्त्रण र जोखिम न्यूनीकरणका कुराहरु समेत थिए ।

**आ.ब. २०७६/७७**

आ.ब. २०७६/७७ को नीति कार्यक्रममा वनको बैज्ञानिक व्यवस्थापन गर्ने, वन सम्बन्धी नीतिगत र कानूनी व्यवस्था , डढेलो र अतिक्रमण नियन्त्रण गर्ने कुराहरु यथावत थिए । वनजन्य कच्चा पदार्थमा आधारित उद्योग संचालनमा प्रेरित गर्ने, प्रत्येक जिल्लामा जडिबुटी तथा सुगन्धित बनस्पतिको पकेट कार्यक्रम संचालन गर्ने तथा जटीबुटी प्रशोधन गरी आयुर्वेदिक एवम् एलोपेथिक औषधि कारखाना स्थापना र प्रादेशिक ब्रान्ड प्रदान गर्ने नीतिगत व्यवस्था गरी उद्योग संचालनका लागि निजी क्षेत्रलाई प्रेरित गर्ने, वनको बहुउपयोगको नीति अवलम्बन गर्दै खाली जग्गाहरुमा वृक्षारोपण अभियान संचालन, प्रादेशिक संग्रहालय,वनस्पति उद्यान, चिडियाखाना स्थापनाको कार्य सुरु गर्ने कुराहरु नीतिमा समेटिएका थिए । वनलाई कृषिसंग आवद्ध गर्दै प्रत्येक जिल्लामा कम्तीमा दुईवटा नमूना कृषि वन विकास कार्यक्रम संचालन, जलाधारको संरक्षण गरि ति क्षेत्रमा पर्यापर्यटन संचालन गर्ने मानव-वन्यजन्तु द्वन्द न्यूनीकरणका लागि तारबार र राहतका कुराहरु पहिलोपटक नीति कार्यक्रममा समेटिएका थिए ।

**आ.ब.२०७७/७८**

यो नीति कार्यक्रममा बैज्ञानिक वन व्यवस्थापन, वन सम्बन्धि प्रदेश कानून तर्जुमा, डढेलो नियन्त्रण, वन अतिक्रमण नियन्त्रण र फिर्ता, वनजन्य उद्योग स्थापना र प्रवर्द्धनमा प्रोत्साहन, जडिबुटी तथा सुगन्धित पकेटको पकेट क्षेत्र संचालनका कुराहरु अधिल्ला वर्षका नीति कार्यक्रमकै थिए । पहिलो पटक प्रदेश सरकारको वार्षिक नीति कार्यक्रममा सामुदायिक वनहरुसंग सहकार्य गर्ने कुरा उल्लेख गरिएको थियो । निजि तथा पारिवारिक वन विकासमा प्रोत्साहन, प्रत्येक जिल्लामा नमूना कृषि वन स्थापना, वन व्यवस्थापन कार्यक्रममा मै समावेश गरि उपयुक्त वन क्षेत्रमा पर्यापर्यटन संचालन गर्न उपभोक्ता समुह, निजि क्षेत्र र सरोकारवालाहरुसँग समन्वय गर्ने कुराहरु नीति कार्यक्रममा थिए । यो वर्ष मानव-वन्यजन्तु द्वन्द न्यूनीकरणलाई अलि बढी स्थान दिइएको थियो । यस अन्तर्गत वन क्षेत्र जोडेर जैविक मार्ग निर्माण, वन्यजन्तुको वासस्थान व्यवस्थापन, संवेदनशील क्षेत्रहरुमा ट्रेन्च तथा जैविक छेकबार निर्माण, घाईते वन्यजन्तुको उद्दार एकाई स्थापना, उद्दार र राहतका कुराहरु यसमा थिए ।

**आ.ब. २०७८/७९**

बैज्ञानिक वन व्यवस्थापनको बारेमा धेरै नकारात्मक कुराहरु आएकोले प्रदेश सरकारले आ.ब. २०७८/७९ को नीति कार्यक्रममा भने नाम बदलेर वन सम्वर्द्धन प्रणालीमा आधारित दिगो वन व्यवस्थापन गर्ने नीति अवलम्बन गर्ने र वन पैदावारमा आत्मनिर्भर बन्ने कुरा अघि सारेको थियो । वन क्षेत्रको संरक्षण र व्यवस्थापन तथा पर्यापर्यटनमा निजि क्षेत्रको लगानी भित्राउने नयाँ बुँदा समावेश गरिएको थियो । वनजन्य उद्योग संचालनमा प्रोत्साहन, सामुदायिक वन समुहसंग सहकार्य, अतिक्रमण र डढेलो न्यूनीकरणका पुरानै कार्यक्रम थिए । बाँके र बर्दिया राष्ट्रिय निकुञ्जलाई पर्यापर्यटनको प्रमुख गन्तव्यका रुपमा विकास गर्ने, तराई तथा भित्री मधेशका ६ जिल्लाहरूमा अभियान कै रुपमा “एक पालिका: एक नमुना कृषि वन कार्यक्रम“ सञ्चालन, 'मालागिरी'', टिमुर' र 'तेजपात'लाई प्रदेशको मुख्य चिनारी जडीबुटीको रुपमा विकास, विस्तार र प्रवर्द्धन, पहाडी जिल्लाहरूमा जडीबुटी पकेट क्षेत्रको विकास गरी “एक जिल्ला एक नमुना जडीबुटी उत्पादन“ कार्यक्रम सञ्चालन , जडीबुटी तथा गैरकाष्ठ वन पैदावारको दिगो संकलन, व्यवस्थापन, जगदिशपुर ताल र आसपासका क्षेत्र समेटी चरा आरक्ष स्थापना जस्ता नयाँ कार्यक्रम ल्याईएको थियो । यसैगरी कम्तीमा १०० स्थानमा वन उपभोक्ता वा कृषक समूहहरू मार्फत प्राङ्गारिक मल उद्यम स्थापना , बगर तथा नदी उकास जग्गा र कृषिवन एवं वन क्षेत्रभित्र रहेका खाली र अनुत्पादित क्षेत्रमा चक्लाको रुपमा वृक्षारोपण गर्ने कुराहरु नीति कार्यक्रममा थिए भने मानव वन्यजन्तु द्वन्द न्युनिकरणको लागि वासस्थानको दिगो व्यवस्थापन तथा संख्या नियमनका उपायको खोजि, “पीडित सँग प्रदेश सरकार“ कार्यक्रम मार्फत पिडितलाई छिटो राहत वितरण गर्ने , सार्वजनिक क्षेत्रका “आँप“, “वर“, “पिपल“का बगैंचा जस्ता सम्पदा र वंशाणु स्रोतको अभिलेखीकरण र दिगो संरक्षणका लागि

विशेष कार्यक्रम सञ्चालन जस्ता नयाँ कुराहरु यो नीति तथा कार्यक्रममा परेका थिए ।

**आ.ब.२०७९/८०**

यो वर्षको नीति कार्यक्रममा कस्तो वन व्यवस्थापन अपनाउने कुरा उल्लेख नभएपनि वन क्षेत्रको उत्पादन र उत्पादकत्व बढाउने, वन उपभोक्ता समुहको क्षमता अभिवृद्धि गर्ने, पर्यापर्यटन प्रवर्द्धन गर्ने कुराहरु पहिलेकै थिए । नदि उकास , खाली र निजि जग्गामा वृक्षारोपण अभियान संचालन, **'एक स्थानीय तह-एक वन नर्सरी", "एक स्थानीय तह- एक नमूना कृषि वन** " कार्यक्रम संचालन, "एक जिल्ला-एक नमूना जडिबुटी उत्पादन " कार्यक्रम संचालन, टिमुर र तेजपातलाई प्रदेशका मुख्य चिनारी जडिबुटीको रुपमा विकास र विस्तार गर्ने फरक नामका कार्यक्रमहरु यो वर्ष ल्याईएका थिए । वन क्षेत्र भित्रका खोला खहरे व्यवस्थापन, सुरई खोला, धान खोला, अर्जुन खोला र रिहारमा जलाशय निर्माण, एक वडा एक पोखरी कार्यक्रम संचालन, "पिडितसंग प्रदेश सरकार " कार्यक्रम तथा वन्यजन्तुले गर्ने क्षति बिमा कार्यक्रम संचालन, वन्यजन्तु उद्दार केन्द्र स्थापना र संचालन, प्रादेशिक वनस्पति उद्यान संचालन यो वर्ष समेटिएका थिए । अघिल्लो वर्षको कार्यक्रममा समेटिएको तर काम नभएको चौपारी र बगैचाको अभिलेखीकरण र संरक्षण तथा चरा आरक्ष घोषणा यो वर्ष पनि समेटिएको थियो ।

**आ.ब. २०८०/८१**

आगामी आर्थिक वर्षको लागि ल्याईएको लुम्बिनी प्रदेश सरकारको नीति कार्यक्रममा संवर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन कार्यक्रम सबै जिल्लामा विस्तार गरि ३२ लाख घनफिट काठ तथा ९६०० चट्टा दाउरा उत्पादन गर्ने महत्वाकांक्षी कार्यक्रम अघि सारिएको छ । वन उद्यम विकासका लागि " **वनजन्य उद्यमको विकासः बेरोजगारी समस्याको निकास**" कार्यक्रम, वन तथा जलाधार क्षेत्रको समुचित व्यवस्थापनको लागि रणनीतिक योजना निर्माण, प्रदेश राजधानीमा प्राकृतिक सौन्दर्यता प्रवर्द्धन गर्ने कार्यक्रम, सडक हरियाली प्रवर्द्धन गर्न सिंगो रुख स्थानान्तरण गरि रोप्ने, १५ लाख घनफिट काठ उत्पादन गर्ने लक्ष्यका साथ ३०० हेक्टर निजि जग्गामा वृक्षारोपण, खाली जमिनमा वृक्षारोपणका लागि महुवा, खयर र श्रीखण्ड जस्ता विशेष प्रजातिका विरुवा उत्पादन गर्न १० वटा नर्सरी स्थापना र ४२ वटा नर्सरीको स्तरोन्नति गर्ने कुराहरु कार्यक्रममा छन् । यसैगरी सम्भाव्यताको आधारमा जडिबुटी पकेट क्षेत्रको स्थापना, जडिबुटीको प्रयोग सम्बन्धि रैथाने ज्ञानको अभिलेखीकरण र संरक्षण, लोपोन्मुख वनस्पतिको स्वस्थानिय संरक्षण , गिद्ध लगायत लोपोन्मुख वन्यजन्तुको संरक्षण गर्ने कुराहरु पनि यो नीति तथा कार्यक्रमले समेटेको छ । मानव-वन्यजन्तु द्वन्द न्युनिकरणका कार्यक्रम र "पिडित संग प्रदेश कार्यक्रम", पर्यापर्यटनका कार्यक्रम यथावत नै छन् । नयाँ कार्यक्रमको रुपमा संघसंगको समन्वयमा बाँके र बर्दियामा पाईलटिंगको रुपमा कालिज र बँदेल पालन गर्ने व्यवस्था मिलाईने कुरा पनि यो वर्ष सरकारले अघि सारेको छ ।

प्रदेश सरकारले ल्याएका ६ वटा नीति कार्यक्रमहरुलाई हेर्दा सरकारले वन क्षेत्रमा के गर्ने भन्ने बारेमा अझैसम्म स्पष्ट नभएको प्रष्ट देखिन्छ । वन सम्बन्धि अधिकांश कुराहरु अरुको भरमा वा साझेदारीमा गर्ने भनिएको छ र यस्ता कतिपय कार्यक्रमहरुको सुरुवात समेत हुन सकेको छैनन् । जडिबुटी र गैह्र काष्ठ प्रजातिका वनस्पतिको खेतीको व्यवसायीकरण, वन्यजन्तु-मानव द्वन्द न्यूनीकरणको ठोस कार्ययोजना, पर्यापर्यटनको खाका, वृक्षारोपणको दिगोपन प्रदेश सरकारले सुनिस्चित गर्न सकेको छैन । वर्षेनी कार्यक्रमहरुको नाम, स्वरूप र कार्यान्वयन हुने स्थान बदलिदा कार्यक्रमहरु प्रभावकारी हुन सकेका छैनन् । विगतमा प्रदेशमा वन सम्बन्धि कानूनी व्यवस्थाको अभावले गर्दा काम गर्न केहि समस्या भएपनि अहिले प्रदेश वन ऐन, वातावरण संरक्षण ऐन, वन नियमावली, वन व्यवथापन मापदण्ड आईसकेका छन् । यिनैमा टेकेर प्रदेश सरकारले नीति तथा कार्यक्रम बनाउने र बजेट व्यवस्था गरेर कार्यक्रमहरु संचालन गर्ने हो भने लुम्बिनी प्रदेशले वन क्षेत्रबाट ठुलो आर्थिक र पर्यावरणीय लाभ लिन सक्नेछ ।

# Changing Forest Policy and Programme of Lumbini Province

Yubaraj Kandel

*Abstract*

Nearly half of the Lumbini region is covered by forests, which play a crucial role in the province's tourism, water resources, and population development. Forests offer numerous opportunities for the prosperity of the region. However, there are several challenges facing the forest sector, including increasing urbanization, squatter issues, human-wildlife conflicts, uncontrolled development and construction activities, and a rising number of forest fires. Since the establishment of the Lumbini Provincial Government, efforts have been made to prioritize the forest sector as a key driver of the province's prosperity. Despite this, there are still uncertainties surrounding the government's approach to forest management. Many of the proposed initiatives rely on external partnerships, and some have yet to be implemented. The provincial government has struggled to commercialize the cultivation of herbs and non-woody plants, develop a comprehensive plan to reduce wildlife-human conflicts, create a sustainable tourism blueprint, and ensure the longevity of forest plantations. Constant changes in program names, structures, and implementation locations have hindered the effectiveness of these initiatives. In the past, the lack of a legal framework for forest management in the province posed challenges. However, the introduction of provincial forest laws, environmental protection laws, forest regulations, and management standards has provided a solid foundation for progress. With proper policy formulation, program implementation, and budget allocation, the Lumbini province stands to reap significant economic and environmental benefits from its forest sector.

# लुम्बिनी प्रदेशको वन व्यवस्थापन मापदण्ड र संशय

Apprehensions within Forest Management Standards of Lumbini Province

युबराज कंडेल

*वन सम्वर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन मापदण्ड, २०७९ खारेज भएको बैज्ञानिक वन व्यवस्थापनकै केहि परिमार्जित स्वरूप भएको देखिन्छ । बैज्ञानिक वन व्यवस्थापन कार्यविधि अनुसार वन व्यवस्थापन गर्दा भएका त्रुटिहरुलाई हटाएर वन व्यवस्थापन गरियो भने प्रदेश सरकारले ल्याएको मापदण्डले वनलाई उत्पादनमुखी र सुरक्षित राख्न मद्दत पुग्नेछ । रुख काट्ने र आम्दानी गर्ने कुरामा मात्र ध्यान दिइयो भने यो मापदण्ड त बेकामे हुने छ नै, प्रदेशमा भएको वन पनि लथालिंग हुनेछ ।*

लुम्बिनी प्रदेश सरकारले भदौ ३१ गतेको राजपत्रमा " वन सम्वर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन मापदण्ड, २०७९" प्रकाशन गरेको छ । वन बाली स्थापना गर्न, हुर्काउन,, स्याहार सम्भार तथा पुनरूत्पादन नियमन गर्न अवलम्बन गरिने छनौट प्रणाली, माउरूख प्रणाली, छत्र प्रणाली, सरपट कटान प्रणाली लगायतका वन सम्वर्द्धन प्रणाली (सिभिकल्चर प्रणाली)लाई प्रभावकारी बनाउदै वन क्षेत्रको दिगो विकास, संरक्षण, सम्वर्द्धन, वन पैदावारको सदुपयोग एवं वन, वन्यजन्तु, वातावरण, जलाधार लगायत जैविक विविधताको संरक्षण गरि वनक्षेत्रको प्रभावकारी व्यवस्थापन गर्न लुम्बिनी प्रदेश सरकारले यो मापदण्ड तयार गरेको बताएको छ । नेपालमा कस्तो किसिमको वन व्यवस्थापन कार्यक्रम आवस्यक छ भन्ने बहस चलिरहेको अवस्थामा लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयले यो मापदण्ड तयार गरेपछि वन व्यवस्थापनमा चासो राख्नेहरुको ध्यान आकर्षित भएको छ ।

वन सम्वर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन गर्दा वनको दिगो व्यवस्थापन भई जैविक विविधता संरक्षण तथा वनको हैसियतमा सुधार भई वातावरणिय लाभ प्राप्त हुने, वन पैदावारको निरन्तर तथा सहज आपूर्ति हुने, स्थानीय विकास तथा स्थानीय रोजगारी सिर्जना हुने, राज्यलाई राजस्व प्राप्त भै प्रदेश र राष्ट्रको अर्थतन्त्रमा उल्लेखनीय योगदान पुग्ने र वन क्षेत्रको सुशासनमा उल्लेख्य रुपमा सुधार हुने तथा जलवायु परिवर्तनका सवालहरुको सम्बोधन गर्न पनि मद्दत पुग्ने भएकोले वन सम्वर्द्धन प्रणालीमा आधारित दिगो वन व्यवस्थापन निर्विकल्प रहेको कुरा मापदण्डमा उल्लेख गरिएको छ । मन्त्रालयका विज्ञ र सरोकारवालाहरुहरुले करिब ३ महिना लगाएर तयार गरेको यो मापदण्डका मुख्य आधारहरु भने लुम्बिनी प्रदेशको वन ऐन २०७८ र वन नियमावली २०७९ हुन् ।

**वन सम्वर्द्धन प्रणाली के हो?**

बुढा वा उमेर पुगेका रुखहरुलाई कटान गर्ने, रुख कटान गरिएको स्थानमा बिरुवा रोप्ने वा उमार्ने र उम्रेको विरुवालाई हुर्काएर फेरी काट्न योग्य बनाउने समग्र प्रणाली नै वन सम्वर्द्धन प्रणाली हो । यो प्रक्रियामा वनको हैसियतमा सुधार आई वन पैदावारको उत्पादन पनि निरन्तर हुने अपेक्षा गरिन्छ । वन सम्वर्धन

प्रणाली अन्तर्गत छत्र प्रणाली, छनौट प्रणाली , सरपट कटान प्रणाली र रुख सहितको मुना प्रणाली गरि चार किसिमका प्रणालीहरु मापदण्डमा उल्लेख छन् । यी सबै प्रणालीमा रुख उमार्ने, हुर्काउने, पत्ल्याउने, काट्ने काम फरक फरक किसिमका अवधि र क्षेत्र छुट्याएर गरिन्छ । कुन ठाउँमा कस्तो वन सम्वर्द्धन प्रणाली छनौट गर्ने भन्ने कुरामा धेरै कुराले प्रभाव पर्छ । वनमा भएका प्रमुख प्रजातिहरू, बाह्य खतराहरुको सम्भावना जस्तै आगलागी र मिचाहा वनस्पतिको फैलावट, पुनरुत्पादनको सरल र सुरक्षित प्रणाली, वन व्यवस्थापनको तीव्रता, वन पैदावार ओसारपसारको लागि भौतिक पूर्वाधारहरुको सुविधा, वन व्यवस्थापनको उद्धेश्य र वन रहेको क्षेत्रको भौगोलिक अवस्था जस्ता कुराहरुको आधारमा वन सम्वर्द्धन प्रणालीको छनौट गरिन्छ ।

**मापदण्डमा के छ?**

कस्तो ठाउँमा कुन किसिमको वन सम्वर्द्धन प्रणाली अपनाउन सकिन्छ भन्ने कुरालाई मापदण्डमा गणितीय सुत्र र उदाहरणबाट स्पष्ट पारिएको छ । कुन प्रणाली छनौट गरेपछि वनलाई कसरि कतिवटा आवधिक खण्डमा विभाजन गर्ने, बालीचक्र कति वर्षको रहने, पुनरुत्पादन अवधि कति वर्षको हुने, र प्रत्येक आवधिक खण्डको क्षेत्रफल कति रहने भन्ने कुराको प्राविधिक रुपमा व्याख्या गरिएको छ । मापदण्डले कुन प्रणालीमा प्रत्येक वर्ष कति परिमाणमा काठ दाउरा उत्पादन गर्न मिल्छ भन्ने कुराको तालिका समेत प्रस्तुत गरेको छ । मापदण्डले वन व्यवस्थापन कार्ययोजनामा समावेश हुनुपर्ने अन्य क्रियाकलापहरुको पनि निर्धारण गरेको छ । यस्ता क्रियाकलापहरुमा वन क्षेत्रको खालि जग्गा व्यवस्थापन, खहरे खोला तथा पानी निकास व्यवस्थापन, अग्निरेखा निर्माण र मर्मत सम्भार, पानी मुहान, सिमसार तथा पानीका श्रोत व्यवस्थापन, करिडोर र कनेक्टीभिटी, वन अतिक्रमण तथा वन डढेलो नियन्त्रण, चोरि कटानी तथा चोरि शिकारी नियन्त्रण, नदिजन्य पदार्थ तथा वन क्षेत्रको माटो उत्खनन, घाटगद्दी व्यवस्थापन, तथ्यांक व्यवस्थापन, मिचाहा प्रजातिको व्यवस्थापन र ग्रीन बेल्टको निर्माण सम्बन्धि क्रियाकलाप रहेका छन् । वन सम्वर्द्धनका क्रियाकलापमा मानव वन्यजन्तुको सहअस्तित्व विकासका क्रियाकलापहरु र पर्यापर्यटनका क्रियाकलापहरुलाई समेत समावेश गर्नुपर्ने कुरा उल्लेख गरिएका छन् ।

मापदण्डमा चुरे र भिरालो भूभागमा रहेको वन क्षेत्र संवेदनशील हुने भएकोले त्यस्ता क्षेत्रमा वनको पुनरुत्पादन कार्य गर्दा नै अनिवार्य रुपमा भू-संरक्षण र पानी निकासका कार्यहरु गरि भूक्षय हुनबाट जोगाउने कुरालाई प्राथमिकता दिनुपर्ने उल्लेख छ । वन व्यवस्थापनको नाममा अन्धाधुन्द कटान नहोस भनेर तराईमा एउटा क्षेत्रमा बढीमा ५ हेक्टर र भिरालो क्षेत्रमा बढीमा २ हेक्टर भन्दा बढी कटान गर्न मापदण्डले रोक लगाएको छ । वन व्यवस्थापन गर्दा ढलापडा रुख वा चोरि कटानीको क्रममा छोडिएका गोलियालाई कटान परिमाणमा समावेश नगरी त्यसैको बहानामा अतिरिक्त रुख समेत काट्ने प्रचलन छ । मापदण्डले ढलापडा रुखलाई समेत पछिल्लो कटान परिमाणमा समावेश गर्नुपर्ने बाध्यात्मक व्यवस्था गरि कटान परिमाणलाई नियन्त्रण गर्न खोजेको देखिन्छ । वैज्ञानिक वन व्यवस्थापन गर्दा आम्दानि भन्दा खर्च बढी भएको भनि अख्तियार र महालेखा परीक्षकका विभिन्न प्रतिवेदनहरुले औंल्याएका छन् । त्यसैले यो मापदण्डमा वन व्यवस्थापन प्रणाली लागु गर्नुपूर्व अनिवार्य रुपमा वित्तीय विश्लेषण गर्नुपर्ने कुरा समावेश गरिएको छ । वन व्यवस्थापनको वित्तीय विश्लेषण गर्दा प्रत्यक्ष रुपमा प्राप्त हुने वन पैदावारको मूल्यलाई मात्र नहेरी बाढीपहिरोबाट संरक्षण, कार्बन उत्सर्जन न्यूनीकरण, जैविक विविधता संरक्षण जस्ता अप्रत्यक्ष लाभ र लागतहरु समेत विश्लेषण गर्नुपर्ने हुन्छ, यो कुरालाई मापदण्डले सम्बोधन गरेको छ । वन सर्भेक्षण तथा मापन विधिलाई विस्वसनीय बनाउनको लागि जीपीएस लगायत प्रविधिको प्रयोग, वन श्रोत सर्वेक्षण, वनको मौज्दाज विश्लेषण , रुख नक्शांकन, पुनरुत्पादन सर्भे कसरि र किन गर्ने ? पत्ल्याउने ( थिनिंग) कार्य

कसरि गर्ने भन्ने कुराको स्पष्ट निर्देशन मापदण्डमा छ ।

वन क्षेत्रमा संरक्षण तथा विकास गरिनुपर्ने क्षेत्रको पहिचान गरि सो सम्बन्धि के कस्ता कार्यहरु गर्नुपर्छ भन्ने कुराको किटान यो मापदण्डमा गरिएको छ, जुन यो मापदण्डको सबैभन्दा राम्रो कुरा हो । नदि किनाराको संवेदनशील क्षेत्रमा ५ देखि १० मिटर छेउछाउको क्षेत्रलाई हरित संरक्षण पेटीको रुपमा संरक्षण गरि आवस्यकता अनुसार जैविक तटबन्ध र अन्य संरक्षणका कार्यहरु गर्नुपर्ने, वन क्षेत्रमा भू-क्षय सम्भावित क्षेत्रहरुको पहिचान गरि समयमै त्यसको नियन्त्रणका कार्यक्रमहरु कार्यान्वयन गर्नुपर्ने, वनमा पाईएका दुर्लभ तथा लोपोन्मुख वनस्पति तथा वन्यजन्तु संरक्षण सम्बन्धि कार्यक्रमहरु कार्यान्वयन गर्नुपर्ने कुराहरु संरक्षण र विकास शिर्षकमा राखिएको छ । वन व्यवस्थापनका कार्यहरु समुदाय र परम्परासँग प्रत्यक्ष रुपमा जोडिएको हुन्छ । त्यसैले वन व्यवस्थापन गर्दा समुदाय र परम्परालाई बाहिर राखेर गर्न सकिदैन भन्ने कुरा यो मापदण्डले स्वीकार गरेको छ । वन व्यवस्थापन गर्दा सास्कृतिक, धार्मिक, पुरातात्विक , जैविक महत्वका क्षेत्रहरुलाई संरक्षण गर्नुका साथै प्रथाजनित व्यवस्थापन प्रणालीलाई समेत ध्यान दिनुपर्ने तथा वन क्षेत्रमा संरक्षण तथा विकासका कार्यहरु गर्दा यी क्षेत्रहरुसँग जोडिएको परम्परागत ज्ञान, सिप तथा समुदायको परम्परागत उपयोगलाई ध्यान दिनुपर्ने कुरा मापदण्डमा उल्लेख छ । यस्तो व्यवस्थाले हाल वन व्यवस्थापनमा समुदायसंगको द्वन्द समाधान हुने, आदिबासी जनजाति, दलित र अल्पसंख्यकहरुको वनसंगको निकटताको सम्मान हुने, वन व्यवस्थापनको मौलिक ढाँचा तयार हुने र वन व्यवस्थापनका हरेक क्रियाकलापहरुमा समुदायले अपनत्व महसुस गर्न सक्ने देखिन्छ ।

**मापदण्ड भित्रका संशय**

सरकारले वार्षिक ६ देखि १२ करोड घन फिट काठ दिगो रुपमा उत्पादन हुने, करिव १३ लाख मानिसले वर्षैभरी रोजगारी पाउने र राज्यले २० देखि ४० अर्ब रुपियाँ प्रतिवर्ष राजस्व प्राप्त गर्ने दावीका साथ तत्कालिन वन तथा भूसंरक्षण मन्त्रालयको सचिवस्तरीय निर्णयबाट २०७१ कार्तिक २७ मा वैज्ञानिक वन व्यवस्थापन कार्यविधि २०७१ स्वीकृत भई लागु गरिएको थियो । वन तथा भू संरक्षण मन्त्रालयले निकै हतारोमा ल्याएको बैज्ञानिक वन व्यवस्थापन कार्यक्रम सुरु हुनासाथ वन संरक्षनको क्षेत्रमा थुप्रै आशंकाहरु गरिएपनि सामुदायिक वनमा समेत यो कार्यक्रम द्रुत गतिमा फैलिरहेको थियो । जैविक विविधता संरक्षणमा ध्यान नदिएको , अनियन्त्रित रुपका रुख कटान गरि वन कर्मचारी र सामुदायिक वनका पदाधिकारीले गैह्रकानूनी लाभ लिएको भन्दै जनस्तर र संरक्षणकर्मिहरुबाट ब्यापक विरोध आएको र अख्तियार तथा महालेखाको प्रतिवेदनले समेत सो कुरा उठाएपछि सरकारले २०७७ जेठ २८ गते उच्चस्तरीय समित गठन गरेको थियो । यो समितिले कार्यक्रम खारेज गरि दिगो वन व्यवस्थापन प्रणाली लागू गर्न सुझाव सहितको प्रतिवेदन बुझाएपछि २०७७ माघ ११ गतेको मन्त्रिपरिषद बैठकले बैज्ञानिक वन व्यवस्थापन कार्यविधि ,२०७१ खारेज गरेको थियो । संघीय र प्रादेशिक वन ऐन र नियमावलीहरू निर्माणमा ढिलाई अनि राजनैतिक अस्थिरताको कारणले गर्दा २ वर्षसम्म नेपालमा वन व्यवस्थापनको मोडेल कस्तो हुने भन्ने तय गर्न सकिएको थिएन । कार्यक्रम खारेज गरेपनि भित्रभित्र वैज्ञानिक वन व्यवस्थापन कार्यविधि अनुसार वन व्यवस्थापनका कामहरु भैरहेका थिए र बैज्ञानिक वन व्यवस्थापन पक्षधरहरु संगठित रुपमै पुरानै वन व्यवस्थापन प्रणालीलाई ब्यूंताउनुपर्ने माग राखेर आन्दोलित समेत गरिरहेका थिए । यहि अवस्थामा लुम्बिनी प्रदेश सरकारले दिगो वन व्यवस्थापनको मर्म अनुसार भन्दै वन व्यवस्थापन मापदण्ड ल्याएको छ ।

लुम्बिनी प्रदेश सरकारले ल्याएको वन सम्वर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन मापदण्ड र नेपाल सरकारले खारेज गरेको बैज्ञानिक वन व्यवस्थापन कार्यविधिमा उद्देश्य र कार्यविधिक भिन्नता छैनन् । मापदण्ड र कार्यविधिमा वन व्यवस्थापन गर्दा हुने फाइदाहरु एउटै छन्

अर्थात दुबैको उद्धेश्य एकै रहेको छ । कार्यविधिमा बैज्ञानिक वन व्यवस्थापन कार्ययोजना बनाउदा विभिन्न सरोकारवालाहरुसँग छलफल गर्नुपर्ने अनिवार्य व्यवस्था भएपनि मापदण्डमा त्यस बारेमा कुनै कुरा उल्लेख छैन । कस्तो किसिमको वन सम्वर्द्धन प्रणाली छनौट गर्ने र ति काम कसरि गर्ने भन्ने बारेमा दुबैमा उल्लेख गरिएको भएपनि मापदण्डमा प्राविधिक व्याख्या र उदाहरण समेत प्रस्तुत गरेर त्यसलाई सरलीकृत गरिएको छ । वन कटान, पुनरुत्पादन, छाँटनको लागि ब्लक, कम्पार्टमेन्ट र सब कम्पार्टमेन्ट निर्माण सम्बन्धि मापदण्ड बैज्ञानिक वन व्यवस्थापन अनुसारकै छन् । कार्यविधिमा उल्लेख भए अनुसारको कार्ययोजना लेखन र स्वीकृति सम्बन्धि व्यवस्था पनि मापदण्डमा राखिएको छैन. सामुदायिक वनमा चरिचरण रोक लगाउदा किसानहरुलाई समस्या परेको छ र वनसँग दुरी पनि बढिरहेको छ । निर्देशिकाले वनमा कसरि चरिचरण व्यवस्थित गर्ने भन्ने उल्लेख गरेपनि मापदण्डमा त्यो कुरा उल्लेख छैन । वनमा गर्नुपर्ने वन विकासका कार्यहरु निर्देशिकामा भन्दा मापदण्डमा बढी परिस्कृत र समुदायमुखी छन् । ढलापडा काठ दाउराको व्यवस्थापन मापदण्डमा भएको नयाँ व्यवस्था हो । प्रदेशको वन व्यवस्थापन मापदण्डले वन संरक्षण र विकासमा समुदायको ज्ञान र सिपको प्रयोग गर्ने, समुदायको भूमिका बढाउने र समुदायलाई प्रत्यक्ष अप्रत्यक्ष लाभ दिने कुरालाई समेटेको छ, जुन बैज्ञानिक वन व्यवस्थापनमा थिएन ।

लुम्बिनी प्रदेश सरकारले ल्याएको वन व्यवस्थापन मापदण्डको मुख्य आधार भनेको प्रदेश वन ऐन २०७८ हो । यो ऐन जैविक विविधतामैत्री छ । मापदण्डले भने ऐनको परिच्छेद ११ मा उल्लेखित चराचुरुंगी तथा वन्यजन्तु संरक्षण र व्यवस्थापन सम्बन्धि व्यवस्थालाई सम्बोधन गर्न सकेको छैन । मानव वन्यजन्तु द्वन्द अहिलेको जल्दोबल्दो समस्या हो । मापदण्डमा वन सम्वर्द्धन प्रणाली लागु गर्दा मानव-वन्यजन्तु द्वन्द न्यूनीकरणका लागि के के गर्नुपर्छ भन्ने उल्लेख छैन । मापदण्डमा वन विकासका कार्यक्रमहरु अन्तर्गत पर्या-पर्यटनलाई पनि राखिएको छ । तर वन सम्वर्द्धनप्रणाली लागू भएका ब्लक र कम्पार्टमेन्टमा पर्यापर्यटन कसरि गर्न सकिन्छ ? वन सम्वर्द्धनमा पर्यापर्यटन र वातावरणिय सेवाको भुक्तानिलाई कसरि सम्बोधन गर्ने भन्ने कुरा आउन सकेका छैनन् । वन सम्वर्द्धन प्रणाली लागु गर्न सामुदायमा आधारित वनहरुले के कस्तो सहयोग प्राप्त गर्ने? कसले सहयोग गर्ने? लाभको वितरण कसरि हुने भन्ने कुरा मापदण्डमा आएको भए राम्रो हुने थियो । समग्रमा हेर्दा वन सम्वर्द्धन प्रणालीमा आधारित वन व्यवस्थापन मापदण्ड, २०७९ खारेज भएको बैज्ञानिक वन व्यवस्थापनकै केहि परिमार्जित स्वरूप भएको देखिन्छ । बैज्ञानिक वन व्यवस्थापन कार्यविधि अनुसार वन व्यवस्थापन गर्दा भएका त्रुटिहरुलाई हटाएर वन व्यवस्थापन गरियो भने प्रदेश सरकारले ल्याएको मापदण्डले वनलाई उत्पादनमुखी र सुरक्षित राख्न मद्दत पुग्नेछ । रुख काट्ने र आम्दानी गर्ने कुरामा मात्र ध्यान दिइयो भने यो मापदण्ड त बेकामे हुने छ नै, प्रदेशमा भएको वन पनि लथालिंग हुनेछ ।

*बुटवल टुडे, २८ असोज २०७९*

# Apprehensions within Forest Management Standards of Lumbini Province

Yubaraj Kandel

***Summary***

The Lumbini state government has recently implemented Forest Management Standards. This initiative aims to effectively manage forest areas by promoting sustainable development, protecting biodiversity, and ensuring the responsible utilization of forest products. By adopting a siviculture system to establish, grow, care for, and regulate the reproduction of forest crops, the provincial government is taking proactive steps towards enhancing forest management practices. Managing forests based on the Siviculture System will not only improve the overall health of the forests but also result in environmental benefits, a steady supply of forest products, job creation, and a boost to the nation's economy. Additionally, this approach will enhance governance within the forest sector and help address pressing issues such as climate change. The importance of sustainable forest management, as outlined in the standards, cannot be overstated. In a recent Council of Ministers meeting on January 11, 2077, the Scientific Forest Management Procedure of 2071 was revoked. While there are no significant differences between the standards introduced by the Lumbini state government and the previously rejected scientific forest management procedure, the new standards place a greater emphasis on community involvement and refined forest development practices. Notably, the inclusion of deadwood as a new component in the management standard.

However, it is worth noting that the current standards do not explicitly address the protection and management of birds and wildlife, as well as the reduction of human-wildlife conflicts. Moving forward, it is essential for the provincial government to consider incorporating measures to safeguard these important aspects of forest management. Overall, the Forest Management Standards introduced by the Lumbini province government represent a significant step towards enhancing forest management practices and promoting sustainable development in the region. By prioritizing community involvement and adopting innovative approaches, these standards have the potential to bring about positive changes.

Butwal Today, 14 Oct 2022

# लुम्बिनीमा वन अतिक्रमण : हटाउने कि बढ्न नदिने?

## Forest Encroachment in Lumbini Province: Tolerate or Clear?

युवराज कंडेल

*लुम्बिनी प्रदेशमा वन अतिक्रमण भएका ९० प्रतिशत भन्दा बढी क्षेत्रमा स्थायी वस्ती र भौतिक पूर्वाधार तयार भैसकेकोले त्यसलाई हटाएर वन बनाउन सम्भव छैन । वर्षौं पुराना अतिक्रमण सहनुको विकल्प छैन । भूगोलमा वस्ती अनि रेकर्डमा वन राखिरहनु वन विकासको दृष्टिले उपयुक्त पनि हैन । यो अवस्थाले वनका कार्यक्रमहरु संचालन गर्दा समस्या उत्पन्न हुन्छ । १०/२० वर्ष पुराना अतिक्रमण हटाउन कठिन भएपनि ताजा अतिक्रमण हटाउन र नयाँ अतिक्रमण रोक्न भने असम्भव छैन । सरकारले भूमिहीनको छानबिन गरि वास्तविक भूमिहीनलाई मात्र बैधता प्रदान गर्ने, तीनै तहका सरकारले अतिक्रमित वन क्षेत्रमा विकास निर्माणका कार्यमा लगानी नगर्ने, वन क्षेत्रको स्पष्ट सिमांकन गर्ने जस्ता काममा स्थानीय सरकारले वन प्रशासनलाई सहयोग गर्ने हो भने वन अतिक्रमणलाई*

लुम्बिनी प्रदेशको झन्डै आधा भूभाग ( ४३.७२%)वनले ढाकेको छ । नेपालको कूल वन क्षेत्रको १४.७४% वन यो प्रदेशमा रहेको छ । लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयका अनुसार यस प्रदेशमा ९ लाख ७४ हजार ३८१ हेक्टर वन क्षेत्र छ भने ७६६ हेक्टर निजि वन रहेको छ । यो प्रदेशमा २ लाख ३६ हजार ६०० हेक्टर वन संरक्षित क्षेत्रको रुपमा रहेको छ । मन्त्रालयको तथ्यांकमा वनको अवस्था राम्रै देखिएको भएपनि धरातलमा हेर्दा भने त्यो वन खण्डित भएको र नासिदै गएको देखिन्छ । वन तथा वातावरण मन्त्रालयको पछिल्लो तथ्यांक अनुसार आ.ब. २०७८/ ७९ को अन्त्यसम्ममा १४ हजार ६ सय ८९ हेक्टर वन अतिक्रमण भएको छ । यो संरक्षित क्षेत्र बाहेकको अतिक्रमित वन क्षेत्रको तथ्यांक हो । २०७७/७८ सम्ममा १७४९६ हेक्टर वन अतिक्रमित रहेकोमा आ.ब २०७८/७९ मा १२३.५५ हेक्टर अतिक्रमण हटाईएको थियो भने सो वर्ष १६.६ हेक्टर थप वन अतिक्रमणमा परेको देखिन्छ । मन्त्रालयका अनुसार अहिले रुपन्देहीमा मात्रै ८ हजार ३४७ हेक्टर वन अतिक्रमणमा भएको छ । कपिलवस्तुमा २ हजार ३ सय ८८ दशमलव १, दाडमा २ हजार १ सय ३४.१, पश्चिम नवलपरासीमा ७४६.५, बाँकेमा ६ सय ४.४, बर्दियामा २ सय ८८.८ हेक्टर वन अतिक्रमण भएको छ । यस्तै, गुल्मीमा ८४, रोल्पामा ५१.२, अर्घाखाँचीमा १८.३, प्यूठानमा १४.८ र पाल्पामा १० हेक्टर वन अतिक्रमण भएको छ भने रुकुम पूर्वमा वन अतिक्रमण भएको सरकारी तथ्यांक छैन ।

सन् १९९१-२००१ को अवधिमा कपिलवस्तु, रुपन्देही बर्दियाको वन वार्षिक ०.७६%, ०.९३% र ०.४३% को दरले खुम्चिएको थियो । उक्त जिल्लाहरुको वन खुम्चने दर सन् २००१-२०११ को अवधिमा क्रमश ०.९५%, ०.४३% र ०.२४% रहेको थियो । रुपन्देही र नवलपरासीको वन क्षेत्रफल सन् १९८०-१९९० को अवधिमा करिब आधा खुम्चिएको संघीय वन मन्त्रालयकै पुराना तथ्यांकले देखाउछन् । लुम्बिनी प्रदेशको तराईमा २०३५ सालसम्म जंगल फाडेर बसेका धेरैलाई जग्गाधनी बनाएर वनको लगतबाट हटाईएकोले हालको वन क्षेत्र भनि तोकिएको क्षेत्रमा पुराना अतिक्रमण कम देखिन्छन् । तरपनि नवलपरासीको बर्दघाट-सरावल क्षेत्रमा २०२५ सालदेखिका वन अतिक्रमण अहिलेसम्म पनि रहेको देखिन्छ । रुपन्देहीको गजेडीमा २०२५ सालदेखिका र साबिकको पर्रोहाका उत्तरी क्षेत्रमा २०२७ सालदेखिका अतिक्रमण छन् । तराईका महेन्द्र राजमार्ग नजिकका वन क्षेत्रका अधिकांश अतिक्रमण २०५२ सालयता भएको देखिन्छ ।

पहाडी जिल्लाहरुमा वन अतिक्रमण अलि कम देखिन्छ । २०७२ सालसम्म गुल्मीमा ७४, पाल्पामा १० र अर्घाखाँचीमा १५२ हे. अतिक्रमित देखिन्छ । पहाडी क्षेत्रमा अधिकांश वन अतिक्रमण राजमार्ग नजिक केन्द्रित छ, जुन २०६३ पछी भएको डिभिजन वन कार्यालयहरुको वार्षिक प्रतिवेदनहरुले देखाउछन् ।

खासगरी उपत्यका र भर्खर मोटरबाटो पुगेका वस्ती छेउछाउ वन अतिक्रमण बढिरहेको भएपनि पहाडमा वन क्षेत्र घट्ने दर चुरे र तराईमा भन्दा कम भएको देखिन्छ । सुकुम्बासी समाधान गर्न गठित आयोगले २०७८मा संकलन गरेको तथ्यांक अनुसार लुम्बिनी प्रदेशमा ६४ हजार ८०० भूमिहीन सुकुम्बासी र एक लाख ५३ हजार ६०८ अव्यबस्थित परिवार रहेका थिए । अव्यवस्थित बसोबासी र सुकुम्बासीमध्ये सबैजसोले वन अतिक्रमण नै गरिरहेका छन् । नेपालमा सुकुम्बासीले वन अतिक्रमण गरेको कारणले वन क्षेत्र घटेको बारेमा धेरै चर्चा हुने गरेको भएपनि संस्थागत रुपमा बढी रहेको वन विनाशले कमै चर्चा पाउने गरेको छ । अहिले नेपालको वन जंगलमा विभुन्न संस्थाहरुले विभिन्न बहानामा अतिक्रमण गरिरहेका छन । धार्मिक सस्था, स्थानीय सामाजिक संस्थादेखि लिएर शैक्षिक संस्था, सरकारी कार्यालय, उद्योगहरुले संरक्षण क्षेत्र र मध्यवर्ती क्षेत्रमा समेत अतिक्रमण गरी भौतिक संरचनाहरु निर्माण गरि उपभोग गरिरहेका देखिन्छ । शहिदका नाममा खोलिएका प्रतिष्ठान र चिहानस्थलहरुले पनि वन जंगल नै विनास गरेको पाइन्छ । खासगरी तराई र चुरे क्षेत्रमा बर्दघाटदेखि चिसापानीसम्मको यात्रा गर्दा महेन्द्र राजमार्गको छेउछाउका महत्वपूर्ण वन क्षेत्रमा मन्दिर, गुम्बा, सामुदायिक भवन, चिहान स्थल, पार्क, विद्यालय जस्ता स्थायी संरचनाहरु निर्माण गरेको सजिलै देख्न सकिन्छ । उदाहरणको लागि नवलपरासी ( पश्चिम)लाई हेर्न सकिन्छ । यस जिल्लामा ७४ स्थानको वनक्षेत्रमा अतिक्रमण भएकोमा १८ स्थानमा मन्दिर/ गुम्बा , स्कूल, क्याम्पस, हाटबजार, सामुदायिक भवनले मात्र अतिक्रमण गरेका छन् । जिल्लाको कूल वन अतिक्रमण मध्ये ७५१.३१ हेक्टर मध्ये ४८.६४ हेक्टर अतिक्रमण सस्थागत रुपबाट भएको डिभिजन वन कार्यालयको प्रतिवेदनमा उल्लेख छ । यहि अनुपातको वन अतिक्रमण रुपन्देही, कपिलवस्तु र बाँके जिल्लामा भएको सरकारी तथ्यांकहरुले देखाएका छन् । देश संघियतामा गएपछि स्थानीय तहमा वन अतिक्रमण संस्थागत भएको गुनासोहरु बढिरहेका छन् । स्थानीय सरकारले वन सम्बन्धि प्रचलित नीति नियमको विपरित हुनेगरी वनक्षेत्रको उपयोग गर्ने, वनमा निर्माण कार्य गर्ने, वनको जग्गा अन्य प्रयोजनका लागि उपलब्ध गराउने प्रवृति निकै बढेको छ । सरकारले दिएका बाहेक परम्परागत रुपमा वन जंगलको उपभोग गरिरहेका संस्थाहरु धेरै रहेका छन । सरकारले सडक, शैक्षिक सस्था, विमानस्थल निर्माण गर्दा पनि वनलाई नै मास्ने काम गरिरहेको पाइन्छ । यसले पनि वनलाई घटाएको छ । । ति संस्थाहरुले वन क्षेत्र कसरी प्रयोग गरिरहेका छन भन्ने कुनै अनुगमन हुन सकेको छैन ।

वन अतिक्रमणको पहिलो कारण गास र बास नै हो । संघिय वन मन्त्रालयका अनुसार अतिक्रमित वन क्षेत्र मध्ये करिव ६३ प्रतिशत खेतीपाती र बसोबासको लागि प्रयोग भैरहेको छ । पछिल्लो समयमा खेतीपाती भन्दा पनि आवास र व्यवसायको लागि अतिक्रमित वन क्षेत्र उपयोग भैरहेको छ । वन अतिक्रमणलाई बलियो बनाउने काम राजनैतिक दल र सरकारले नै गरिरहेको छ । सुकुम्बासी समस्या समाधान हरेक दलको चुनावी नारा बनिरहेको छ र सुकुम्बासीलाई फकाउनको लागि राज्यका साधनश्रोत खर्च गरेर विद्युत, खानेपानी, सडक, विद्यालय, स्वास्थ्यसस्था, खेल मैदान निर्माण गरिरहेका छन्, जसले गर्दा वन अतिक्रमण हटाउन नसकिने अवस्थामा पुगिसकेको छ । वन कार्यालयको रेकर्डमा वन रहेको स्थानमा शहर /बजार बनिसकेका छन्, जसलाई हटाउन असम्भव नै छ । वन अतिक्रमण कति बलीयो छ भन्ने कुरा रुपन्देही जिल्लालाई हेरे पुग्छ । जिल्लाका ८५ स्थानमा भएका अतिक्रमण मध्ये १० वटा हटाउन कठिन, एउटा हटाउन प्रयासरत र बाँकी ७४ स्थान हटाउन नसकिने डिभिजन वन कार्यालयको प्रतिवेदन २०७८/७९

मा उल्लेख छ । दाङ्गको भालुवांग, कपिलवस्तुको राजमार्ग छेउछाउका अधिकांश अतिक्रमित वस्ती, रुपन्देहीको रुद्रपुर, बेलभरिया, चरंगे, भुपुसैनिक र शितलनगर-खैरेनी, नवलपरासीको सुनवल, बर्दघाट क्षेत्रका अतिक्रमित वनबाट वस्ती र अन्य संरचना हटाएर वन क्षेत्र फिर्ता ल्याउन असम्भव नै देखिन्छ ।

वन अतिक्रमण हटाउनु वन प्रशासनको लागि फलामको च्युरा चपाउनु भन्दा कठिन भैरहेको छ । पांच वर्ष भन्दा कम समयदेखि भएका अतिक्रमण वन प्रशासनले हटाउन सकेको भएपनि ५ वर्ष भन्दा बढी समयदेखी भैरहेका वन अतिक्रमण हटाउन नसकेको वन मन्त्रालयका वार्षिक प्रगति प्रतिवेदनहरु हेर्दा प्रस्ट हुन्छ । लुम्बिनी प्रदेशभरिमा आ.ब. २०७५/७६ मा ७२ हेक्टर, आ.ब २०७६/७७ मा ६९.७३ हेक्टर , आ.ब २०७७/७८ मा १६३ हेक्टर र आ.ब २०७८/७९ मा १२३.५५ हेक्टर वन अतिक्रमण हटाईएको थियो । आ.ब २०७९/८० मा करिब ८३.५ हेक्टर मात्र वन अतिक्रमण हटाइएको लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालय श्रोत बताउँछ । संघीय र लुम्बिनी प्रदेशको हरेक वर्षको नीति कार्यक्रम र बजेटमा वन अतिक्रमण हटाउने कुरा दोहोरिने भएपनि वन प्रशासनसंग बजेटको कमि, जनशक्ति अभाव, सुरक्षा निकायसंगको समन्वयमा कमि, स्थानीय सरकारको असहयोग र समुदाय तथा दलीय असहयोगले गर्दा वन अतिक्रमण हटाउने कार्य निकै सुस्त छ । ताजा अतिक्रमण हटाउन मात्र साधन श्रोत खर्च हुँदा पुराना वन अतिक्रमण बलिया बन्दै गएका छन् ।

राजनैतिक अस्थिरता भएको बेलामा वन अतिक्रमणकारिहरु सक्रिय हुने, वन प्रशासनले जोखिम लिन नचाहने, राज्यका अन्य निकायहरुले सहयोग नगर्ने जस्ता कारणले वन अतिक्रमण बढेको हो र यिनै कारण विद्यमान रहेकोले हटाउन नसकिएको पनि हो । लुम्बिनी प्रदेशमा वन अतिक्रमण भएका ९० प्रतिशत भन्दा बढी क्षेत्रमा स्थायी वस्ती र भौतिक पूर्वाधार तयार भैसकेकोले त्यसलाई हटाएर वन बनाउन सम्भव छैन । वर्षौं पुराना अतिक्रमण सहनुको विकल्प छैन । भूगोलमा वस्ती अनि रेकर्डमा वन राखिरहनु वन विकासको दृष्टिले उपयुक्त पनि हैन । यो अवस्थाले वनका कार्यक्रमहरु संचालन गर्दा समस्या उत्पन्न हुन्छ । १०/२० वर्ष पुराना अतिक्रमण हटाउन कठिन भएपनि ताजा अतिक्रमण हटाउन र नयाँ अतिक्रमण रोक्न भने असम्भव छैन । सरकारले भूमिहीनको छानबिन गरि वास्तविक भूमिहीनलाई मात्र बैधता प्रदान गर्ने, तीनै तहका सरकारले अतिक्रमित वन क्षेत्रमा विकास निर्माणका कार्यमा लगानी नगर्ने, वन क्षेत्रको स्पष्ट सिमांकन गर्ने जस्ता काममा स्थानीय सरकारले वन प्रशासनलाई सहयोग गर्ने हो भने वन अतिक्रमणलाई नियन्त्रण गर्न सकिनेछ । गोठालाले घामपानीबाट ओतिन वनमा बनाएका स्याउले छाप्रालाई हटाएर वन कार्यालयहरुले वन अतिक्रमण हटाएको दाबि गर्ने, अतिक्रमित वनका व्यक्तिलाई नै बाँकी रहेको वन सामुदायिक र साझेदारी वन व्यवस्थापनको नाममा सुम्पने र वन क्षेत्र कंक्रिटको वनमा परिणत हुँदासम्म वास्ता नगर्ने प्रवृति वन प्रशासनमा र सुकुम्बासीलाई फकाएर राजनीतिक लाभ लिईरहने सोच दल तथा सरकारमा रहिरह्यो भने लुम्बिनी प्रदेशमा पहाड र संरक्षित क्षेत्रमा मात्र वन रहने स्थिति नआउला भन्न सकिदैन ।

*बुटवल टुडे, २०८० पुष २६*

# Forest Encroachment in Lumbini Province: Tolerate or Clear?

Yubaraj Kandel

*Summary*

Nearly half of the Lumbini region, specifically 43.72%, is currently covered by forest. Recent government data reveals that outside of protected areas, a total of 14,689 hectares of forest has been encroached upon by the end of 2078/79 BS. The majority of forest encroachment is being carried out by unorganized residents and squatters. Additionally, various organizations in Nepal are also encroaching on forests under different guises, ranging from religious and social organizations to educational institutions, government offices, and industries. This trend is particularly concerning as these entities are encroaching on conservation and intermediate areas to construct physical structures. According to the Ministry of Forests and Environment, Nepal, approximately 63% of the encroached forest area is being utilized for agriculture and residential purposes. However, in recent times, there has been a shift towards using encroached forest land for housing and commercial activities rather than agriculture. Political parties and the government are inadvertently contributing to the issue by incentivizing forest encroachment through the construction of physical infrastructure using state resources. The slow progress in removing forest encroachments can be attributed to budget constraints, lack of manpower, coordination issues with security agencies, non-cooperation from local governments, communities, and political parties. As a result, older forest encroachments are becoming more entrenched while resources are primarily focused on addressing new encroachments. While it may be challenging to eliminate long-standing encroachments, preventing new encroachments and addressing recent ones is feasible. By conducting thorough investigations to identify genuine landless individuals and providing legal support only to those in need, the government can effectively control forest encroachment. Furthermore, it is crucial for all levels of government to refrain from investing in development projects within encroached forest areas and for local governments to actively support forest administration efforts.

Butwal Today, 11 January 2024

# लुम्बिनी प्रदेशको वन विधेयकको चिरफार

## Analysis of Forest Bill of Lumbini Province

युवराज कंडेल

*सविधान वमोजिम प्रदेशको एकल अधिकारको सूचीमा रहेको राष्ट्रिय वनको दिगो विकास, संरक्षण तथा वन पैदावारको सदुपयोग गर्न वन व्यवस्थापन पद्धति अपनाई वन, वन्यजन्तु, वातावरण, जलाधार एवम् जैविक विविधताको संरक्षण, सम्वर्द्धन र स्वस्थ पर्यावरणको प्रवर्द्धन गरी जनताको आधारभुत आवश्यकता पुरा गर्दै वन क्षेत्रलाई प्रदेशको आर्थिक विकासको महत्वपूर्ण श्रोतको रुपमा प्रभावकारी नियमन गरी प्रदेशको सम्बृद्धिमा योगदान पुऱ्याउन भनि लुम्बिनी प्रदेश सरकारले प्रदेश वन विधेयक तयार गरि प्रदेश सभामा दर्ता गरेको छ । एक वर्ष अघि नै विधेयकको मस्यौदा तयार गरि वन प्रशासकहरु विचमा छलफलमा ल्याइएपनि वन र वातावरण क्षेत्रमा संलग्न अन्यलाई भने विधेयकको बारेमा कमै जानकारी छ ।*

वनजंगल लुम्बिनी प्रदेशको मुख्य प्राकृतिक सम्पदा हो । हिमाली, पहाडी र मैदानी तीनै किसिमका भूभाग र फरकफरक किसिमको हावापानी पाइने भएकोले यो प्रदेशमा धेरै किसिमका वनस्पति, जडिबुटीहरु र वन्यजन्तुहरु पाइन्छन् । प्रदेश योजना आयोगका अनुसार यस प्रदेशमा वन क्षेत्रले १००८.७ हजार हेक्टर क्षेत्र (४५ प्रतिशत) ओगटेको छ । साथै, बुट्यान ११८.८ हजार हेक्टर (५ प्रतिशत ) भूभागमा रहेको छ । यस प्रदेशमा बाँके र बर्दिया गरी दुईवटा राष्ट्रिय निकुञ्ज र एउटा संरक्षण क्षेत्रको रुपमा कृष्णसार संरक्षण क्षेत्र पर्दछन् । ढोरपाटन शिकार आरक्षको केही भाग रुकुम पूर्वमा पर्दछ । तराईका वनहरू काठ उत्पादनको लागि निकै प्रसिद्ध छन् भने पहाडी र हिमाली क्षेत्रका वनहरू खोटो उत्पादन र बहुमुल्य जडिबुटीका लागि निकै महत्वपूर्ण थलो मानिन्छन । पछिल्लो समयमा प्रदेशका वन क्षेत्रहरु पर्या-पर्यटनका गन्तब्य बनिरहेका छन् । लुम्बिनी प्रदेशको वनमा प्रसस्त आर्थिक सम्भावना देखेर प्रदेश सरकारले वनलाई समृद्धिको आधार बनाउने कुराहरू सार्वजनिक गरिरहेको छ ।

नेपालको संविधानले प्रदेशको अधिकार क्षेत्रभित्र प्रदेश भित्रको राष्ट्रिय वन, जल उपयोग तथा वातावरण व्यवस्थापनलाई राखेको छ । साथै, संघ र प्रदेशको साझा सूचीमा वातावरण संरक्षण र जैविक विविधता, अन्तरप्रादेशिक रूपमा फैलिएको जंगल, हिमाल, वन संरक्षण र जल उपयोग रहेको छ । सविधान वमोजिम प्रदेशको एकल अधिकारको सूचीमा रहेको राष्ट्रिय वनको दिगो विकास, संरक्षण तथा वन पैदावारको सदुपयोग गर्न वन व्यवस्थापन पद्धति अपनाई वन, वन्यजन्तु, वातावरण, जलाधार एवम् जैविक विविधताको संरक्षण, सम्वर्द्धन र स्वस्थ पर्यावरणको प्रवर्द्धन गरी जनताको आधारभुत आवश्यकता पुरा गर्दै वन क्षेत्रलाई प्रदेशको आर्थिक विकासको महत्वपूर्ण श्रोतको रुपमा प्रभावकारी नियमन गरी प्रदेशको सम्बृद्धिमा योगदान पुऱ्याउन भनि लुम्बिनी प्रदेश सरकारले प्रदेश वन विधेयक तयार गरि प्रदेश सभामा दर्ता गरेको छ । एक वर्ष अघि नै विधेयकको मस्यौदा तयार गरि वन प्रशासकहरु विचमा छलफलमा ल्याइएपनि वन र वातावरण क्षेत्रमा संलग्न अन्यलाई भने विधेयकको बारेमा कमै जानकारी छ ।

उद्योग ,वन तथा वातावरण मन्त्रालयले तयार गरेको प्रदेश वन विधेयकमा संघीय सरकारले कार्यान्वयनमा ल्याएको वन ऐन २०७६ मा गरिएका सबै व्यवस्थाहरुका अतिरिक्त प्रदेशका अन्य वातावरणिय आवस्यकताहरुलाई पनि

समावेश गर्ने प्रयास गरेको देखिन्छ । विधेयकको परिच्छेद १ मा परिभाषाहरु छन् । विधेयकले दरिया वुर्दी  काठ र नदिजन्य पदार्थलाई स्पष्ट ढंगले परिभाषित गरेको छ । नदिजन्य पदार्थलाई आम्दानीको श्रोत बनाउनको लागि सरकारले विधेयकमा स्पष्ट परिभाषा उल्लेख गरेको हुनुपर्छ । विधेयकले वनमा रहेको वा पाइएको वा वनबाट ल्याइएको काष्ठजन्य, गैरकाष्ठ जन्य, खानी तथा खनिजजन्य,  पशुपन्छी, वन्यजन्तु र पशुपन्छी वा वन्यजन्तुको आखेटोपहार लाई वन पैदावार भनि परिभाषित गरेको छ ।  पर्यापर्यटन, वातावरणिय सेवा, वन क्षेत्र लगायतका परिभाषाहरू संघीय वन ऐन अनुसार कै रहेका छन् ।

,

विधेयकको परिच्छेद २ मा राष्ट्रिय वनको भू-स्वामित्व, भू-उपयोग तथा सीमा निर्धारण सम्बन्धी व्यवस्था गरिएको छ ।  यस परिच्छेदमा उल्लेखित राष्ट्रिय वनको भू-स्वामित्व तथा भू-उपयोग,  वन सिमाना निर्धारण र विवरण अध्यावधिक गर्नुपर्ने, .निजी जग्गा प्राप्त गर्न सक्ने, राष्ट्रिय वनमा कुनै व्यक्ति वा संस्थालाई हक प्राप्त नहुने, राष्ट्रिय वन क्षेत्रमा प्रवेश निषेध गर्ने गर्ने दफाहरू वन ऐन २०७६ कै व्यवस्थाहरु हुन् ।. प्रदेश सरकारले राष्ट्रिय वनको व्यवस्थापन, संरक्षण, संवर्द्धन, विकास र सदुपयोग गर्न रणनीतिक योजना बनाउन सक्ने ( दफा ८) व्यवस्थाले आवधिक योजनामा उल्लेखित वन सम्बन्धि रणनीतिहरु पुरा गर्न मद्दत पुग्नेछ ।  वन क्षेत्रभित्र वन, वनस्पति तथा वन्यजन्तुका लागि अध्ययन, अनुसन्धान र नमूना सङ्कलन गर्न चाहने व्यक्ति वा संस्थाले तोकिए बमोजिमको दस्तुर बुझाई मन्त्रालयबाट अनुमतिपत्र लिनु पर्ने, अध्ययन, अनुसन्धान वा शैक्षिक प्रदर्शनीको प्रयोजनको लागि राष्ट्रिय वनको कुनै भाग माग गरेमा मन्त्रालयले निर्धारण गरेको शर्त बमोजिम कार्य गर्ने गरी गरी तोकिएको दस्तुर लिई निश्चित अवधिका लागि उपलब्ध गराउन सक्ने ( दफा ९) ले आफूखुशी नेपालको वनको बारेमा अध्ययन गर्ने, नमुना संकलन गर्ने कामलाई रोक्नेछ र भने अध्ययन अनुसन्धान कार्य व्यवस्थित हुने विस्वास गर्न सकिन्छ । नेपालमा वन सम्बन्धि योजना र कार्यक्रमहरु छिटोछिटो परिवर्तन भैरहने , सरकारपिच्छे कार्यक्रमहरु फरक हुने भएकोले वन विकासमा समस्या भैरहेको छ । विधेयकको परिच्छेद ३ मा गरिएको व्यवस्थाले  सरकारद्वारा व्यवस्थित वन एवम् चक्ला वनको क्षेत्र निर्धारण, कार्ययोजना निर्माण र व्यवस्थापन साझेदारीसंग सम्वन्धित कार्यहरु गर्न निर्देशित गर्नेछ भने दफा ११ ले गरेको व्यवस्थाले रणनितिक योजना र आवधिक वन व्यवस्थापन योजनाले निर्दिष्ट गरेका कार्य तथा वन विकास सम्बन्धी कार्य बाहेक सरकारद्वारा व्यवस्थित वनमा अन्य कुनै पनि कार्य गर्न रोक लगाउनेछ ।

प्रदेश वन विधेयकको संरक्षित वन सम्बन्धी व्यवस्था, साझेदारी वन सम्वन्धी व्यवस्था  र धार्मिक वन सम्बन्धि व्यवस्था संघीय वन ऐन अनुरुप नै रहेका छन् । सामुदायिक वन सम्बन्धि व्यवस्था (परिच्छेद ६) लाई प्रादेशिकरण गरिएको छ । अन्य व्यवस्थाहरु भने यथावत नै रहेका छन् । दफा ३० मा भएको  सामुदायिक वन उपभोक्ता समूह सम्वन्धी व्यवस्था संघीय ऐनमा भन्दा केहि फरक छ । सामुदायिक वन उपभोक्ता समूहमा वन क्षेत्र नजिक स्थायी बसोबास रहेका, वनको संरक्षणमा योगदान वा उपभोगमा प्रत्यक्ष संलग्न हुने, अन्यत्र वन उपभोक्ता समूहको सदस्य नरहेका इच्छुक प्रति घरधुरी एक सदस्य हुने व्यवस्था यसमा छ । केहि ठाउँमा केहि टाठाबाठा व्यक्तिहरुले परिवारका सदस्यहरुलाई धेरै वनमा सदस्य बनाएर धेरै वनबाट फाइदा लिएको देखिन्छ । विधेयकको दफा ३० उपदफा ३ ले यो ऐन प्रारम्भ हुनुअघि कुनै घरधुरी एक भन्दा बढी उपभोक्ता समूहमा सदस्य रहेको भए यो ऐन प्रारम्भ भएको एक वर्ष भित्र कुनै एक उपभोक्ता समूहको मात्र सदस्य कायम रहने गरी समूह छनौट गर्नुपर्ने व्यवस्था गरेको छ । प्रदेश वन ऐन आएपछि धेरै वनको सदस्य भएर फाइदा लिने प्रवृति अन्त्य हुने देखिन्छ । सामुदायिक वनाहरुले दिर्घकालिन कार्ययोजना बनाउन् भन्ने मर्म यस विधेयकको रहेको देखिएको छ । सामुदायिक वनको कार्ययोजनाको

अवधि वनको अवस्था हेरी पाँच वर्ष वा दश वर्षको हुने उल्लेख भएपनि यसको निर्णय कसरि गरिनेछ भन्ने उल्लेख गरिएको छैन । उत्पादनशील वनको हकमा उपभोक्ता समूहको चाहनामा समूहले वन सम्बर्द्धन प्रणालीमा आधारित कार्ययोजना तयार गरी लागु गर्नसक्ने (दफा २३ उपदफा ५ ) व्यवस्थाले वनमा आय आर्जनका कामहरु गर्न सामुदायिक वनलाई सहज हुनेछ । सामुदायिक वन उपभोक्ता समिति परिवर्तन हुदा कार्ययोजनामा परिवर्तन गर्न खोज्ने रोग सामुदायिक वनहरुमा देखिएको छ । यो समस्यालाई विधेयकको दफा २४(२)मा भएको विशेष अवस्था परी निर्देशकले लिखित सहमति दिएमा बाहेक दुई वर्ष पुरा नभई कार्ययोजना संशोधन गरिने छैन भन्ने व्यवस्थाले पक्कैपनि रोक्नेछ ।

यो विधेयकले प्रदेश सरकारलाई विकास आयोजना संचालन गर्न आवश्यक परेको बखत उपभोक्ता समूहलाई हस्तान्तरण गरिएको सामुदायिक वनको पुरै वा केही भाग प्रदेश सरकारले फिर्ता लिन सक्ने( दफा २५ उपदफा ६) अधिकार प्रदान गरेको छ । वन फिर्ता लिदा त्यस्ता वनको उपभोक्तालाई सम्भव भएसम्म अन्यत्र नजिकैको सामुदायिक वनमा व्यवस्थापन गर्न सकिने भन्ने व्यवस्था विधेयकमा छ । वर्षौ देखि संरक्षण गरेको वनलाइ सरकारले खोस्दा उपभोक्ताहरु पक्कैपनि चुप लाग्ने छैनन् । त्यसैगरी नजिक अर्को वन नभएको अवस्थामा र अर्को सामुदायिक वनले नयाँ उपभोक्ताहरुलाई स्वीकार नगरेको अवस्थामा उपभोक्ताहरु वन विहिन हुने र आपसी द्वन्द हुने देखिन्छ ।

वन ऐन २०७६ ले उपभोक्ता समूहले कार्ययोजना बमोजिम आर्जन गरेको वार्षिक आयबाट कम्तीमा पच्चीस प्रतिशत रकम वनको विकास, संरक्षण र व्यवस्थापन कार्यमा खर्च गर्नुपर्ने व्यवस्था भएकोमा प्रदेश वन विधेयकले त्यसलाई बढाएर ३५ प्रतिशत पुऱ्याएको छ । खर्च गर्ने क्षेत्रहरु संघीय ऐनकै व्यवस्था अनुसार भएपनि उपभोक्ता समूहले आफ्नो कुल आम्दानीको दश प्रतिशत नवढ्ने गरी प्रशासनिक खर्च गर्न सुविधा विधेयकले प्रदान गरेको छ । सामुदायिक वनको आम्दानीमा स्थानीय र प्रदेश सरकारले कर लगाउन लागेको भनि गतवर्ष सामुदायिक वन उपभोक्ता महासंघले आन्दोलन चर्काएको थियो । प्रदेश वन विधेयकले सामुदायिक वनको आम्दानीमा कर लगाउने कुरा नगरेपनि समूहभन्दा बाहिर बिक्री वितरण गरिएको वन पैदावार बिक्रीबाट प्राप्त रकमको पच्चीस प्रतिशत रकम प्रदेश सञ्चित कोषमा जम्मा गर्नुपर्ने प्रावधान राखेको छ । यसले सामुदायिक वनकर्मीलाई पक्कैपनि असन्तुष्ट बनाउनेछ ।

वनलाई जीविकोपार्जन र आय आर्जनको श्रोत बनाउने कुरा लुम्बिनी प्रदेशका सबै नीति कार्यक्रमहरु र आवधिक योजनामा समेत परेको छ । वन ऐन २०७६ ले समेत यो कुरालाई सम्बोधन गरेको छ । लुम्बिनी प्रदेश सरकारले तयार गरेको वन विधेयकमा गरिबहरुको लागि कबुलियत वन र व्यवसायिक कबुलियत वन बनाएर आय आर्जनमा सघाउने व्यवस्था गरिएको छ । विधेयकको दफा २९ ले सामुदायिक वन उपभोक्ता समूहले स्वीकृत वन कार्ययोजनाको अधिनमा रही सामुदायिक वनको कुनै भाग समूह भित्रका विपन्न वर्गका उपभोक्ताले सामुहिक रूपमा आयआर्जनका लागि वनजन्य क्रियाकलाप संचालन गर्न समूह बनाई अवधि तोकी कबुलियतनामा गरी उपलब्ध गराउन सक्ने व्यवस्था गरेको छ । त्यसैगरी दफा ३६ मा आवधिक वन व्यवस्थापन योजनाले निर्धारण गरेको क्षेत्रमा सम्बन्धित अधिकारीले वनको संरक्षण र विकासमा वाधा नपर्ने गरी गरिबीको रेखामुनि रहेका घर परिवारको गरिबी न्यूनीकरण गर्न सामुहिक रूपमा आयआर्जनका लागि वनजन्य क्रियाकलाप संचालन गर्न समूह गठन गरी बीस प्रतिशत भन्दा कम छत्र घनत्व भएको राष्ट्रिय वनको कुनै भाग तथा ठुला रुख बिरुवा राख्न जोखिम हुने विद्युत प्रसारण लाइन मुनीका जग्गाहरुमा तुलनात्मक लाभ बढी हुने कम उचाइका नगदे घुसुवा वाली, फलफुल, जडिबुटी, घाँसबाली लगाउन सम्बन्धित अधिकारीले कबुलियती वन प्रदान गर्न सक्ने व्यवस्था गरिएको छ । स्थानीय तहले

सहजीकरण र सहयोग गर्ने हो भने आफ्नो जग्गा जमिन नभएका विपन्न परिवारले यस प्रावधानबाट फाइदा लिन सक्नेछन ।

प्रदेशमा भएका सबै वन क्षेत्रहरुमा उत्पादनशील वन छैनन् र त्यस्ता क्षेत्रको सदुपयोग पनि हुन सकेको छैन । यस्ता क्षेत्रको सदुपयोग गर्ने गरि व्यवसायिक कबुलियत वन बनाउन सकिने बाटो पनि वन विधेयकले खुला गरिदिएको छ । वन पैदावारमा आधारित उद्योगहरुलाई आवश्यक पर्ने कच्चा पदार्थ उत्पादन गर्न, वृक्षारोपण गरी वनपैदावारको उत्पादनमा अभिवृद्धि गरी बिक्री वितरण गर्न वा उपयोग गर्न, जडीबुटी खेती वा कृषि वन बाली वा वागवानी वा पशु फर्म सञ्चालन गर्न, कीटपतङ्ग तथा वन्यजन्तु फर्म सञ्चालन गर्न,तथा हिल स्टेशन, साहसिक पर्यटन, केबलकार, रिसोर्ट, प्राकृतिक संग्राहलय लगायतका पर्यापर्यटन व्यवसाय सञ्चालन गर्न नेपाल सरकारको सहमति लिई प्रदेश सरकारले रणनितिक योजनाको अधिनमा रहि आवधिक वन व्यवस्थापन योजनाले निर्धारण गरेको औसत बीस प्रतिशत वा सो भन्दा कम छत्र घनत्व भएको राष्ट्रिय वनको कुनै भागमा सरकार आफैले वा प्रतिस्पर्धाको आधारमा सङ्गठित संस्था, उद्योग वा समुदायलाई वनको संरक्षण र विकास हुने गरी बढीमा चालिस वर्ष अवधिको कबुलियती वनको रुपमा प्रदान गर्न सक्ने व्यवस्था विधेयकले गरेको छ । यो प्रावधानको दुरुपयोग हुन नदिने हो भने वनको वैकल्पिक उपयोग र आर्थिक उपार्जनमा राम्रै उपलब्धि हासिल गर्न सकिनेछ ।

प्रदेश वन विधेयकले निजि वनको सन्दर्भमा संघीय वन ऐनले भन्दा केहि फरक व्यवस्था गरेको छ । वन ऐन २०७६ को दफा ३५ मा निजी वन दर्ता गराउन चाहने कुनै व्यक्ति वा संस्थाले निजी वन दर्ताको लागि डिभिजन वा सब डिभिजन वन कार्यालयको सिफारिस सहित स्थानीय तहमा निवेदन दिनुपर्ने प्रावधान राखेकोमा प्रदेश वन विधेयक ( दफा ७०) ले सोझै स्थानीय तहमा निजि वन दर्ताको लागि निवेदन दिनुपर्ने र त्यसरी निवेदन परेमा सम्बन्धित सव डिभिजन वन कार्यालयसँगको समन्वयमा आवश्यक जाँचवुझ गरी सम्वन्धित स्थानीय तहले निजी वन दर्ता गरी प्रमाणपत्र दिने र त्यसको विवरण स्थानीय तहले नै सम्बन्धित सव डिभिजन वन कार्यालयमा समेत पठाउनु पर्ने प्रावधान राखिएको छ । यसले निजि वन दर्ता गर्दा वन कार्यालय धाउनुपर्ने झन्झट कम गरेको छ । कानून बमोजिम दर्ता भएका निजी वन राष्ट्रियकरण नगरिने, निजी वनमा निजी वन धनिले कृषि वन, पूर्ण वन वा जडीबुटी खेती गर्न सक्ने, निजी वनको धनीले आफ्नो इच्छा अनुसार निजी वनको विकास, संरक्षण, व्यवस्थापन गर्न तथा वनपैदावारको उपयोग गर्न वा मूल्य निर्धारण गरी बिक्री वितरण गर्न सक्ने व्यवस्था विधेयकमा भएपनि संघीय वन ऐनमा उल्लेखित निजि वनमा वन्यजन्तु पालन गर्न पाउने कुरा भने समावेश गरिएको छैन । निजी वनका धनीलाई निजी वन लगाउन, हुर्काउन, सिंचाईको व्यवस्थापन गर्न, रोग, किरा आदिको उपचार गर्न लाग्ने खर्चमा प्रदेश सरकारले उत्प्रेरणात्मक सहयोग स्वरुप विशेष सुविधा, छुट, विमा लगायतका तोकिए बमोजिमको आर्थिक र प्राविधिक सहुलियत उपलब्ध गराउन सक्ने व्यवस्था विधेयकमा छ । यस्तो व्यवस्थाले खेर गएको जग्गामा निजि वन विकास गर्न र तराइको दक्षिणी क्षेत्रमा वन पैदावारको उपलब्धता वृद्धि गर्न पक्कैपनि सहयोग पुग्नेछ ।

पछिल्लो समयमा सार्वजनिक स्थलका बोट विरुवा मास्ने प्रवृति बढ्दै गएकोले वस्ती नजिक हरियाली हराउदै गएको छ । वन विधेयकले यस्तो कार्यलाई रोक्नको लागि कानूनी व्यवस्था गरेको छ । विधेयकको दफा ७३(२) मा कसैले पनि सार्वजनिक सडक, नहर, कुलो, पोखरीको किनार, पार्क, चौर, चौतारो, धार्मिक स्थल, अन्त्यष्टी स्थल वा यस्तै अन्य संवेदनशील ठाउँमा लगाएका रुख विरूवाहरु काट्न मास्न नपाइने उल्लेख छ । सोहि दफामा प्रचलित कानूनको अधिनमा रही स्थानीय तहले आफ्नो क्षेत्र भित्र खाली रहेको ऐलानी, पर्ति, सार्वजनिक जग्गामा सार्वजनिक उपयोगका लागि वन वाटिका, उद्यान, हरित पार्क र वनको रूपमा विकास, संरक्षण र व्यवस्थापन गर्न सक्ने तथा

यसका लागि स्थानीय तहले बनाएका कानून मान्य हुने व्यवस्था गरिएको छ । यस्तो व्यवस्थाले सार्वजनिक क्षेत्रको हरियाली रुख विरुवा संरक्षण र उपयोगमा स्थानीय तहलाई बाटो खोलिदिएको छ ।

विकास र आधुनिकताको नाममा वस्तिहरुका रुख विरुवा धमाधम मासिदैछन् । शहरहरु हरियाली विहिन हुदा कुरूप त् देखिएका छन् नै स्वच्छ वायु, शितलता र चराको वासस्थानको कमि भैरहेको छ । विस्वभरी नै शहरी वन विकासको अवधारणा विकसित भैरहेको छ र विकसित देशहरुका शहरहरु वनभित्र रहेजस्तो देखिन थालेका छन् । शहरहरुलाई हरियालीयुक्त बनाउनको लागि शहरी वन विकास निर्देशिका आइसकेको छ र संघीय वन ऐनले समेत शहरी वन विकास र व्यवस्थापन सम्बन्धि प्रावधान राखेको छ । तर प्रदेश वन विधेयकमा शहरी वन सम्बन्धमा कुनै उल्लेख गरिएको छैन । त्यसैगरी सिमसार क्षेत्रको संरक्षण र व्यवस्थापनको बारेमा समेत प्रदेश वन विधेयक मौन रहेको छ । विकास आयोजनालाई वन क्षेत्र प्रयोग गर्न दिने कुरा कानूनमा व्यवस्था भए बमोजिम हुने भन्ने कुरा विधेयकमा उल्लेख गरि संघीय ऐनको मुख ताकेको देखिन्छ । राष्ट्रिय वनभित्र खनिज पदार्थको अध्ययन, अन्वेषण र उत्खनन् गर्नुपर्ने भएमा मन्त्रालयको स्वीकृति लिनु पर्ने( दफा ४४)व्यवस्था संघीय वन ऐन २०७६ को दफा ४३ ले गरेको व्यवस्था अनुसार नै रहेको देखिन्छ ।

वन विधेयकको परिच्छेद १५मा वन पैदावारको सदुपयोग, ओसार पसार र आपुर्ति सम्बन्धि व्यवस्था गरिएको छ । यस परिच्छेदका केहि व्यवस्थाहरु संघीय वनका भन्दा फरक र व्यवहारिक भएको देखिन्छ । राष्ट्रिय वनबाट उत्पादित काठ, दाउरा लगायतका वन पैदावारको स्वामीत्व र मूल्य निर्धारण, राजश्व संकलन, तथा शुल्क, दस्तुर, दर निर्धारण गर्ने अधिकार प्रदेश सरकारमा रहने व्यवस्था विधेयकले गरेको छ । वन पैदावारको बिक्री वितरण, वन पैदावारको निकासी पैठारी सम्बन्धी व्यवस्था, वन पैदावारको मूल्यमा सहुलियत प्रदान गर्न सक्ने, प्रदेश सरकारबाट इजाजत प्राप्त वन पैदावारमा आधारित कागज उद्योग र अन्य उद्योगलाई कच्चा पदार्थ उपलब्ध गराउन सकिने व्यवस्थाले वनमा आधारित उद्योगको संचालनमा सहयोग पुग्नेछ । परम्परागत आरन व्यवसायको लागि आवस्यक पर्ने गोललाई पनि कच्चा पदार्थको रुपमा उपलब्ध गराउन सकिने व्यवस्था यसमा नहुदा अवैध रुपमा रुखमा आगो लगाउने वा आरने पेशा नै छोड्नुपर्ने बाध्यता आउने देखिन्छ ।

प्रदेश सरकारले प्रदेश भित्रका सरकारी कार्यालयमा उपयोग हुने फर्निचर लगायतका काठजन्य बस्तुहरूको प्रयोग सम्वन्धी मापदण्ड निर्धारण गर्ने ( दफा ८२) व्यवस्था राम्रो हो तर फर्निचर बनाउदा नेपाली काठ नै प्रयोग गर्नुपर्ने कुरा उल्लेख नहुदा मापदण्ड पालना हुने कुरामा सहजै विस्वास लाग्दैन । अहिले प्रदेशमा बसाईसराई उच्च छ । बसाई सरेर अर्को ठाउँमा घर बनाउदा पुरानो घरको काठपात र अन्य सामग्री लैजान नपाउदा पुरानो घरका काठपात त्यत्तिकै कुहिएर जाने अनि नयाँ घर बनाउदा महंगोमा काठ किन्नुपर्ने समस्या बढिरहेको छ । यस्तो समस्या समाधान गर्न वन विधेयकको दफा ८१ मा कसैले कम्तिमा १० वर्ष पुरानो घरगोठमा प्रयोग भएको काठ वा काठजन्य सामग्री अन्यत्र लैजान चाहेमा सम्बन्धित वडा कार्यालयको सिफारिसमा स्थानान्तरण गर्न सकिने व्यवस्था गरिएको छ । यसले नयाँ ठाउँमा नयाँ घर बनाउनेलाई सहज त हुने छ नै, वन माथिको चाप समेत घटाउन सहयोग पुग्नेछ । -

बुटवल टुडे, २०७८ श्रावण ६

# Analysis of Forest Bill of Lumbini Province

Yubaraj Kandel

*Summary*

According to The Constitution of Nepal, management of national forests, water usage, and environmental protection is placed to the jurisdiction of the provinces. Furthermore, the shared list of responsibilities between the union and the states includes the protection of the environment and biological diversity, as well as the management of forests and water resources that span across regions. The Lumbini State Government has drafted the State Forestry Bill, which has been presented to the province Assembly for approval. This bill aims to ensure the sustainable development, protection, and utilization of forest resources within the National Forest, which is under the exclusive authority of the state. The Forest Bill encompasses various environmental needs of the province, in addition to the regulations outlined in the Forest Act of 2076. It includes provisions for protected forests, partnership forests, and religious forests, aligning with the Federal Forest Act.

The management of community forests has been decentralized, while other regulations remain unchanged. The Province Government of Lumbini has introduced measures in the Forest Bill to assist impoverished individuals in generating income through the establishment of Leasehold forests and commercial Leasehold forests. The bill also allows for the development of commercial forests by utilizing unproductive forest areas within the province.The bill prohibits the cutting of trees in public or sensitive areas and empowers local authorities to develop and manage public lands as green parks or forests for communal use. The laws enacted by local governments for this purpose will be upheld. Notably, the Provincial Forestry Bill does not address urban forests or the protection and management of wetlands. It appears that the regulations concerning the utilization, distribution, and supply of forest products vary and require further clarification.

*Butwal Today, 21 July 2021*

# लुम्बिनी प्रदेशको वन विधेयकमा जैविक विविधता

## Biodiversity in Lumbini Province Forest Bill

युवराज कंडेल

*लुम्बिनी प्रदेश सरकारले तयार पारेको प्रदेश वन विधेयकले वन व्यवस्थापनको कुराहरु मात्र समेटेको छैन, जैविक विविधता संरक्षण सम्बन्धमा संघीय वन ऐन भन्दा केहि फरक व्यवस्थाहरु समेत गरेको छ । विधेयकको परिच्छेद ११का व्यवस्थाहरु चराचुरुङ्गी तथा वन्यजन्तु संरक्षण र व्यवस्थापन सम्बन्धी छन् । विधेयकको दफा ४५ले प्रदेश सरकारले रैथाने तथा आगन्तुक पन्छी र संकटापन्न वन्यजन्तुको वासस्थान संरक्षण तथा वन्यजन्तुको आवत जावत गर्ने क्षेत्र रहेको प्रदेश भित्रको कुनै क्षेत्रलाई प्रदेश राजपत्रमा सूचना प्रकाशित गरी बर्ड स्यान्चुअरी वा जैविक मार्ग घोषणा गर्न सक्ने र त्यस्ता क्षेत्रमा पर्यापर्यटनका कृयाकलापहरू संचालन गर्न मन्त्रालयले अनुमति दिन सक्ने कुरा उल्लेख छ ।*

लुम्बिनी प्रदेशको वन विधेयकको चिरफार गर्ने क्रममा अघिल्ला लेखहरुमा वन ब्यवस्थापन सम्बन्धमा गरिएका ब्यवस्थाहहरुको चर्चा गरिएको थियो । लुम्बिनी प्रदेश सरकारले तयार पारेको प्रदेश वन विधेयकले वन व्यवस्थापनको कुराहरु मात्र समेटेको छैन, जैविक विविधता संरक्षण सम्बन्धमा संघीय वन ऐन भन्दा केहि फरक व्यवस्थाहरु समेत गरेको छ । विधेयकको परिच्छेद ११का व्यवस्थाहरु चराचुरुङ्गी तथा वन्यजन्तु संरक्षण र व्यवस्थापन सम्बन्धी छन् । विधेयकको दफा ४५ले प्रदेश सरकारले रैथाने तथा आगन्तुक पन्छी र संकटापन्न वन्यजन्तुको वासस्थान संरक्षण तथा वन्यजन्तुको आवत जावत गर्ने क्षेत्र रहेको प्रदेश भित्रको कुनै क्षेत्रलाई प्रदेश राजपत्रमा सूचना प्रकाशित गरी बर्ड स्यान्चुअरी वा जैविक मार्ग घोषणा गर्न सक्ने र त्यस्ता क्षेत्रमा पर्यापर्यटनका कृयाकलापहरू संचालन गर्न मन्त्रालयले अनुमति दिन सक्ने कुरा उल्लेख छ । जैविक करिडोर मासेर प्रदेश राजधानी बनाउने घोषणा गरेको प्रदेश सरकारले नयाँ जैविक मार्गहरु तयार गर्ने कुरा पत्याइहाल्न सकिदैन तर जगदीशपुर, राप्ती नदि क्षेत्र, बर्दियाको कर्णाली नदि क्षेत्रलाई चरा आरक्ष भने बनाउन सकिने सम्भावना छन् ।

अहिले समुदायले संरक्षण गरिरहेका वन क्षेत्रलाई चरा आरक्ष वा जैविक मार्ग बनाउदा स्थानीयले त्यसमा कसरि सहभागिता जनाउन र लाभ लिन सक्छन्? पर्यापर्यटनका गतिविधिहरु संचालन गर्न कसले पाउँछन्? लाभको बाँडफाँड कसरि हुन्छ भन्ने जस्ता कुराहरुको बारेमा वन विधेयक मौन छ । यसैले यो दफा बमोजिमको कार्य गर्न खोज्दा सरकार-समुदाय द्वन्द निम्तिने देखिन्छ ।

प्रदेश भरि नै वन्यजन्तुले किसानलाई दुख दिएका छन्, वन्यजन्तुकै कारणले खेतीपाती र वस्ती नै छोड्नुपर्ने बाध्यता बढिरहेको छ । वन्यजन्तुलाई लखेट्दा, मार्दा मानिसहरु जेल जानुपर्ने कानूनी अवस्थामा प्रदेश वन विधेयकले किसानलाई केहि राहत दिन खोजेको देखिन्छ । विधेयकको दफा ४६ मा प्रदेश सरकारले राजपत्रमा सूचना प्रकाशित गरी कुनै खास क्षेत्रमा खास समयका लागि कुनै वन्यजन्तुलाई समस्याग्रस्त वन्यजन्तु घोषणा गर्न सक्नेछ र त्यसरी समस्याग्रस्त घोषणा गरिएका वन्यजन्तुलाई सोही सूचनामा तोकिएको शर्त र बन्देजको अधिनमा रही खेत, खला, बारी र तोकिएको क्षेत्रमा विना अनुमति लखेट्न, धपाउन, पक्रन वा अन्य व्यवस्था गर्न सकिने र उक्त कार्य गर्दा कुनै वन्यजन्तुको मृत्यु भएमा प्रचलित कानून बमोजिम कुनै कसुर गरेको मानिने छैन भन्ने व्यवस्थाले किसानलाई बाली संरक्षणमा पक्कैपनि मद्दत पुग्नेछ । त्यसैगरी यहि दफामा कुनै क्षेत्र विशेषमा सम्वन्धित

अधिकारीले बँदेलको संख्या बहन क्षमता भन्दा वढी भएको सिफारिस गरेमा तोकिएको प्रकृया पुरा गरी मन्त्रालयले सो क्षेत्रमा बँदेलको शिकार गर्न अनुमति दिन सक्ने भन्ने व्यवस्था भएपनि अन्य वन्यजन्तुको शिकारको बारेमा विधेयकमा केहि कुरा उल्लेख गरिएको छैन । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण ऐन २०२९ संसोधन नभईकन प्रदेश वन विधेयकले गरेका यी व्यवस्थाहरु कार्यान्वयनमा ल्याउन भने कठिन हुनेछ ।

वन्यजन्तु संरक्षण ऐन २०२९ को दफा १५ ग ले कुनै सस्था, निकाय वा स्थानीय तहले संरक्षण शिक्षा, मनोरंजन, प्रजनन, बन्शानु श्रोत संरक्षण तथा अध्ययन अनुसन्धान प्रयोजनका लागि तोकिए पमोजिम इजाजतपत्र प्राप्त गरि चिडियाखाना संचालन गर्न पाउने र दफा १५ क ले  वन्यजन्तु उद्धार केन्द्र र वन्यजन्तु अस्पताल संचालन गर्न पाउने व्यवस्था गरेको छ । यहि व्यवस्था नुसार देशका विभिन्न भागमा विभिन्न निकायले मिनी चिडियाखाना संचालन गर्दै आएका छन् । नाफा कमाउन संचालन गरिएका त्यस्ता नाममात्रका चिडियाखाना वा वन्यजन्तु उद्दार केन्द्रमा वन्यजन्तुहरु कष्टकर अवस्थामा राखिएको देखिन्छ । प्रदेश वन विधेयकले चिडियाखाना वा प्राणी उद्यान स्थापना गर्न सकिने ( दफा ४७) व्यवस्था मात्र गरेको छैन, चिडियाखाना वा प्राणी उद्यान स्थापना गरी सञ्चालन गर्दा प्राप्त वन्यजन्तुको संरक्षण हुन सक्ने वासस्थान, आहार र उपचारको सुनिश्चितता भएको हुनुपर्ने तथा चिडियाखाना वा प्राणी उद्यान सञ्चालन गर्न चाहनेले तोकिएको मापदण्ड पूरा गर्नुपर्ने र अनुमति नलिई वा मापदण्ड पूरा नगरी चिडियाखाना वा प्राणी उद्यान सञ्चालन गरेको पाइएमा प्रचलित कानून बमोजिम दण्ड सजाय हुने व्यवस्था समेत गरेको छ । यसले भविस्यमा चिडियाखानाको नाममा ब्यापार गर्ने तर जीवजन्तुको उचित आहारा र वासस्थानको प्रबन्ध नगर्नेहरुलाई कारबाही गर्न सहज हुनेछ ।

रा.नि. तथा वन्यजन्तु संरक्षण ऐनको दफा १५ क मा वन्यजन्तुको पालन गर्न पाउने भनि गरिएको व्यवस्था प्रदेश वन विधेयकको दफा ४८ मा यथावत राखिएको छ. तर वन्यजन्तु संरक्षण ऐनमा उल्लेखित वन्यजन्तुको पालनबाट लाभ लिने कुराहरु यसमा छैनन् । दफा ४८ को उपदफा ४ मा  वन्यजन्तु पालन तथा व्यवस्थापन सम्वन्धी अन्य व्यवस्था तोकिए बमोजिम हुनेछ भन्ने उल्लेख गरि भविस्यको लागि सहज बाटो खोजिएको हुनुपर्छ । संघीय कानूनमै उल्लेख भएकोले अनुसन्धान तथा शैक्षिक प्रदर्शनीको लागि वन्यजन्तु प्रदान गर्न सकिने कुरा विधेयकमा छैन र अन्तर प्रदेश वन्यजन्तु हस्तान्तरण र साझा व्यवस्थापनका कुराहरु पनि यसमा अट्न सकेका छैनन् ।

नेपालमा रैथाने वनस्पतिको ठुलो भण्डार भएपनि संरक्षणको कमि, अव्यवस्थित संकलन , मिचाहा प्रजातिका वनस्पतिको विस्तार जस्ता कारणले गर्दा यस्ता वनस्पतिहरु हराउदै जान लागेका छन् । यस विषयलाई प्रदेश वन विधेयकको परिच्छेद १६ मा सम्बोधन गरिएको छ । विधेयकको दफा ८६ मा प्रदेश सरकारले दुर्लभ, लोपोन्मुख, रैथाने, संकटापन्न जडिबुटीजन्य वनस्पतिको अध्ययन, अनुसन्धान, प्रदर्शनी वा व्यवसायिक खेती प्रवर्द्धनका लागि प्रयोगशाला सहितको जडिबुटी अनुसन्धान केन्द्र स्थापना गर्न सक्ने,  वनस्पति प्रजातीको संरक्षण शिक्षा, मनोरञ्जन, पर्यापर्यटन, प्रजनन्, वंशाणु श्रोत संरक्षण तथा अध्ययन, अनुसन्धान गर्ने प्रयोजनका लागि मन्त्रालयले वनस्पति उद्यान स्थापनाको अनुमति दिन सक्ने, स्थापित वनस्पति उद्यानले वनस्पति प्रजातिको आनुवंशिक स्रोतको संरक्षणका लागि सिड बैंकको व्यवस्था गर्ने जस्ता प्रावधानहरु समावेश गरिएको छ । स्थापना हुने बनस्पति उद्यानको संचालन र व्यवस्थापन प्रदेश सरकार, स्थानिय तह, संगठित संघ सस्था वा निजी क्षेत्रबाट एकल वा सार्वजनिक निजी साझेदारीबाट गर्न सकिने व्यवस्थाले दुर्लभ, लोपोन्मुख, रैथाने, संकटापन्न जडिबुटीजन्य वनस्पतिको अनुसन्धान , संरक्षण र पर्यापर्यटनमा सहयोग पुग्ने आशा गर्न सकिन्छ तर अनुसन्धान र संरक्षणको नाममा व्यवसायिक सोच भएका निजि क्षेत्रले अनधिकृत लाभ लिने र आनुबंशिक सम्पदाको चोरी हुने सम्भावना पनि उत्तिकै छ । प्रदेश भित्र पाइने विभिन्न प्रजातिका वनस्पति तथा वनस्पति स्रोतको आधिकारिक अभिलेख सहीतको नमूना सङ्गह गरि सुरक्षित राख्ने, प्रचार गर्ने र अनुसन्धानमा सहयोग गर्ने दायित्व प्रदेश सरकारको हो. तर यो कामको लागि हर्वेरियम केन्द्र स्थापना गर्न प्रदेश सरकारले अनुमति दिनेछ भन्ने व्यवस्था दफा ८७ मा राखी प्रदेश सरकार आफ्नो दायित्वबाट पन्छिन खोजेको देखिन्छ ।

विधेयकमा समावेश बिउ उत्पादन क्षेत्रको व्यवस्थापन सम्बन्धित व्यवस्था वन ऐन २०७६ अनुरुप नै रहेको छ । वृक्षारोपण सम्बन्धि

व्यवस्था भने वन ऐनको भन्दा बढी दमदार देखिन्छ । विधेयकको दफा ९० मा डिभिजन वन कार्यालयलाई वृक्षारोपणमा बढी जिम्मेवार बनाउन खोजिएको छ । अहिले वृक्षारोपणको नाममा प्राकृतिक वातावरणमा नभएका बाहिरि विरुवाहरु रोप्ने चलन बढेको छ । यसले रैथाने वनस्पति विस्तारमा समस्या मात्र भएको छैन, स्थानीयका वन सम्बन्धि आवस्यकताहरु पुरा गर्न समेत कठिन भएको छ । वन विधेयकले बृक्षारोपणको लागि स्थानीय वा रैथाने प्रजातिलाई प्राथमिकता दिनु पर्ने र वन क्षेत्र भित्र बाह्य प्रजातिको वृक्षारोपण गर्नु पर्दा वृक्षारोपण सम्बन्धी अनुसन्धानलाई आधार लिई गर्नु पर्ने व्यवस्था गरेको छ । यसलाई वन क्षेत्रमा मात्र नभएर हरेक स्थानमा हुने वृक्षारोपणमा लागू गर्नेगरी विधेयकमा संसोधन गर्नु आवस्यक छ । विधेयकमा उल्लेखित वन डढेलो सम्बन्धि व्यवस्थाहरुलाई वन ऐन २०७६ मा भन्दा विशिष्टीकृत गरिएको छ । वन उद्यम र पर्यापर्यटन कार्यक्रम सञ्चालन, वातावरणीय सेवाको व्यवस्थापन , वन क्षेत्रको जग्गामा भू उपयोगमा परिवर्तन नहुने गरी तोकिए बमोजिम कृषि वन प्रणाली अवलम्बन गर्न सकिने जस्ता विषयहरु संघीय वन ऐन अनुरुपकै छन् । वन क्षेत्रभित्र कुनै पनि व्यक्ति, संस्था वा निकायले विज्ञापन सम्वन्धी होर्डिगं बोर्ड, व्यानर वा अन्य प्रचार सामाग्री राख्न नपाइने (दफा ९३), वनक्षेत्रभित्र सवारी साधनको गति नियन्त्रण सम्वन्धी व्यवस्था ( दफा ९४), राष्ट्रिय वन क्षेत्रभित्र कसैले पनि प्लाष्टिक वा प्लाष्टिकजन्य फोहोर वा अन्य कुनै प्रकारको फोहोर फाल्न प्रतिबन्ध ( दफा ९५), रोग किराको नियन्त्रण तथा व्यवस्थापन ( दफा ९६) को व्यवस्था वन र वन्यजन्तु सम्रक्षनका लागि नविनतम कानूनी व्यवस्थाको रुपमा आएका छन् । त्यस्तै वन संरक्षण, व्यवस्थापन तथा विकास सम्बन्धी कुनै कामको सिलसिलामा कुनै उपभोक्ता, श्रमिक वा कर्मचारीको मृत्यू वा घाईते भएमा तथा तोकिएका वन्यजन्तुको कारणले कसैको धनजनको क्षति भएमा त्यस्तो क्षति वापत पीडितलाई प्रदेश सरकारले राहत उपलब्ध गराउने व्यवस्था विधेयकमा छ ।यसले वन संरक्षणमा खटिनेलाई संरक्षण गर्न र मानव वन्यजन्तु द्वन्द घटाउन सहयोग पुग्नेछ । गिट्टी ढुंगालाई प्रदेशको आम्दानीको श्रोत बनाउने कुरा प्रदेश सरकारको नीति कार्यक्रम र बजेट बक्तव्यमा पर्दै आएको छ । यसलाई कानूनी स्वरूप दिनको लागि वन विधेयकमा नै वन क्षेत्र भित्रको खोला खोल्सी व्यवस्थापन सम्बन्धि दफा समावेश गरि नदीजन्य पदार्थको संकलन व्यवस्थापन र विक्री वितरण सम्बन्धि व्यवस्था गरिएको छ. यो जटिल र महत्वपूर्ण विषयको बारेमा अन्य धेरै प्रावधानहरु भने विधेयकमा राखिएको छैन् ।

ढिलै भएपनि लुम्बिनी प्रदेश सरकारले वन विधेयक मस्यौदा तयार गरेको छ । वन, वन्यजन्तु, जलाधार क्षेत्र, खनिज क्षेत्रका लगायत संरक्षणकर्मी सबै सरोकारवालाहरुसंग विस्तृत पुर्व छलफल चलाएर विधेयक तयार गर्नुपर्नेमा वन कर्मचारी र प्राविधिकहरु विचमा मात्र छलफल चलाएर तयार पारिएको यस विधेयकमा समुदायको वन माथिको अधिकारको संरक्षण, वन माथिको पहुँच वृद्धि, वन पैदावारको आयात विस्थापन, वन पैदावारको आपूर्तिको दिगोपनका लागि कानूनी व्यवस्थाहरु आएका छैनन् । वनको प्रमुख अंग बनेको सिमसार व्यवस्थापनका कुराहरु यसमा अटेका छैनन् । वातावरणिय सेवाको सुनिस्चितता, पर्यापर्यटन र यसको लाभका कुरा कम आएका छन् । वन सम्बन्धमा स्थानीय सरकारले प्रदेश सरकारकै मुख ताक्नुपर्ने गरि धेरै व्यवस्थाहरु ल्याईएका छन् । यो विधेयकमा वन व्यवस्थापनको दर्शन स्पष्ट छैन ।. राजनैतिक खिचलोको अवस्थाले गर्दा प्रदेश सभा सचिवालयमा पुगेको बिधेयक टेबल हुन रसभामा पुग्न अझै समय लाग्नेछ । सभामा प्रस्तुत भएपछी प्रदेश सभा सदस्यहरुले यसलाई हुबहु पारित गर्नुभन्दा अघि ब्यापक अध्ययन र सरोकारवालाहरुसँग छलफल गर्नु जरुरि छ । सरकारले ल्याएको भन्दैमा हतारहतार पारित गर्नेतिर मात्र लागियो भने त्यसले दिर्घकालिन नकारात्मक प्रभाव पार्न सक्नेछ ।

*बुटवल टुडे, २०७८ श्रावण १७*

# Biodiversity in Lumbini province Forest Bill

Yubaraj Kandel

*Summary*

The province Forest Bill proposed by the Lumbini State Government includes provisions that differ from the Federal Forest Act, particularly in terms of protecting biological diversity. Paragraph 11 of the bill focuses on the protection and management of birds and wild animals. Additionally, Section 45 of the Bill empowers the ministry to designate bird sanctuaries or biological trails and authorize tourism activities in these areas. Section 46 of the bill allows the provincial government to declare certain wild animals as problematic in specific areas for a limited time. This enables the authorities to take necessary actions, such as chasing, capturing, or other measures, without prior permission in designated areas. Importantly, these actions will not be considered offenses under existing laws, providing relief to farmers in protecting their crops. The Provincial Forest Bill not only addresses the establishment of zoos (Section 47), but also sets strict criteria for their operation to ensure the welfare and conservation of wildlife. Violating these criteria or operating a zoo without permission can result in penalties.

The bill also emphasizes the importance of plantation, with a focus on local or indigenous species and research-based approaches for introducing foreign species in forest areas. Furthermore, the bill emphasizes the protection of community rights to forests, enhancing access to forest resources, sustainable management of forest products, wetland conservation, and the promotion of tourism benefits. Overall, the State Forest Bill aims to strengthen biodiversity protection and sustainable forest management practices.

*Butwal Today, 1 August 2021*

# सामुदायिक वनभित्रका बेथितीहरु

## Drawbacks of Community Forestry

युबराज कंडेल

*सामुदायिक वनले वातावरणिय सेवा, समुदाय सशक्तिकरण र वनश्रोतको उपलब्धतामा सहयोग गरेको कुरामा कुनै शंका छैन तर यसो भन्दैमा सबै सामुदायिक वनहरू समुदायमैत्री छन् भन्न सकिने खालका छैनन् । समुदायको नाममा निश्चित व्यक्तिहरुले मात्र वनमा ढलिमली गर्ने प्रवृतिल गर्दा धेरै ठाउँमा वनले अपनत्व मुमाउदै गएको मात्र छैन, वन संरक्षणमा प्रतिकुल असर समेत परिरहेको छ । देश संघियतामा गईसकेको अवस्थामा सामुदायिक वनको भूमिका पहिले भन्दा अझ बढेको छ । यस्तो अवस्थामा सामुदायिक वनमा देखिएका कमजोरीहरुलाई तत्कालै सुधार गरेर संघियताको मर्म अनुसार सामुदायिक वनलाई स्थानीय समृद्धिको आधार बनाउने गरी पुनर्संरचना गर्नु जरुरि छ । सबैको सहभागिता र पहुँच हुने गरि सामुदायिक वनलाई निरन्तरता दिन सकियो भने सामुदायिक वनहरू वास्तवमै प्रकृति संरक्षण, दिगो विकास र समृद्धिको आधार बन्न सक्नेछन ।*

नेपालमा वन र वातावरण संरक्षणको कुरा गर्दा सामुदायिक वनलाई अघि सारिन्छ । नेपालका सामुदायिक वनहरुले समुदायको सहभागिता बढी भएमा प्राकृतिक श्रोत संरक्षण कार्य कठिन हुदैन भन्ने राम्रो उदाहरण प्रस्तुत गरेका छन् । पछिल्ला ५ दशकहरुमा निरन्तर खुम्चिरहेको नेपालको वनक्षेत्र र हरियाली अहिले बढेको देखिएकोमा पछिल्लो सर्वेक्षणले नेपालमा ४०.३६ प्रतिशत वन क्षेत्र र ४.३८ प्रतिशत बुट्यान क्षेत्र गरि देशको ४४.७४ प्रतिशत क्षेत्र वनले ढाकेको देखिन्छ ( नेपाल वन श्रोत प्रतिवेदन २०१५)। नेपालको वन क्षेत्रलाई जोगाईराख्न र खुईलिदै गएका जमिनलाई हराभरा बनाउनमा सामुदायिक वनहरुको मुख्य भूमिका रहेको छ । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार गत फाल्गुन मसान्त सम्ममा अनुसार नेपालको ३५ प्रतिशत जनसंख्या करिव १९ हजार ४९३ सामुदायिक वन समुहमा आवद्ध भएर १८ लाख १३ हजार ४७८ हेक्टर वनजंगल को उपयोग र संरक्षणमा सक्रिय छन र यसबाट करिव २४ लाख ६२ हजार घरधुरि लाभान्वीत भएका छन् । साथै ४२,३३७ हेक्टर वनक्षेत्र ७,२४० वटा कबुलियती वन उपभोक्ता समूहद्वारा व्यवस्थापन हुँदै आएको छ । अहिले सामुदायिक वनहरुको संख्या हरेक महिना बढिरहेकोछ र संख्या बृद्धि संगै सामुदायिक वनमा विकृतिहरु पनि बढिरहेका छन् । सामुदायिक वन भित्र थुप्रै बेथितिहरु लेखिएका छन् । केहि राम्रा भानिएका सामुदायिक वन समुहको चमक भित्र लुकेका यस्ता बेथितिहरुले सामुदायिक वनको गरिमालाई घटाईरहेका छन् ।

### १. वनको गलत सिमांकन

वन ऐन २०४९ र नियमावली २०५१ अनुसार वनसंग नजिक रहेका र वनका वास्तविक उपभोक्ताहरु मिलेर सामुदायिक वन समुह गठन गर्न सक्ने र कुनैपनि वन क्षेत्रलाई सामुदायिक वन बनाउन गाउँ ,नगर वा जिल्लाको सिमानाले फरक नपार्ने कुरा कुरा उल्लेख छ । वन नियमावली २०४९ मा जे लेखिएको भएपनि नेपालका सबैजसो ठाउँमा यिनै एकाईहरुको सिमानालाई आधार मानेर वन समुह गठन गरेको पाईन्छ । कुनै एउटा गाउँ वा नगरको सिमा जोडिएका वनको उपभोक्ताहरु अर्कै गाउँ वा नगरको समेत हुन्छन तर प्रशासनिक एकाईको आधारमा वन समुहहरु गठन गर्दा वास्तविक उपभोक्ताहरु वनको उपभोग गर्नबाट बन्चित हुन्छन् । जिल्ला, गाउपालिका र नगरको सिमानाको आधारमा वन समुह गठन गर्ने चलनले गर्दा अर्को क्षेत्रमा रहेका वास्तविक उपभोक्ताहरुको वन उपभोग गर्ने अधिकार खोसिएको छ र सिमित व्यक्तिहरुले मात्र वन उपभोग गरिरहेका छन् । यस्तो कार्यले वनमा द्वन्द बढेको मात्र छैन, संरक्षण कार्यमा पनि कठिनाई उत्पन्न भैरहेको छ ।

### २.बहिष्करणमा टाढाका उपभोक्ता.

वन नियमावली २०५१ को नियम २६ (१) मा गाउँ वस्तीबाट जंगलको दुरी र वन व्यवस्थापन गर्ने स्थानीय उपभोक्ताको चाहना र व्यवस्थापन क्षमता समेतलाई ध्यान दिएर राष्ट्रिय वनको कुनै भाग सामुदायिक वनको रुपमा सुम्पन सक्ने कुरा उल्लेख भएपनि कतिसम्म  टाढाका वासिन्दाहरुलाई उपभोक्ता मान्ने भन्ने बारेमा वन ऐन र नियमावली मौन छ । अहिले वनसंग सिमा जोडिएका वासिन्दाहरु लाई मात्र उपभोक्ता मानेर वन समुह सुम्पने गरिएको छ । वन समुहको गठन, संरक्षण र उपभोग गर्न बाट टाढाका मानिसहरु बन्चित छन् । वन नजिकका व्यक्तिहरुले आफुलाई मात्र वनको मालिक ठानेर सामुदायिक वन बनाउने क्रम चलिरहदा अघिल्लो दिनसम्म वनको उपभोग गरिरहेका टाढाका उपभोक्ताहरु भोलिपल्टै वन माथिको परम्परागत अधिकार गुमाउन वाध्य छन् । टाढाका वासिन्दाहरुलाई सामुदायिक वनका उपभोक्ताको रुपमा समेट्न नसक्दा धेरै जनताहरु वन पैदावारको उपभोग र संरक्षण गर्ने अवसरबाट वन्चित रहदै आएका छन् । परम्परागत उपभोक्ताहरुलाई सामुदायिक वन समुहको गठन, संरक्षण, व्यवस्थापन र उपभोगमा छुटाउदा सामुदायिक वन कार्यक्रमको मूल मर्म नै हराए जस्तो भैरहेको छ ।

### ३. उपभोक्ताको नाममा ढलिमली

उपभोक्ताहरुको सर्वसम्मतीको आधारमा सबैको प्रतिनिधित्व हुनेगरी सामुदायिक वन समूह गठन गर्ने भने पनि अधिकांस वन समुहहरुको कार्य समिति गठन दलीय भागवण्डाको आधारमा हुने गरेकोले वनको अवस्था र उपभोक्ताहरुको चाहना एवं आवस्यकता भन्दा पनि दलीय स्वार्थ अनुसार काम हुने गरेका छन्। कतिपय ठाउँमा काठ ठेकेदारको आर्थिक लगानीमा सामुदायिक वन समुहहरु गठन भएका खबरहरु पनि बारम्बार आउने गर्छन । साना वन समुहमा उपभोक्ताहरुको कदर हुने भएपनि ठुला समुहहरुमा वनको योजना, निर्णय र उपभोग प्रक्रियामा सबै उपभोक्ताहरुलाई थाहै दिईदैन । पछिल्लो समयमा उपभोक्ताहरुलाई थाहै नदिई केहि टोले नेताहरु मिलेर पदहरुको भागबण्डा गर्ने, वनका विभिन्न समिति र उपसमितिहरुमा घुमाई फिराई आफुहरु मात्र बस्ने वातावरण निर्माण गर्ने काम भैरहेको छ । सामुदायिक वनका प्रभावशाली पदहरुमा जातीय र दलीय प्रभावशाली व्यक्तिहरुमात्र सहभागी हुने भएकोले वनले बनाउने कार्यक्रम र खर्च गर्ने रकममा उनीहरुले नै मोज गर्ने गरिरहेका छन् । वास्तविक रुपमा लैंगिक, जातीय र वर्गीय समावेशीकरण नभएको कारणले गर्दा सामुदायिक वनले गरिवी निवारण र जीविकोपार्जन जस्ता क्षेत्रमा अपेक्षित सफलता पाउन सकेको छैन ।

### ४. नाम मात्रको समावेशिता

आमसहभागिता, आमसहमति,न्यायोचितता, लैंगिक समानता / समता, जीविकोपार्जन,श्रोत माथिको पहुँच तथा अधिकार , श्रोतको एकीकृत व्यवस्थापन, पारदर्शिता र दिगो वन व्यवस्थापन सामुदायिक वनका विशेषताहरु हुन् । महिला, विपन्न, दलित र आदिवासीहरु वनसँग बढी निकट रहेका हुन्छन् । वन माथिको निर्भरता र आवस्यकताले गर्दा उनीहरु वनप्रति बढी जिम्मेवार रहेका हुन्छन त्यसैले सामुदायिक वन समुहको गठन, व्यवस्थापन र उपयोगमा यी समुहहरुको सहभागितालाई नीतिगत रुपमा स्वीकार गरिएको छ । सामुदायिक वनमाा समावेशीता सुनिश्चित गर्नको लागि उपभोक्ता समिति गठन समितिमा विपन्न, दलित, आदिवासी, जनजाति समेतको प्रतिनिधित्व हुने गरी कम्तिमा ५० प्रतिशत महिलाको अनिवार्य व्यवस्था गर्नुपर्ने र बाकि ५० प्रतिशतमा विपन्न, दलित, आदिबासी,जनजाति र जातजातिको समानुपातिक प्रतिनिधित्व हुनुपर्ने तथा अध्यक्ष वा सचिव मध्ये कम्तिमा एक जना महिला हुनुपर्ने कुरा सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन २०७१मा व्यवस्था गरिएको छ ।

नीतिगत बाध्यताले गर्दा सामुदायिक वन समुहका पदाधिकारीहरुमा महिलाहरुको संख्या धेरै देखिएपनि व्यवहारिक रुपमा महिलाहरुलाई भूमिका विहिन बनाउने गरिएको छ । प्रतिनिधिमूलक ढंगले महिला छनौट गर्नुपर्नेमा नेता र केहि टाठाबाठाहरुले आफुमा आश्रित वा आफुलाई मान्नुपर्ने महिलाहरुलाई समुहको पदाधिकारी बनाई नीति निर्माणमा आफु हावी हुने प्रवृति अधिकांश सामुदायिक वनमा देखिएको छ । करिब १९ हजार भन्दा बढि सामुदायिक वन समुहहरु मध्ये एक हजार ७२ वटा वन मात्र महिलाहरुले मात्र व्यवस्थापन गर्न सक्नु र सम्पूर्ण सामुदायिक वनको समितिमा ३१.६ प्रतिशत मात्र महिलाहरु हुनुमा ( वन विभाग २०७३) नेपालका वनहरुमा लैंगिक समावेशिता हुन नसकेको प्रस्टै हुन्छ ।

परम्परागत रुपमा आदिबासी, विपन्न र दलितहरु वनमा बढी आश्रित भएको पाइन्छ त्यसैले सामुदायिक वन समुहको नेतृत्व मात्र नभएर निर्णय अधिकार र लाभको बाँडफाड सामाजिक समावेशिता हुनु वातावरणिय न्यायको दृष्टिले अत्यावस्यक छ र यसलाई वन विकास कार्यक्रमको मार्गदर्शनले समेत प्राथमिकतामा राखेको छ । सामाजिक चेतनास्तरमा आएको परिवर्तन र राजनैतिक खिचातानीले गर्दा सामुदायिक वन उपभोक्ता समुहमा जातीय प्रतिनिधित्व वृद्धि हुदै गएको भएपनि समावेशिताको नाममा वनको संरक्षण र उपभोगमा कहिल्यै भूमिका नभएका जातीय वा दलीय प्रभुत्वशाली व्यक्ति नै पदाधिकारी बनिरहेको देखिन्छ ।

## ५. आम्दानी नै उपलब्धि ?

अहिले नेपालका सबैजसो सामुदायिक वन समुहहरुले उपलब्ध वन पैदावारहरुको उपयोग गरि अधिकतम आर्थिक आम्दानी गर्ने ध्याउन्न मा रहेका छन् । वन ऐन र नियमावलीले पहिले वन संरक्षण गर्दै उपभोक्ताको आवस्यकता पुरा गर्ने र त्यसपछी मात्र आर्थिक उपार्जनमा ध्यान दिनुपर्ने अनि समुहको आम्दानी वनके हितमा खर्चिनु पर्ने व्यवस्था गरेको भएपनि अधिकांस वन समुहको कार्य समितिले उपभोक्तालाई अप्ठ्यारोमा पारेर भएपनि आम्दानी गर्ने र कोष वृद्धि गर्ने योजनामा तल्लिन देखिन्छन् ।

केहि सामुदायिक वनहररुले पर्यापर्यटन, जडिबुटि र घाँसलाई आम्दानीको श्रोट बनाएको भएपनि धेरैले काठपात र दाउरा बेचेरै आम्दानी गरिरहेका छन् । गैह्रकाष्ठ वन पैदावरको गपयोग तथा वातावाणिय सेवाबाट पनि आम्दानी हासिल गर्न सकिनेमा त्यसतर्फ निकै कम समूहले मात्र धयान दिएको पाईन्छ । आम्दानीको नाममा वनका रुखहरुको एकोहोरो दोहन गरिरहने र सामुदायिक वनको आम्दानी वन संरक्षण भन्दा पनि कार्यालय संचालन, तलबभत्ता, आर्थिक सहायता,चन्दा ,पुरस्कार , भ्रमण र वनभोजमा खर्चनु पक्कै पनि राम्रो कुरा होईन ।

## ६. हरियालीमा मात्र जोड

“कुनै समय नांगो देखिएका डाँडाहरु सामुदायिक वन बनेपछि अहिले हराभरा देखिन थालेका छन् । “ सामुदायिक वनका सरोकारवालाहरुले सधै यहि भन्ने गर्छन । निश्चय नै सामुदायिक वनको कारणले गर्दा नेपालको वन क्षेत्र हरियो रहेको छ । तर माथिबाट हेर्दा हरियो हुदैमा वनलाई राम्रो मानिहाल्न मिल्दैन । वन राम्रो हुनको लागी आकाशे हरियाली आवस्यक पर्छ । कुनैपनि वनमा वन पैदावारको घनत्व राम्रो राख्नको लागी त्यहाँ बोटबिरुवाको पुनरुत्पादन भैरहनु पर्छ । वन नियमावलीमा रुख दाउराको कटान मुछान गर्दा घनत्व बिगार्न नहुने र पुनरुत्थान हुने व्यवस्था गर्नुपर्ने कुरा उल्लेख भएपनि सामुदायिक वन समुहहरुले त्यसतर्फ राम्ररी ध्यान दिएको पाइदैन । निरन्तर पुनरुत्पादन भएन भने अहिलेको वन घनत्व लामो समयसम्म कायम रहन सक्दैन भन्ने सोंच्न नसकेको कारणले गर्दा सामुदायिक वन समुहहरु ठुला र काठ प्रजातीका रुख हुर्काउने र हरियाली बढाउने काममा लागेका छन् । ठुला रुखहरु हुर्किर्दै जाने तर वनमा अन्य साना बोटबिरुवाहरु नासिने क्रम बढ्दै जादा धेरै वनस्पतहिरु २/४ दशकपछि मानिसहरुको स्मृतिमा मात्र सिमित नरहलान भन्न सकिदैन ।

## ७. वन्यजन्तुलाई ठाँउ छैन

वन्यजन्तु बिनाको बनजंगल अधुरो हुन्छ. वनको पर्यावरर्णीय चक्रलाई सुचारु राख्न वनमा वन्यजन्तुहरु हुनु अनिवार्य हुन्छ । नढाँटी भन्ने हो भने नेपालका सामुदायिक वनहरु वन्यजन्तुमैत्री नै छैनन् । समुहको कार्य योजनामा वन्यजन्तुको संरक्षणमा ध्यान दिईनेछ भन्ने वाक्य उल्लेख हुने गरेको भएपनि कुनैपनि वन समुहले वन्यजन्तुको वृद्धी, विकास र बासस्थान संरक्षणमा ध्यान दिएको देखिदैन । वनलाई उत्पादनमूलक बनाउने नाममा वनस्पती विविधता संरक्षणमा वेवास्ता गर्ने, वनभित्रका पानीका श्रोतहरु संरक्षणमा ध्यान नदिने कार्यले गर्दा वन्यजन्तुका आहारका श्रोतहरु तिव्रगतिमा विनाश भैरहेका छन् । सामुदायिक वनमा बर्षेनी हुने थिनिंग प्रुनिंग कार्यले गर्दा वन्यजन्तुको लागी सुरक्षित (भर्जीन)जंगल प्राप्त छैन जसको कारणले गर्दा वन्यजन्तुको आहारविहारमा प्रतिकुल असर परेको छ । वन समुहहरुले काठ तस्करहरुलाई कारवाही गरेपनि वन्यजन्तु चोरी शिकारीलाई ध्यान नदिने भएकोले अचेल वन्यजन्तु तस्करहरु सामुदायिक वनमा सलबलाउन थालेका छन् ।

**लुम्बिनी अन्चलमा सामुदायिक वनको अवस्था**

| जिल्ला | सा.वन संख्या | सा.वनको क्षेत्रफल | उपभोक्ता परिवार संख्या |
|---|---|---|---|
| गुल्मी | ३८५ | १५२८३ | ५४२४३ |
| पाल्पा | ६४५ | ३४८२६ | ५५११० |
| अर्घाखाँची | ४१४ | २८२९९ | ४६३९६ |
| कपिलवस्तु | १०५ | १३२९६ | ३०३३१ |
| रुपन्देही | ९२ | ११६५४ | ४७३१७ |
| नवलपरासी | १२३ | १५७०७ | ३४१०० |

श्रोतः वन विभाग, सामुदायिक वन महाशाखा,२०७३

## ८. संघियतामा सामुदायिक वन

देश संघियतामा गएको छ । स्यानिय तहको चुनावसंगै वनमा कसको अधिकार रहने भन्ने बारेका विवादहरु सतहमा आईरहेका छन् । संबैधानिक व्यवस्था अनुसार वनक्षेत्रको नीति तथा कार्यक्रम निर्माण र कार्यान्वियन गराउने दायित्व कानुनी रूपमै स्थानीय, प्रदेश तथा संघ तीनै तहमा पुगेको छ । नेपालको संबिधान २०७२ को अनुसूची ८मा स्थानीय सरकारका र संविधानको अनुसूची ९ ले संघ, प्रदेश र स्थानीय तहका साझा अधिकारको सुची प्रस्तुत गरेको छ । स्थानिय तहको सेवा सन्चालन तथा ब्यवस्थापन सम्बन्धि आदेश २०७४को अनुसूचि ३ को दफा ४(ङ) ले सामुदायिक वनको दर्ता,अनुमति,सन्चालन र ब्यवस्थापनको अधिकार संघ, प्रदेश र स्थानीय तहलाई साझा रुपमा प्रदान गरेको छ । त्यस्तै दफा ४(घ)मा सामुदायिक वनबाट प्राप्त रोयल्टी यि तिनै तहले बाँड्ने ब्यवस्था छ । यी प्रवधानहरले समग्र वन प्रशासन र सामुदायिक वनको

नियन्त्रण र स्वामित्वको बारेमा अन्यौलता देखिएको छ ।

स्थानीय सरकारको प्रमुख आर्थिक श्रोत नै वन लगायतका प्राकृतिक श्रोतहरु हुन् । स्थानीय तहले स्थानीय समृद्धिका योजना बनाउदा अनिवार्य रुपामा वन र वन्य सम्पदाको उपयोग र परिचालन गर्ने नीति बनाउनेछ । यो क्रममा स्थानीय तहले सामुदायिक वनको स्वामित्व आफुले लिन खोज्ने प्रवल सम्भावना देखिन्छ । स्थानीय सरकारले वनको लाभमा स्वामित्व खोज्ने तर समुदायले आफुले संरक्षण गरेको वनको लाभ र स्वामित्वमा अन्य निकायलाइ भाग नदिने कारणले गर्दा समुदायिक वन र स्थानीय सरकार बिचमा द्वन्द उत्पन्न हुने र त्यसले सामुदायिक वन विकास, संरक्षण र उपयोगमा मात्र नभई स्थानीय समृद्धिमा समेत प्रतिकुल असर पर्ने देखिन्छ । अहिले धेरै सामुदायिक वनहरू एक भन्दा धेरै स्थानीय तहमा परेका छन् । त्यसैगरी सामुदायिक वन एउटा स्थानीय तहामा र वनका उपभोक्ताहरु अर्कै स्थानीय तहमा समेत परेका छन् । यो अवस्थाले विभिन्न स्थानीय तहहरु बिचमा द्वन्द हुने देखिन्छ ।

सामुदायिक वनले वातावरणिय सेवा, समुदाय सशक्तिकरण र वनश्रोतको उपलब्धतामा सहयोग गरेको कुरामा कुनै शंका छैन तर यसो भन्दैमा सबै सामुदायिक वनहरू समुदायमैत्री छन् भन्न सकिने खालका छैनन् । समुदायको नाममा निश्चित व्यक्तिहरुले मात्र वनमा ढलिमली गर्ने प्रवृतिल गर्दा धेरै ठाउँमा वनले अपनत्व मुमाउदै गएको मात्र छैन, वन संरक्षणमा प्रतिकुल असर समेत परिरहेको छ ।

***देश संघियतामा गईसकेको अवस्थामा सामुदायिक वनको भूमिका पहिले भन्दा अझ बढेको छ । यस्तो अवस्थामा सामुदायिक वनमा देखिएका कमजोरीहरुलाई तत्कालै सुधार गरेर संघियताको मर्म अनुसार सामुदायिक वनलाई स्थानीय समृद्धिको आधार बनाउने गरी पुनर्संरचना गर्नु जरुरि छ ।*** सबैको सहभागिता र पहुँच हुने गरि सामुदायिक वनलाई निरन्तरता दिन सकियो भने सामुदायिक वनहरू वास्तवमै प्रकृति संरक्षण, दिगो विकास र समृद्धिको आधार बन्न सक्नेछन ।

बुटवल टुडे,२५ श्रावण २०७४
yrkandel@gmail.com

# Drawbacks of Community Forestry

Yubaraj Kandel

*Summary*

Community Forests (CF) play a crucial role in safeguarding the forested areas of Nepal and transforming barren land into lush green spaces. The number of community forests is steadily increasing each month, but unfortunately, so are the weaknesses within these forests. These violations are tarnishing the reputation and integrity of community forests.The formation of community forest user groups (CFUGs) based on administrative boundaries has resulted in the exclusion of true forest consumers. This has led to individuals who are distant from the formation, protection, and enjoyment of CFUGs being deprived of their rights. By excluding traditional consumers from the decision-making processes of community forests, the essence of the community forest program is being compromised. Even when CFUGs are formed with the consensus of consumers, the composition of the forest group's working committee often reflects political affiliations rather than the needs of the forest and its users. In order to promote inclusivity within CFUGs, CF development guidelines 2071 ensure that consumer committees represent marginalized groups such as the poor, Dalits, and indigenous peoples. However, some leaders and factions continue to exert control over policy-making by appointing individuals who are beholden to them, rather than those who truly represent the group. While all CFUGs in Nepal have the potential to generate income through tourism, herbal products, and environmental services, many groups fail to capitalize on these opportunities. Instead, funds are often misallocated towards unnecessary expenses and forest celebrations, rather than towards the protection and sustainable management of the forest ecosystem. The neglect of wildlife habitat and conservation within CFUGs is also a growing concern. Recent conflicts between CFUGs and local governments highlight the underlying weaknesses within the current community forest management system. If these issues are not addressed promptly, there is a risk of the failure of CF programs in Nepal. It is imperative that stakeholders work together to address these challenges and ensure the long-term success and sustainability of community forests in the region.

*Butwal Today, 9 August 2017*

# अनुत्पादक क्षेत्रमा सामुदायिक वनको लगानी

Investment of community forest User Group's Income in unproductive sector

युवराज कंडेल

*वन संरक्षण, जीविकोपार्जन र सामुदायिक विकास तथा सशक्तिकरण जस्ता क्षेत्रहरु लगानीको हिसाबले सामुदायिक वनका प्राथमिकताका क्षेत्रहरु भएपनि धेरै सामुदायिक वनहरुले यो प्राथमिकतालाई वेवास्ता गर्दै गएको देखिन्छ । जंगलका रुख काटेर धेरै भन्दा धेरै आम्दानी गर्न चाहने तर त्यो आम्दानीलाई वन संरक्षण र स्थानीय बासिन्दाहरुको जीविकोपार्जन तथा सशाक्तिकरणमा खर्च गर्नुभन्दा पनि समुहका पदाधिकारीहरुको हित र प्रचारमुखी कार्यक्रममा खर्च गर्ने प्रवृति बढिरहेको छ । अधिकांश सामुदायिक वन समुहले हरेक वर्ष अवलोकन भ्रमण लैजाने गर्दछन र त्यो भ्रमण टोलीमा सधैभरी समुहका पदाधिकारी, उनीहरुका आफन्त र राजनैतिक दलका स्थानीय नेता मात्र पर्दछन । सिक्किम, दार्जिलिंग, पोखरा, नैनीताल जस्ता पर्यटकीय स्थलको भ्रमणमा गएर उनीहरुले सामुदायिक वनको उन्नतिको कुरा सिक्नु भन्दा मनोरंजन गर्ने बाहेक अरु उद्धेश्य नै राखेका हुदैनन् ।*

नेपालमा वन र वातावरण संरक्षणको कुरा गर्दा सामुदायिक वनलाई अघि सारिन्छ ।परापूर्वकालदेखि नै नेपालको वन संरक्षण तथा व्यवस्थापनमा स्थानीय जनताको प्रत्यक्ष तथा परोक्ष रुपमा सहभागिता रहँदै आए तापनि नीतिगत रुपमा राष्ट्रिय वन योजना, २०३३ मा वन व्यवस्थापनमा जनसहभागिताको व्यवस्था गरिइको थियो । सोही योजना बमोजिम वि.सं. २०३५ सालमा वन ऐन, २०१८ लाई संशोधन गरी वनको व्यवस्थापन गर्ने अधिकार र जिम्मेवारी स्थानीय निकायलाई सुम्पने प्रक्रिया सुरु भएको थियो । वि.सं २०४४ सालमा सम्पन्न पहिलो सामुदायिक वन राष्ट्रिय गोष्ठीले परम्परागत रुपमा वनको प्रयोग गर्दै आएका उपभोक्ताहरूको समूह बनाई वन हस्तान्तरण गर्नुपर्ने कुरा औंल्यायो ।यसैको आधारमा वि.सं. २०४६ सालमा बनेको वन विकास गुरुयोजनाले सामुदायिक वनलाई प्राथमिकता प्राप्त कार्यक्रमको रुपमा राखी वन व्यवस्थापनमा जनसहभागिता हुनुपर्ने कुरामा जोड दिएपछि कानूनि आधार नहुदा नहुदै पनि वि.सं.२०४६ पछि सामुदायिक वन स्थापना गर्ने लहर चलेको थियो । वन ऐन, २०४९ र वन नियमावली, २०५१ बनेपछि मात्र कानूनी हैसियत प्राप्त गरेका नेपालका सामुदायिक वनहरुले समुदायको सहभागिता बढी भएमा प्राकृतिक श्रोत संरक्षण कार्य कठिन हुदैन भन्ने राम्रो उदाहरण प्रस्तुत गरेका छन् ।

पछिल्ला ५ दशकहरुमा निरन्तर खुम्चिरहेको नेपालको वनक्षेत्र र हरियाली अहिले बढेको देखिएको छ । २ दशक अघि सम्म देशको कूल भूभागको २९ प्रतिशत क्षेत्रमा वन र १०.६ प्रतिशत क्षेत्रमा बुट्यान रहेकोमा पछिल्लो सर्वेक्षणले नेपालमा ४०.३६ प्रतिशत वन क्षेत्र र ४.३८ प्रतिशत बुट्यान क्षेत्र गरि देशको ४४.७४ प्रतिशत क्षेत्र वनले ढाकेको देखिन्छ ( नेपाल वन श्रोत प्रतिवेदन २०१५)। दुई दशक अघिको तुलनामा अहिले प्रति हेक्टर रुखको संख्या ४०७ देखि ४३० वटा र वन क्षेत्रको कूल बायोमास ४ हजार २९० लाख टन देखि ११ लाख ५९७ लाख टन पुगेको देखिन्छ । नेपालको वन क्षेत्रलाई जोगाईराख्न र खुईलिदै गएका जमिनलाई हराभरा बनाउनमा सामुदायिक

वनहरुको मुख्य भूमिका रहेको छ । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार नेपालमा १८ हजार ९६० वटा सामुदायिक वन समुह गठन भै हस्तान्तरण भएका छन । नेपालका ७४ जिल्लाहरुमा गरि २३ लाख ९२ हजार ७५५ परिवारले सामुदायिक वन समुहमा आवद्ध भएर १७ लाख ९८ हजार ७३३ हेक्टर वन व्यवस्थापन र उपयोग गरिरहेका छन् ।

सामुदायिक वन कार्यक्रमको मुख्य उद्धेस्य वन व्यवस्थापनमा समुदायलाई सहभागी बनाएर वन संरक्षण कार्यलाई दिगो बनाउनुको साथै स्थानीय वासिन्दाहरुको जीविकोपार्जन र वातावरण संरक्षणमा सघाउनु हो । समुदायले वनको व्यवस्थापन गर्दा समुदायलाई आवस्यक पर्ने घाँस ,दाउरा, काठपात त प्राप्त हुन्छ नै वन

पैदावारको विक्री वितरणबाट आयआर्जन समेत हुने गर्दछ । सामुदायिक वन समुहहरुले आर्जन गरेको आम्दानीलाइ सामुदायिक वनको विकास, व्यवस्थापन र संरक्षणमा खर्च गर्नुपर्ने कुरा वन ऐन २०४९को दफा ३०(क)मा उल्लेख गरिएको छ । ऐनमा उल्लेखित व्यवस्था अनुसार सामुदायिक वन उपभोक्ता समूहले कार्ययोजना बमोजिम आर्जन गरेको आयबाट कम्तीमा पच्चीस प्रतिशत रकम सामुदायिक वनको विकास, संरक्षण र व्यवस्थापन कार्यमा खर्च गर्नुपर्नेछ र बाँकी रकम अन्य
विकास कार्यको लागि खर्च गर्न सक्छन । सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन २०७१ ले सामुदायिक वनको आम्दानीको कम्तिमा ३५ प्रतिशत रकम सहभागितामूलक सम्पन्नता स्तरिकरणलाई आधार मानि विपन्न वर्गका महिला, दलित,आदिबासी,जनजातिका लागि लक्षित कार्यक्रममा परिचालन गर्नुपर्ने र बाँकि रकम समुहको वार्षिक योजना तयार गरि साधारण सभाको निर्णय अनुसार सामुदायिक विकास कार्यका लागि खर्च गर्न सकिने व्यवस्था गरेको छ । वन ऐन र मार्गदर्शनले उपभोक्ता समुहको कोषलाई पारदर्शी तथा न्यायोचित हिसावले परिचालन तथा समुपयोग गर्नुपर्ने

कुरालाई जोड दिएको पाइन्छ । समुहको कोषको सहि सदुपगोग हुन सकोस भनेर साधारण सभाबाट निर्णय गरेर मात्र समुहको कोष परिचालन गर्नुपर्ने तथा साधारण सभा र कोष संचालक समितिको हरेक बैठकपछि समुहको आम्दानि खर्चको विवरण सहित मुख्य निर्णयहरु सबैलाई जानकारी गराउने उद्धेस्यले सार्वजनिक गर्ने व्यवस्था मिलाउनुपर्ने, कोषको लेखापरिक्षण गरि लेखा परिक्षण प्रतिवेदन जिल्ला वन कार्यालयमा बुझाउनुपर्ने र प्रतिवेदन नबुझाउने वा कोषको दुरुपयोग गर्ने समितिका पदाधिकारीहरुलाई अख्तियार दुरुपयोग र भ्रस्टाचार गरेको मानेर कारवाही हुने व्यवस्था छ ।

सामुदायिक वन समुहहरुले वन व्यवस्थापनकै कार्यलाई प्रमुख प्राथमिकता दिएर कार्यहरु गर्नु पर्दछ । वन व्यवस्थापनका कार्यहरु अन्तर्गत वन संरक्षण, वन विकास, वन सम्वर्धन र वन सदुपयोगका विभिन्न कार्यहरु गर्नु पर्दछ । त्यसैगरी वन व्यवस्थापन अन्तर्गत नै रहेर आयमुलक र भू-संरक्षणका कार्यहरु समेत गर्नु पर्दछ । सामुदायिक वनमा गर्न सकिने कार्यहरु सामुदायिक वन कार्यक्रमको मार्गदर्शन २०७१ को अनुसूची ७ र वन नियमावलीको परिच्छेद ४ मा स्पष्ट उल्लेख गरिएको छ । सामुदायिक वन उपभोक्ता समुहको सक्षमता वृद्धि गर्ने

| **क्षेत्र** | **सा.व.उ.समुह संख्याा** | **सा.व.ले ओगटेको क्षेत्रफल** | **सामुदायिक वनका उगभोक्ता परिवार संख्या** |
|---|---|---|---|
| **हिमाल** | २८७५ | २७०३७० हे. | २९४५३२ |
| **पहाड** | १३६०६ | ११६६५४५ हे. | १४९०८९८ |
| **तराई** | २४७९ | ३६१८१९ हे. | ६०७३२५ |
| **नेपाल** | १८९६० | १७९८७३३ हे. | २३९२७५५ |

किसिमका संस्थागत विकासका कार्यहरुमा समेत वनको आम्दानी खर्च गर्न सकिन्छ । वन व्यवस्थापन र सस्थागत विकासका कामहरुमा खर्च गरेर बाँकि रहेको रकम सामुदायिक विकासमा खर्च गर्न सकिन्छ । सामुदायिक विकास अन्तर्गत विपन्नहरुको आयआर्जन क्षमताको वृद्धिको लागि तालिमहरु संचालन गर्ने, वन माथिको निर्भरता घटाउनको लागि ब्रिकेट उत्पादन, तरकारी खेती, घाँस विकास, मौरी पालन, गैह्रकाष्ठ वन पैदावारको उपयोग गरि लघु उद्यम संचालन गर्न स्थानीय वासिन्दा र समुहका सदस्यहरुलाई सहयोग गर्ने खालका कार्यक्रमहरु सामुदायिक वन समुहले गर्नु पर्दछ । त्यसैगरी बाटोघाटो र पुलपुलेसा निर्माण, सार्वजनिक स्थलको सुधार, खानेपानी र सिचाईमा समेत सामुदायिक वनको आम्दानी प्रयोग गर्न सकिन्छ । तर जे जस्ता कार्यक्रमहरु संचालन गरेपनि सबैभन्दा पहिले वन संरक्षणंकै कार्यक्रमहरुलाई प्राथमिकता दिनुपर्ने नीतिगत व्यवस्था गरिएको छ ।

वन संरक्षण, जीविकोपार्जन र सामुदायिक विकास तथा सशक्तिकरण जस्ता क्षेत्रहरु लगानीको हिसाबले सामुदायिक वनका प्राथमिकताका क्षेत्रहरु भएपनि धेरै सामुदायिक वनहरुले यो प्राथमिकतालाई वेवास्ता गर्दै गएको देखिन्छ । जंगलका रुख काटेर धेरै भन्दा धेरै आम्दानी गर्न चाहने तर त्यो आम्दानीलाई वन संरक्षण र स्थानीय बासिन्दाहरुको जीविकोपार्जन तथा सशाक्तिकरणमा खर्च गर्नुभन्दा पनि समुहका पदाधिकारीहरुको हित र प्रचारमुखी कार्यक्रममा खर्च गर्ने प्रवृति बढिरहेको छ । अधिकांश सामुदायिक वन समुहले हरेक वर्ष अवलोकन भ्रमण लैजाने गर्दछन र त्यो भ्रमण टोलीमा सधैभरी समुहका पदाधिकारी, उनीहरुका आफन्त र राजनैतिक दलका स्थानीय नेता मात्र पर्दछन । सिक्किम, दार्जिलिंग, पोखरा, नैनीताल जस्ता पर्यटकीय स्थलको भ्रमणमा गएर उनीहरुले सामुदायिक वनको उन्नतिको कुरा सिक्नु भन्दा मनोरंजन गर्ने बाहेक अरु उद्धेश्य नै राखेका हुदैन ।.

सामुदायिक वनमा तारवार नहुदा छाडा चौपायाहरु वनमा पसेर वन मास्ने र वन्यजन्तुहरु वनबाट निस्केर किसानहरुको बालीनाली नष्ट गरेर दुख दिइरहेका हुन्छन । वनको आम्दानीले वन संरक्षण गर्नु पहिलो कर्तब्य हो तर सामुदायिक वनका पदाधिकारीहरुको ध्यान वनमा तारवार गर्नु भन्दापनि वन प्रवेश गर्ने ठाँउमा स्वागतद्वार राख्ने, वनमा पिकनिक स्थल र मनोरंजन स्थल बनाउने, सभाहल र शालिक बनाउने जस्ता काम गर्नुलाई सफलता ठानिरहेको समेत देखिन्छ । वनमा अग्नि नियन्त्रण रेखा बनाउने काममा खर्च नगर्ने तर वन हुदै वस्ती आउने बाटो पक्कि बनाउन आर्थिक सहयोग गर्ने, किसानलाई घाँस विकास र पशुपालनमा सहयोग नगर्ने तर गोबर ग्यास प्लान्ट बनाउन आर्थिक सहयोग गरेर वन संरक्षण गर्छु भन्ने जस्ता कार्यले वन संरक्षण र जीविकोपार्जनमा कस्तो सहयोग पुग्ला ? वन्यजन्तु जोगाउन भनेर सामुदायिक वन समुहले गोष्ठि, प्रवचन, हाजिरीजवाफ जस्ता कार्यक्रमहरुमा खर्च गरिरहेका हुन्छन तर सामुदायिक वनका वन्यजन्तुको कारणले किसानहरुले ठूलो नोक्सानी भोगिरहदा उनीहरुलाई एक रुपैया क्षतिपूर्ति दिन समेत सक्दैदन । भ्रमण, चियापान, वनदेवि पुजा, शुभकामना , छलफल र स्वागतमा ठुलै रकम खर्च गर्न पछि नपर्ने सामुदायिक वन समुहहरु स्थानियहरुको आर्थिक समृद्धी, जीविकोपार्जन,र सिप विकासका कामहरुमा लगानी गर्न नसक्नुलाई सामुदायिक वनको ठुलो कमजोरी भन्ने पर्ने हुन्छ । सामुदायिक वन समुहहरुको कारणले नेपालमा वन संरक्षण र हरियाली वृद्धिमा ठुलो टेवा पुगेको कुरामा शंका छैन तर सामुदायिक वनवाट वन र समुदायले जुन लाभ लिनुपर्ने हो त्यो लिन नसकेको कुरा सबै सरोकारवालाहरुले स्वीकार गर्ने पर्छ ।

जसले जे सुकै आदर्शका कुराहरु गरेपनि सामुदायिक वनहरुमा बिपन्न, दलित, महिला, सामान्य वर्गका जनजाती र दलको पछि लाग्न नखोज्ने सामान्य मानिसको अर्थपूर्ण उपस्थिति छदै छैन । सामुदायिक वनमा सिमित टाठाबाठाहरुको मात्र सधै हालीमुहाली हुदै आएको छ जसले गर्दा धेरै सामुदायिक वनको आम्दानीको प्रयोग संरक्षण र जीविकोपार्जनमा भन्दा पनि प्रचार, सुबिधा र रमाइलोमा खर्च भैरहेको छ । सामुदायिक वन कार्यक्रमको उद्धेश्य विपरितका यस्ता कार्यले दिगो वन व्यवस्थापनमा प्रतिकुल असर पार्ने निश्चित छ । सामुदायिक वनलाई दिगो बनाउने हो भने सामुदायिक वनमा सबैको अर्थपूर्ण सहभागिता सुनिस्चित गर्ने, वनको आम्दानीलाई वनको संरक्षण र विकास तथा स्थानीयको सिपविकास र आय आर्जनमा लगानी गर्ने कुरालाई सबै सामुदायिक वन समुहहरुले प्राथमिकता दिनै पर्छ । _बुटवल टुडे,_

# Investment of community forest User Group's Income in unproductive sector

Yubaraj Kandel

*Abstract*

CF presents a unique opportunity for local communities to manage forests and generate income. Section 30(a) of the Forest Act 2049 mandates that income earned by community forest groups must be allocated towards the development, management, and protection of community forests. Specifically, a minimum of twenty-five percent of the income earned by the community forest user group, as outlined in the action plan, should be dedicated to these purposes, with the remaining funds available for other activities. Unfortunately, there is a concerning trend emerging where individuals seek to maximize profits by indiscriminately cutting down trees in community forests. Rather than reinvesting these earnings back into forest protection and the well-being of local residents, funds are often misallocated towards personal interests and promotional events. It is imperative to recognize that the primary responsibility of forest income is to support forest conservation efforts. Regrettably, some community forest officials prioritize superficial achievements such as constructing welcome gates, picnic areas, and entertainment facilities within the forest, rather than focusing on sustainable practices. Additionally, excessive spending on social events, religious ceremonies, and administrative expenses detracts from the potential for economic growth, livelihood improvement, and skills development within the community. In order to truly harness the benefits of community forestry, it is essential for stakeholders to prioritize long-term sustainability and community empowerment over short-term gratification. By redirecting resources towards meaningful investments that support both the environment and local residents, community forests can serve as a catalyst for positive change and economic prosperity.

# सामुदायिक वनको वैकल्पिक उपयोग

## Alternative uses of community forests

युवराज कंडेल

*घाँस दाउरा र हरियालीको लागी मात्र सामुदायिक वन व्यवस्थापन गर्ने अवधराणा अब पुरानो भैसकेको छ । अब सामुदायिक वनलाई "गरिबको धन "को रुपमा व्यवस्थापन गर्नुपर्ने बेला भएको छ । त्यसैले अब वन उपभोक्ता समुहहरुले वनलाई घाँसदाउरा ल्याउने थलोको रुपमा मात्र नहेरी जीविकोपार्जन र आथिर्क विकासको माध्यमको रुपमा पनि हेर्नु पर्छ. । समुहहरुले जंगलबाट घाँसदाउरा बेचेर आम्दानी गर्ने भन्दापनि वनको बैकल्पिक ढंगले उपयोग गरेर वन्यश्रोत माथिको निर्भरता घटाउने कोशिस गर्नुपर्छ । स्थानिय सरकारहरुले पनि सामुदायिक वन समूहहरुसंग समन्वय गरि वनलाई समृद्धिको माध्यम बनाउनु पर्छ । अबपनि वनमा जीविकोपार्जन र आर्थिक सम्वृद्धिको बाटो खोजिएन भने सामुदायिक वन कार्यक्रम छिट्टै नै असफल हुनेछ र " हरियो को वन नेपालको धन " भन्ने भनाइ लोकोक्ति मात्र रहनेछ ।*

नेपालमा वातावरण संरक्षणमा सफलताको कुरा गर्दा सामुदायिक वनहरुलाई सधै अघि सार्ने गरिन्छ । चालिसको दशकमा १.३ प्रतिशतको दरले वन विनाश भैरहेको थियो जुन दरमा वन विनाश कायम रहेको भए अहिले वन भएका ठाउँमा नांगो डाँडा र वस्तीहरु मात्र हुन्थे ।.एक दशक अघि ३९ प्रतिशत वन रहेकोमा अहिले नेपालको ४४ प्रतिशत भूभाग वनले ढाकेको छ । नेपालमा वनको क्षेत्रफल र घनत्व बढ्नुमा सामुदायिक वनहरुको देन रहेको कुरामा दुईमत छैन् । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार २०७६सालको अन्त्यसम्ममा नेपालको २९ लाख २७ हजार ३२९ परिवारहरु २२ हजार ४१५ सामुदायिक वन समुहमा आवद्ध भएर २२ लाख ७२ हजार ४५६ हेक्टर वनजंगल को उपयोग र संरक्षणमा सक्रिय छन् ।

नेपालका सामुदायिक वन समुहहरु वन व्यवस्थापन गरेर आफ्ना उपभोक्ताहरुलाई सहज ढंगले वन पैदावार उपलब्ध गराउने उद्धेश्यमा केन्द्रीत भएको पाईन्छ । सबैजसो समुहले दाउरा र घाँस वितरणलाई प्राथमिकता दिदै आएका छन् । तराई क्षेत्रका केहि ठुला वन समुहहरुले वनका घाँस दाउरा बिक्री वितरण गरेर आर्थिक उपार्जन गरेर त्यो आम्दानीलाई सामुदायिक बिकासका गतिविधिहरुमा खर्च गरेको समेत देखिन्छ । सामुदायिक वन समुहहरुले वन संरक्षणमा उदाहरणीय काम गरेको भएपनि वनलाई समुदायको समुन्नतिको श्रोत बनाउन सकिन्छ भन्ने कुरामा खासै ध्यान दिएको देखिदैन । सामुदायिक वन उपभोक्ता समुहहरु वन पैदावारको उपभोग र बिक्रीवितरणमा मात्र केन्द्रीत भएकोले वनको बहु उपयोगका सम्भावनाहरु ओंझेलमा परेका छन् ।

सामुदायिक वन कार्यक्रमको उद्‌गमथलो मानिने लुम्बिनी अन्चलमा सामुदायिक वनको वहु-उपयोग र बैकल्पिक श्रोतको रुपमा वनको

प्रयोगका अभ्यासहरु भएका छन् । वि.सं. २०५५ तिर रुपन्देहीको करहिया सामुदायिक वनले वनको खाली जग्गामा बेसार केरा खेति सुरु गरेको थियो । यसबाट प्रभावित भएर अहिले नवलपरासी, पाल्पा र गुल्मीका दर्जन बढी वनले बेसार खेति गरिरहेका छन् । रुपन्देहीकै कालिका सामुदायिक वनले वनमा खेर गैरहेको झारपातबाट ब्रिकेट बनाउने काम गरिरहेको छ । ब्रिकेट बनाएर बेच्न थालेपछि दाउराको लागि हुने वन फँडानी कम भएको मात्र छैन स्थानीय विपन्न महिलाहरुले आयआर्जन गर्ने अवसर पनि पाएका छन् । यो वन समुहले स्थानीय टोल समुहहरुलाई खोल्साखोल्सी र खोलाको बगरमा अम्रिसो हुर्काउन लगाएर कुचो बनाउने र बिक्री वितरण गरेर आर्थीक रुपमा लाभ लिन सघाएको छ । पाल्पा जिल्लाका सय भन्दा बढी वन समुहहरुले खेर गैरहेको भीरपाखामा अम्रिसो र दालचिनी लगाएर वनलाई आयआर्जनको माध्यम बनाएरहेका छन्. ।

सामुदायिक वन भित्र घाँस , जडिबुटी, बेसार जस्ता गैर-काष्ठ वनस्पतिहरु हुर्काएर आम्दानी गर्ने समुहहरु धेरै भएपनि वन क्षेत्रलाई फरक ढंगले आयआर्जनको माध्यम बनाउने समुहहरु भने धेरै कम छन्. त्यस्ता उदाहरणीय वन समुहहरु मध्येमा पर्छ रुपन्देहीको शंकरनगर सामुदायिक वन । वनको बेकामे चौरलाई समुहले शंकरनगर वन बिहार तथा अनुसन्धान केन्द्र ( वन बाटिका ) को रुपमा विकास गरेको छ । क्षेत्रीय चिडियाखाना,मनोरम पिकनिकस्थल, ध्यान केन्द्र, मनोरंजन पार्क, नर्सरी जस्ता संरचनाहरु भएको वन बाटिका अहिले लुम्बिनी अन्चल कै पर्यटकीय ठाउँ बनेको छ । एक दशक अघिसम्म स्याल कराउने झाडी भएको ठाउँमा वन वाटिका कै कारणले एक दर्जन भन्दा बढी स्तरीय रेस्टुरेन्ट र अन्य पसलहरु चलेका छन् । कुनै समयमा शंकर नगर कै दुर्गम मानिने उत्तरी क्षेत्रमा वन बाटिकाको प्रभावले गर्दा आर्थिक गतिबिधि बढेको छ र रोजाइको केन्द्र पनि बनेको छ । वन बाटिकाको अनुसरण गर्दै रुपन्देही कै गजेडी को दानापुर, चिल्हियाको बाउन्नकोटि , आनन्दवनको तिलोत्तमा पार्क, नवलपरासी जिल्लाको नवलपुर क्षेत्रका मध्यवर्ती , पश्चिम नवलपरासीको पारीजात सामुदाथिक वन र कपिलवस्तुको सिद्धार्थ वन वाटिकाले वन पर्यटनको अभ्यास सुरु गरिसकेका छन् र सामुदायिक वनमा रहेका ति ठाउँहरु आन्तरिक पर्यटकहरु रोजाइमा परिरहेका छन् ।

धेरै मानिसहरुले घाँस दाउरा ल्याउने बाहेक अरु कुनै रुपमा सामुदायिक वनको उपयोग गरेको देखिदैन । घाँस र दाउरा बाहेक वनलाई अन्य धेरै काममा उपयोग गर्न सकिने भएपनि त्यसतर्फ सामुदायिक वन समुहको ध्यान जान सकेको देखिदैन । सामुदायिक वनलाई घाँस दाउरामा मात्र सिमित गरिएकोले ठुलो समूह वनको लाभ लिनबाट बन्चित रहेको छ । सामुदायिक वनमा जीविकोपार्जन र सामुदायिक विकासका असंख्य विकल्पहरु रहेका छन् । वन उपभोक्ता समुहहरुले सामुदायिक वनलाई दाउरा र घाँस प्राप्त गर्ने र दाउरा घाँस बिक्री गरेर आम्दानी गर्ने गरेकोले विकल्पहरु ओझेलमा परेका छन् । वर्तमान समयमा दाउरा र घाँस मात्र समुदायको आवस्यकता रहेन , अहिले समुदायको आवस्यकता जीविकोपार्जन र दिगो आर्थिक विकास हो, यी आवस्यकता पुरा गर्ने एउटा माध्यम सामुदायिक वनको बैकल्पिक उपयोग नै हो ।

दशौं योजना र त्यसपछिका योजनाले वनस्रोतको संरक्षण, विकास र सदुपयोगबाट गरिबी न्यूनिकरणमा टेवा पुऱ्याउन सकिने कुरामा जोड दिएका छन् । २०६१ सालमा सम्पन्न चौथो सामुदायिक वन राष्ट्रिय गोष्ठीले समेत सामुदायिक वन व्यवस्थापनको माध्यमबाट गरिबी न्यूनीकरण गर्ने राष्ट्रिय र सहस्राब्दी विकास लक्ष्यमा टेवा पुऱ्याउन सकिने कुरा औंल्याएको छ । सामुदायिक वन विकासको मार्गदर्शन २०६५ ले सामुदायिक वन समुहले आदिवासी, जनजाति, महिला तथा विपन्न वर्गको आर्थिक सशक्तीकरणका लागि जीविकोपार्जन कार्यक्रम संचालन गरी उनीहरूको सामाजिक एव ं आर्थिक अबस्थामा

सुधार ल्याउने कार्य गर्नु पर्ने कुरा उल्लेख गरेको छ । सामुदायिक वन विकासको मार्गदर्शन ( संसोधित)२०७१ ले सामुदायिक वनबाट दाउरा, घांस, सोत्तर, काठ जस्ता उपभोक्ताका दैनिक आधारभूत आवश्यकता पुरा गर्नुको साथै वनमा आधारित उद्यम संचालन गरेर समूहमा रोजगारी तथा आर्थिक उपार्जन को अवसर सिर्जना वनमा आधारित उद्यम विकास कार्यक्रम संचालन गर्नुपर्ने कुरामा जोड दिइको पाईन्छ ।

प्राय जसो वनको छेउछाउ गरिव र विपन्न परिवारको वसोवास हुने गर्छ । यस्ता परिवारले गुजारा चलाउनको लागी वन्यश्रोतमा नै भर परिरहेका हुन्छन । परम्परागत ढंगले समुदायिक वनलाई व्यवस्थापन गर्दा विपन्न वर्गलाई गुजारा चलाउन समेत मुकिल हुन्छ जसले गर्दा वन संरक्षणमा उनीहरुको सहयोग प्राप्त हुन् सक्दैन । विपन्न वर्गलाई जीविकोपार्जनमा सघाउन र उनीहरुको आर्थिक अवस्था उकास्नको लागी उनीहरुलाई सामुदायिक वन भित्र वैकल्पिक आयआर्जन को अवसर सिर्जना गर्नु आवस्यक हुन्छ । विपन्न वर्गलाई समुहगत रुपमा वन ऐन , नियमावली र निर्देशिकामा व्यवस्था भए अनुसार वन भित्र जडिबुटी खेति, नगदे बाली र अन्य गैर-काष्ठ वनस्पतिहरु लगाउन दिने, वनबाट कच्चा पदार्थ संकलन गरेर उद्यम संचालन गर्न सघाउने र उनीहरुका उत्पादनलाई बजारीकरण गरिदिएर सहयोग गर्ने गरेमा उत्पादकत्व बढाउन सकिन्छ नै वनको दिगो संरक्षण, जलाधार संरक्षण र भू-संरक्षण जस्ता उपलब्धिहरु सहजै हासिल गर्न सकिन्छ ।

अहिले विस्वभरी पर्या-पर्यटन सफल भैरहेको छ, यस्तो अवस्थामा सामुदायिक वनलाई पर्यटकीय गन्तब्य बनाउन सकिन्छ । सामुदायिक वन विकासको मार्गदर्शन ( संसोधित)२०७१ तथा वन ऐन २०७६ ले सामुदायिक वनको दिगो व्यवस्थापनबाट उपलब्ध हने जलश्रोत, जलाधार एवं जैविक विविधता संरक्षण,भू-दृश्य-सौन्दर्य तथा कार्वन-संचिति जस्ता वातावरणीय सेवाहरूको सम्भावनाको खोजी गरी तिनको उपयोग गरेर आयआर्जनको अवधारणालाई अगाडि बढाउन सकिने ब्यवस्था गरेको छ । ऐनको दफा ३४ ले उपभोक्ता समूहले तोकिए बमोजिमको प्रक्रिया अवलम्बन गरी स्वीकृत कार्ययोजनाले निर्दिष्ट गरेका वन उद्यम तथा पर्यापर्यटन कार्यक्रम आफैंले वा स्थानीय तह वा संघ संस्था वा निजी क्षेत्र वा सहकारीसँगको साझेदारीमा सञ्चालन गर्न सक्ने ब्यवस्था गरेकोछ । यहि ब्यवस्था अन्तर्गत रहेर सामुदायिक वनमा रहेका वन्यजन्तु र भू-दृश्य को संरक्षण, संस्कृतिक ऐतिहासिक स्थल को संरक्षण र प्रचारप्रसार, वन भित्र रहेका नदि, ताल र पोखरीको संरक्षण, सरसफाई र स्तरीकरण गर्ने अनि स्थानीय क्षेत्रमा पर्यटकीय पूर्वाधार र पर्यटनमैत्री संस्कारको विकास गर्न सकेमा वन घनत्व र वनको अवस्थामा कुनै नकारात्मक असर नपारीकन आर्थिक लाभ लिन सकिन्छ । यस बाहेक कार्वन ब्यापार प्रयालीमा सहभागी भएर समेत सामूदायिक वनहरुले आम्दानी गर्न सक्ने आधारहरु तयार भैसकेकोले यसतर्फ पनि ध्यान दिनुपर्ने देखिन्छ ।

घाँस दाउरा र हरियालीको लागी मात्र सामुदायिक वन व्यवस्थापन गर्ने अवधराणा अब पुरानो भैसकेको छ । अब सामुदायिक वनलाई "गरिबको धन "को रुपमा व्यवस्थापन गर्नुपर्ने बेला भएको छ । त्यसैले अब वन उपभोक्ता समुहहरुले वनलाई घाँसदाउरा ल्याउने थलोको रुपमा मात्र नहेरी जीविकोपार्जन र आथिर्क विकासको माध्यमको रुपमा पनि हेर्नु पर्छ. ।
समुहहरुले जंगलबाट घाँसदाउरा बेचेर आम्दानी गर्ने भन्दापनि वनको बैकल्पिक ढंगले उपयोग गरेर वन्यश्रोत माथिको निर्भरता घटाउने कोशिस गर्नुपर्छ । स्थानिय सरकारहरुले पनि सामुदायिक वन समूहहरुसंग समन्वय गरि वनलाई समृद्धिको माध्यम बनाउनु पर्छ । अबपनि वनमा जीविकोपार्जन र आर्थिक सम्वृद्धिको बाटो खोजिएन भने सामुदायिक वन कार्यक्रम छिट्टै नै असफल हुनेछ र " हरियो को वन नेपालको धन " भन्ने भनाइ लोकोक्ति मात्र रहनेछ । यसतर्फ वन उपभोक्ता समुह,स्थानिय सरकार, वन मन्त्रालय र अन्य सरोकारवाला निकायहरुले बेलैमा ध्यान दिनु जरुरि छ । *बुटवल टुडे, २०७८ चैत्त १८*

# Alternative uses of community forests

Yubaraj kandel

Community forest groups have made significant strides in forest conservation efforts. However, their focus solely on the consumption and sale of forest products has limited the potential for multiple uses of the forest. Currently, community forests are restricted to grass and firewood, leaving larger groups unable to fully benefit from the resources available. To enhance productivity and achieve greater success, it is essential to empower underprivileged individuals to cultivate herbs, cash crops, and non-timber plants within the forest. By assisting them in collecting raw materials, establishing enterprises, and marketing their products, we can unlock the full potential of the forest. In light of the global success of tourism, community forests have the potential to become popular tourist destinations. By conserving wildlife and landscapes, preserving cultural and historical sites, and enhancing tourism infrastructure, we can generate financial benefits without causing harm to the environment. Additionally, it is crucial to engage in the Karvan Business Process to further support community forests. The outdated notion of managing community forests solely for basic resources like grass and firewood must be replaced with a more holistic approach. It is time to view community forests as a valuable asset for the less fortunate, offering opportunities for livelihood and economic development. Forest user groups should shift their focus from simply selling firewood to exploring alternative uses of the forest resources. Collaboration between local governments and community forest groups is essential to ensure the prosperity of these valuable natural resources. Failure to find sustainable ways to utilize the forest for livelihood and economic growth will result in the eventual collapse of the community forestry program. It is imperative that we adapt our approach and recognize the immense potential of community forests as a source of prosperity for all. *Butwal Today, 31 March 2021*

# सामुदायिक वनमा लैङ्गिक समावेशिता
# Gender Inclusion in Community Forest

युवराज कंडेल

*सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शनले समूहको नेतृत्व (उपभोक्ता समिति) लैंगिक दृष्टिले सन्तुलित र सामाजिक संरचनाको दृष्टिले समावेशी बनाउनुपर्ने स्पष्ट व्यवस्था गरेको छ । सहभागिता केवल उपस्थितिमा मात्र होइन, निर्णय प्रक्रियामा पनि हुनुपर्छ यसको लागि महिला, दलित, जनजाति र विपन्न वर्गका उपभोक्ताको कार्यकारी समिति (उपभोक्ता समिति) मा उचित प्रतिनिधित्व हुनुपर्छ र उनीहरूको आवाज र आवश्यकता सम्बोधन हुनुपर्छ । नीतिगत रुपमा सामुदायिक वन समुहमा लैंगिक समावेशिता र सहभागिताको कुरा भएपनि व्यवहार र अभ्यासमा उल्लिखित व्यवस्था पुर्णरुपमा र प्रभावकारी ढंगले पालना गरिएको छैन।*

नेपालको संविधानले समानुपातिक, सहभागितामूलक र समावेशी सिद्धान्तको अबलम्बनलाई समृद्ध र न्यायपूर्ण समाज निर्माणको आधार मानेको छ । संविधानको धारा ३८ मा उल्लेखित महिलाको हकले महिलाहरुलाई समानुपातिक सहभागिता र सकारात्मक विभेदको सुबिधा समेत प्रदान गरेको छ । सबै क्षेत्रमा महिलाहरुको सहभागिता र भूमिका सुनिस्चित गर्नको लागि थुप्रै नीतिगत र कानूनी व्यवस्थाहरु गरिएका छन् । नेपालमा छैठौं योजना ( २०३७-२०४३ ) मा विकासमा महिलाको नामबाट सुरुवात गरिएको लैंगिक समानता र महिला सशक्तिकरणका प्रयासहरु त्यसयताका सबै आवधिक योजनामा प्राथमिकताका साथ समेटिदै आएका छन् । सरकारी तथ्यांकहरुलाई आधार मान्ने हो भने नेपालको लैंगिक विकास सूचकांक ( Gender Development index) ०.५३४ र लैंगिक सशक्तिकरण मापक (Gender Empowerment index) ०.५६८ रहेको छ । राजनैतिक र सामाजिक क्षेत्रमा महिला सहभागिता क्रमश वृद्धि हुदै गएको छ । हाल स्थानीय तहमा ४१ प्रतिशत, प्रदेश सभामा ३४ प्रतिशत र संघीय ब्यवास्थापिकामा ३३.५ प्रतिशत महिला निर्वाचित भएका छन् । धेरै शिक्षितहरुको आकर्षण रहेको निजामति सेवामा २३ प्रतिशत महिलाहरु कार्यरत रहेका छन् ।

संख्यात्मक सहभागिताको हिसाबले सामुदायिक वनमा महिलाहरुको उपस्थिति राम्रो देखिन्छ । सामुदायिक वनका सदस्य संख्याको आधारमा ५३ प्रतिशत महिला सदस्यहरु रहेका छन् । गणितीय रुपमा सामुदायिक वनमा महिलाहरुको संख्या धेरै देखिएको र सामुदायिक वन महासंघको केन्द्रिय नेतृत्वमा महिला नै पुगेको भएपनि लाभको हिसाबले सामुदायिक वनमा महिलाहरुको अवस्था निकै कमजोर भएका गुनासाहरु बढ्दै गएका छन् ।

प्राकृतिक श्रोत व्यवस्थापनमा सबैभन्दा सफल कार्यक्रम सामुदायिक वन हो । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम शक्तिशाली अभियानको रुपमा अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार नेपालमा २२हजार २६६ वटा सामुदायिक वन समुह गठन भै हस्तान्तरण भएका छन । नेपालका सबै जिल्लाहरुमा गरि २९लाख ०८ हजार ७८१ परिवारले सामुदायिक वन समुहमा आवद्ध भएर २२ लाख ३७ हजार ६७१ हेक्टर वन व्यवस्थापन र उपयोग गरिरहेका छन् । सामुदायिक वन कार्यक्रमले नेपालको वन संरक्षण , वन्यजन्तु विस्तार , भूक्षय नियन्त्रण, वातावरण संरक्षण तथा घाँस दाउराको सहज उपलब्धता जस्ता

कार्यमा अतुलनीय सेवा पुऱ्याएको मात्र छैन, जीविकोपार्जन, सामाजिक विकास र सचेतना वृद्धिमा समेत महत्वपूर्ण सहयोग पुऱ्याईरहेका छन् । तथ्यांकीय रुपमा सामुदायिक वनमा सबै वर्ग र लैंगिक समुहको प्रतिनिधित्व भएकोले त्यहा प्रजातान्त्रिक अभ्यास भैरहेको जस्तो देखिएपनि व्यवहारिक रुपमा यस्ता वनहरुमा लैंगिक समावेशिता नभएको सहजै महसुस गर्न सकिन्छ ।

महिला, विपन्न, दलित र आदिवासीहरु वनसँग बढी निकट रहेका हुन्छन् । वन माथिको निर्भरता र आवस्यकताले गर्दा उनीहरु वनप्रति बढी जिम्मेवार रहेका हुन्छन । यी लैंगिक, वर्गीय र जातीय समुहको सहभागिता विना सामुदायिक वनको व्यवस्थापन सम्भव नभएको र उनीहरुको सहभागिता विनाको सामुदायिक वन समुहहरुले सामाजिक जीवनस्तरमा सघाउन नसक्ने भएकोले सामुदायिक वन समुहको गठन, व्यवस्थापन र उपयोगमा यी समुहहरुको सहभागितालाई नीतिगत रुपमा स्वीकार गरिएको छ । आमसहभागिता, आमसहमति,न्यायोचितता, लैंगिक समानता / समता, जीविकोपार्जन,श्रोत माथिको पहुँच तथा अधिकार , श्रोतको एकीकृत व्यवस्थापन, पारदर्शिता र दिगो वन व्यवस्थापन सामुदायिक वनका विशेषताहरु हुन् । वनक्षेत्रको लैङ्गिक तथा सामाजिक समावेशीकरण रणनीति २०६४ ले सामुदायिक वनलगायत अन्य वनक्षेत्रमा महिला तथा अन्य सीमान्तकृत वर्गको निर्णय प्रक्रिया तथा फाइदामा समतामूलक पहुँच सुनिश्चित गर्ने रणनीति लिएको पाइन्छ । त्यसैगरी सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन ( तेश्रो संसोधन २०७१)ले  सामुदायिक वनको माध्यमबाट गरिबी न्यूनीकरणमा टेवा पऱ्याउन, स्रोतको न्यायोचित वितरण गर्न उपभोक्ता समितिको गठन देखि निर्णय प्रक्रियामा अवसरबाट वञ्चित विपन्न, महिला, दलित, मधेशी, आदिबासी, जनजाति, एवं पछाडि पारिएका वर्गहरू र टाढाका उपभोक्ताहरुको सहाभागिता सुनिस्चित गर्नुपर्ने कुरामा जोड दिएको छ ।

सामुदायिक वनमाा समावेशीता सुनिश्चित गर्नको लागि उपभोक्ता समिति गठन गर्दा विपन्न, महिला, दलित, आदिबासी, जनजाति आदिको समानुपातिक प्रतिनिधित्व गराउनुपर्ने व्यवस्था छ । समितिमा विपन्न, दलित, आदिवासी, जनजाति समेतको प्रतिनिधित्व हुने गरी कम्तिमा ५० प्रतिशत महिलाको अनिवार्य व्यवस्था गर्नुपर्ने र बाकि ५० प्रतिशतमा विपन्न, दलित, आदिबासी,जनजाति र जातजातिको समानुपातिक प्रतिनिधित्व हुनुपर्ने तथा अध्यक्ष वा सचिव मध्ये  कम्तिमा एक जना महिला हुनुपर्ने कुरा सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन २०७१मा व्यवस्था गरिएको छ । सामुदायिक वनको प्रतिफलमा महिला सहभागिताको सुनिस्चितता समेत यो निर्देशिकाले गरेको छ । समुहको आम्दानीको कम्तिमा ३५ प्रतिशत रकम सहभागितामूलक सम्पन्नता स्तरिकरणलाई आधार मानि विपन्न वर्गका महिलाका लागि समेत लक्षित कार्यक्रमहरुमा परिचालन गर्नुपर्ने, सामुदायिक वनमा महिलाको लागि उनीहरुकै माग अनुसार विशेष कार्यक्रमहरु संचालन गर्नुपर्ने, महिलाका परम्परागत ज्ञानलाई प्रवर्द्धन गर्ने खालका वन उद्यम स्थापना र संचालनलाइ प्राथमिकता दिनुपर्ने कुरा निर्देशनमा स्पष्ट उल्लेख छ । यसैगरी उपभोक्ता समुहको खाता संचालनमा अनिवार्य रुपमा एकजना महिला हुनुपर्ने, अनुगमन समितिमा महिला प्रतिनिधित्व हुनुपर्ने तथा विधान र कार्ययोजना समिक्षा तथा पुनरावलोकन र विधान तथा कार्ययोजना परिमार्जनमा महिला सहभागिता हुनुपर्ने अनिवार्य व्यवस्था समेत निर्देशिकाले गरेको छ ।

वन नीति २०७१ ले समुदायद्वारा व्यवस्थित वनको माध्यमबाट वनबाट टाढा रहेका, विपन्न, आदिवासी, जनजाति, दलित, महिला र सिमान्तकृत उपभोक्ताको पहुँच बढाउने ( नीति ४ ) र वन क्षेत्रमा सुशासन, समावेशीकरण र सामाजिक न्याय प्रवर्द्धनको लागि व्यवस्थापनलाई थप सक्षम बनाउने ( नीति ७) नीति अंगिकार गरि रणनीतिहरु तर्जुमा गरेको थियो । मन्त्रि परिषद , सामाजिक समितिले २०७५ पुष २२ गते पारित गरेको राष्ट्रिय वन

नीति २०७५ ले सामाजिक सुरक्षा, समावेशीकरण र सुशासनलाई प्रमुख नीति मानेको छ। यस अन्तर्गत वनाश्रोत व्यवस्थापन गर्दा महिलाको अधिकार सुनिस्चित गर्दै लाभमा उनीहरुको पहुँच वृद्धि गरिने, वन क्षेत्रका सस्था, नीति , कार्यक्रम , बजेट तर्जुमा गर्दा लैंगिक तथा सामाजिक समाविशिकरनको सिद्धान्तको आधारमा गरिने, वन क्षेत्रका सबै सस्थाहरुमा निर्णायक जिम्मेवारी सहित ५० प्रतिशत महिलाको सहभागिता हुनेगरी रणनीति, कानून, बजेट, कार्यक्रम र अभ्यासको अवलम्बन गरिने कुराहरु उल्लेख छ । यी सबै नीति र रणनीतिहरु सामुदायिक वनको हकमा समेत अनिवार्य रुपमा लागु हुन्छन् । वनक्षेत्रको रणनीति, २०७२ का ८ वटा रणनीतिक खम्बामध्ये पाँचौं खम्बामा समुदायको स्रोतको उपभोगको संरक्षण, सातौं खम्बामा लैंगिक समता, सामाजिक समावेशीकरण र आर्थिक विकासको विषय उल्लेख गरिएको छ । वि.स.२०७१ असार २ देखि ४ सम्म ललितपुरमा भएको छैटौँ राष्ट्रिय साम'दायिक वन गोष्ठीको घोषणापत्र र भावी कायृदिशामा समेत सामुदायिक वनको क्षेत्रमा लैङ्गिक तथा सामाजिक समावेशीकरण गर्दै अर्थपुर्ण सहभागिता एवम् वन व्यवस्थापनबाट प्राप्त लाभको न्यायोचित बाँडफाँड सुनिश्चित गर्न सामुदायिक वनको मार्गदर्शनको प्रभावकारी कार्यान्वयन तथा लक्षित वर्गको क्षमता अभिवृद्धितर्फ विशेष कार्यक्रमहरू कार्यान्वयन गर्ने उल्लेख गरिएको छ । हालसालै कार्यान्वयनमा आएको वन ऐन २०७६ को दफा २२ ले उपभोक्ता समुहले कार्ययोजना अनुसार आर्जन गरेको वार्षिक आयबाट कम्तिमा २५ प्रतिशत रकम वनको विकास, संरक्षण र व्यवस्थापन कार्यमा खर्च गरि बाँकि रहेको रकमको कम्तिमा ५० प्रतिशत रकम सम्बन्धित स्थानीय तहसँग समन्वय गरि गरिवी न्यूनीकरण, महिला सशक्तिकरण र उद्यम विकास कार्यमा खर्च गर्नुपर्ने व्यवस्था गरेको छ । भर्खर मात्र संघीय सरकारले स्वीकृत गरेको पन्ध्रौ योजनाले पनि महिला समेतको सहभागितामा वन व्यवस्थापन गर्ने,सामुदायिक वन व्यवस्थापन पद्धतिमा लैंगिक तथा सामाजिक समावेशीकरण रणनीतिलाई समय सापेक्ष परिमार्जन गरि लागु गर्ने कार्यनीतिहरु तय गरेको छ।

नीतिगत बाध्यताले गर्दा सामुदायिक वन समुहका पदाधिकारीहरुमा महिलाहरुको संख्या धेरै देखिएपनि व्यवहारिक रुपमा महिलाहरुलाई भूमिका विहिन बनाउने गरिएको छ । प्रतिनिधिमूलक ढंगले महिला छनौट गर्नुपर्नेमा नेता र केहि टाठाबाठाहरुका श्रीमती, छोरी, बुहारीहरूबाहेक अन्य व्यक्ति समितिमा पुग्नै सक्दैनन् । आफुमा आश्रित वा आफुलाई मान्नुपर्ने महिलाहरुलाई समुहको पदाधिकारी बनाउने र समुहको निर्णय र नीति निर्माणमा आफु हावी हुने, महिला पदाधिकारीलाई भूमिका विहिन बनाउने प्रवृति अधिकांश सामुदायिक वनमा देखिएको छ । करिब २२ हजार वटा सामुदायिक वन समुहहरु मध्ये एक हजार वटा वन मात्र महिलाहरुले मात्र व्यवस्थापन गर्न सक्नु र सम्पूर्ण सामुदायिक वनको समितिमा एक तिहाइ भन्दा कम मात्र महिलाहरु हुनुमा नेपालका वनहरुमा लैंगिक समावेशिता हुन् नसकेको प्रस्टै हुन्छ।

परम्परागत रुपमा महिलाहरु वनमा बढी आश्रित भएको पाइन्छ त्यसैले सामुदायिक वन समुहको नेतृत्व मात्र नभएर निर्णय अधिकार र लाभको बाँडफाडमा लैंगिक समावेशिता हुनु वातावरणिय न्यायको दृष्टिले अत्यावस्यक छ र यसलाई वन विकास कार्यक्रमको मार्गदर्शनले समेत प्राथमिकतामा राखेको छ । सामाजिक चेतनास्तरमा आएको परिवर्तन र राजनैतिक खिचातानीले गर्दा सामुदायिक वन उपभोक्ता समुहमा लैंगिक प्रतिनिधित्व वृद्धि हुदै गएको भएपनि समावेशिताको नाममा वनको संरक्षण र उपभोगमा कहिल्यै भूमिका नभएका दलीय प्रभुत्वशाली व्यक्ति नै पदाधिकारी बनिरहेको देखिन्छ । सामुदायिक वन समुहको गठन देखि पदाधिकारी चयनमा सबै उपभोक्ताहरुसंग छलफल गरि सहमति जुटाउनुपर्नेमा पछिल्लो समयमा महिला उपभोक्ताहरुलाई उपभोक्ताहरुलाई थाहै नदिई केहि टोले नेताहरु मिलेर पदहरुको भागबण्डा गर्ने, समावेशी

बनाउने नाममा वनका विभिन्न समिति र उपसमितिहरुमा घुमाई फिराई आफुहरुले प्रभावमा पार्न सकिने महिला र अन्य समुहका सदस्यहरुलाई मात्र राख्ने वातावरण निर्माण गर्ने काम भैरहेको छ । सामुदायिक वनक प्रभावशाली पदहरुमा जातीय र दलीय प्रभावशाली व्यक्तिहरुमा उनीहरुको आशिर्वाद प्राप्त महिलाहरु मात्र सहभागी हुने भएकोले वनले बनाउने कार्यक्रम र खर्च गर्ने रकममा उनीहरुले नै मोज गर्ने गरिरहेका छन् । वास्तविक रुपमा लैंगिक समावेशीकरण नभएको कारणले गर्दा सामुदायिक वनले गरिवी निवारण र जीविकोपार्जन जस्ता क्षेत्रमा अपेक्षित सफलता पाउन सकेको छैन नै, वन्य श्रोतमा महिलाको पहुँच समेत कमजोर बनिरहेको छ ।

सामुदायिक वन कार्यक्रमको मुख्य लक्ष्य वनको उपभोग गरिरहेका स्थानीय नागरिकलाई वनमा अपनत्व जगाई उनीहरु मार्फत वन संरक्षण गराई वातावरण संरक्षण, जीविकोपार्जन र आवस्यकता परिपुर्तिमा सघाउनु हो । यी कार्यहरु गर्नका लागि सामुदायिक वनमा महिला लगायत सबै समुहको न्यायोचित सहभागिता हुनु जरुरि छ । सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शनले समूहको नेतृत्व ( उपभोक्ता समिति) लैंगिक दृष्टिले सन्तुलित र सामाजिक संरचनाको दृष्टिले समावेशी बनाउनुपर्ने स्पष्ट व्यवस्था गरेको छ ।

सहभागिता केवल उपस्थितिमा मात्र होइन, निर्णय प्रक्रियामा पनि हुनुपर्छ यसको लागि महिला, दलित, जनजाति र विपन्न वर्गका उपभोक्ताको कार्यकारी समिति (उपभोक्ता समिति) मा उचित प्रतिनिधित्व हुनुपर्छ र उनीहरूको आवाज र आवश्यकता सम्बोधन हुनुपर्छ । नीतिगत रुपमा सामुदायिक वन समुहमा लैंगिक समावेशिता र सहभागिताको कुरा भएपनि व्यवहार र अभ्यासमा उल्लिखित व्यवस्था पुर्णरुपमा र प्रभावकारी ढंगले पालना गरिएको छैन । समूहमा र वन उपभोक्ता महासंघमा प्रभुत्वशाली पुरुषहरुकै अधिपत्य छ । निर्णय प्रक्रियामा अर्थपूर्ण सहभागिताको अवस्था छैन । समूहको नाममा केहि महिलालाई देखाएर केही सीमित व्यक्तिको हालीमुहाली बढिरहेको अवस्था छ । यस्ता गतिविधिले गर्दा सामुदायिक वन विकासको उद्धेस्य नै ओझेलमा परिरहेको छ । अहिले सम्म वनमा हरियाली बढेको र वन पैदावार बेचेर आम्दानि बढाएकोले सामुदायिक वनहरू सफल भएको मानिएको छ । सामुदायिक वनमा लैगिक समावेशीकरणलाई व्यवहारिक बनाउन सकिएन भने यी सफलता अल्पकालीन मात्र बन्ने निश्चित छ ।

*बुटवल टुडे, ५ चैत्र २०७८*

yrkandel@gmail.com

# Gender Inclusion in Community Forest

Yubaraj Kandel

*Summary*

The Constitution of Nepal upholds the values of proportional, participatory, and inclusive principles as the foundation for a prosperous and just society. Various policy and legal frameworks have been established to ensure the active participation and empowerment of women across all sectors. While the number of women involved in community forestry is significant and women have even attained leadership positions within the Community Forest Federation, there is a growing concern regarding the inadequate benefits and support provided to women in this sector. Despite policy mandates, the practical implementation of gender inclusion in community forestry remains a challenge. While women may hold official positions within community forest groups on paper, they often lack meaningful roles and decision-making power in practice. The process of forming community forest groups and selecting officials requires genuine consultation and consensus-building with all stakeholders, yet this crucial aspect is often overlooked. As a result, the potential of community forestry to effectively address issues such as poverty alleviation and sustainable livelihoods is hindered, and women's access to forest resources continues to diminish. The guidelines of the community forest development program emphasize the importance of ensuring gender balance and inclusivity within the leadership of community forest groups (consumer committees) to reflect the diverse social structure of communities. However, in reality, these guidelines are not consistently or effectively implemented. There is a concerning trend of tokenism, where a few select women are included in leadership roles without genuine empowerment or decision-making authority. Such practices undermine the core objectives of community forest development and threaten the long-term success of these initiatives. While community forests have been celebrated for their contributions to environmental conservation and economic growth through the sale of forest products, true success cannot be achieved without meaningful gender inclusion. It is imperative that practical steps are taken to empower women within community forestry, ensuring their active participation and leadership roles. Failure to address these issues will not only undermine the sustainability of community forests but also perpetuate gender disparities within this crucial sector.

# सामुदायिक वनमा पर्यापर्यटनः अभ्यास र सम्भावना

## Tourism in Community Forests: Practices and Prospects

युवराज कंडेल

*समुदायको सहभागिता र अपनत्व विना वनमा पर्यापर्यटन व्यवसाय संचालन गर्न सकिदैंन । त्यसैले स्थानीय वासिन्दाहरुसंग सहकार्य गरि स्थानीय उत्पादनको खपत गर्ने र वन बाहिरपनि पर्यटन व्यवसायको लाभ पुऱ्याउने कुरामा सामुदायिक वन समुहहरुले ध्यान दिनै पर्छ । सामुदायिक वनमा संचालन हुने पर्यापर्यटनबाट स्थानीय सरकारले समेत लाभ लिने भएकोले समुहका हरेक पर्यटकीय गतिविधिहरुलाई स्थानीय सरकारका पर्यटन योजनासंग जोड्नुपर्छ । सामुदायिक वनलाई पिकनिक खाने र फर्कने थलो नबनाई नेचर ट्रेकिंग, वर्ड वाचिंग, जंगल सफारी, हाइकिंग जस्ता कार्यहरु गराई पर्यटकहरुलाई सकेसम्म धेरै समय टिकाउने काम वन समुहहरुले गर्नुपर्छ ।*

विश्व शान्तिको मुहान लुम्बिनी पछिका आन्तरिक र बाह्य पर्यटकका रोजाईका उत्कृष्ट थलो हुन् -शंकर नगर वन बाटिका, बाउन्नकोटी वनबाटिका र  दानापुर ताल । यी तीनवटै पर्यटकीय गन्तव्यहरुमा वर्षेनी ठुलो संख्यामा पर्यटकहरु घुमफिर गर्न , पिकनिक खान पुग्ने गरेका छन् । यी तिनवटै पर्यटकीय गन्तव्यहरुमा एउटा समानता छ- त्यो समानता भनेको यी सबै सामुदायिक वन अन्तर्गत नै पर्छन् । चितवन राष्ट्रिय निकुन्जको मध्यवर्ती क्षेत्रमा रहेका केहि सामुदायिक वनहरुले मात्र निकुन्जको सहयोगमा पर्यटकीय गतिविधिहरु संचालन सुरु गरेको अवस्थामा शंकर नगर सामुदायिक वन समूह अन्तर्गतको आंशिक बुट्यान भएको सानो क्षेत्रलाई तारवार गरि पार्क बनाउन सुरु गरिएको थियो । त्यहि पार्क अहिले विस्तारित र विकसित हुदै पार्क, वनभोज स्थल, मिनी जूको एकीकृत रुपमा शंकर नगर वन बाटिकाको रुपमा प्रख्यात भैरहेको छ । यहा वर्षेनी भौतिक संरचना, वातावरणिय अवस्थमा सुधार, पर्यटकीय पूर्वाधारमा विकास जस्ता कामहरु थपिदै गएका छन् र यो लुम्बिनी पछि सबैभन्दा धेरै पर्यटकहरु भित्राउने पर्यटकीय थलो बनिरहेको छ ।

सुनसरी जिल्लाको धरान उप-महानगरपालिका अन्तर्गत धरान बजार वरपर रहेका छ वटा सामुदायिक वन समूहहरूले वनको संरक्षण, संवर्धन तथा सदुपयोग गर्नुको साथै पार्क निर्माण गर्ने, विभिन्न प्रजातीका वन्यजन्तु संरक्षण गरी मिनी जू समेत स्थापना गरेका छन् । उल्लिखित क्रियाकलापहरूबाट वन समूहहरूले आर्थिक आम्दानी गर्दै आएका छन् । चितवनको बाघमारा, चित्रसेन, कुमरोज सामुदायिक वन पर्यटक आकर्षणको हिसाबले महत्त्वपूर्ण मानिन्छ । यि वनले हरेक दिन पर्यटकहरूको आगमनबाट मुद्रा आर्जन गर्दै आएका छन् । पर्यटकको आगमनबाट हुने आम्दानीले समूहका केही व्यक्तिहरूलाई रोजगारीको अवसर मिलेको छ । इलामको समालबुङ गाविसमा रहेको अन्तुडाँडा सामुदायिक वनले सुर्योदयको दृश्य समेत बेच्दै आएको छ । उनीहरूको सामुदायिक वनबाट सूर्योदयको मनोरम दृश्य देख्न सकिने हुनाले सूर्योदयको दृश्य अवलोकन गरी आनन्द लिन आउने स्वदेशी तथा विदेशी पर्यटकहरूबाट उनीहरूले निश्चित शुल्क लिने गरेका छन् । पछिल्ला दिनहरुमा सामुदायिक वनले पर्या-पर्यटनको क्षेत्रमा हासिल गरेका यस्ता सफलताका कथाहरु धेरै सुन्न थालिएको छ । सामुदायिक वनमा पनि पर्यटन सम्भव छ भन्ने कुराको उदाहरण शंकरनगर वन बाटिकाले प्रस्तुत गरेको थियो भन्दा फरक पर्दैन । शंकर नगर वनबाटिकाले मध्यवर्ती क्षेत्र भन्दा बाहिर र परम्परागत पर्यटकहरु आउने बाटो भन्दा फरक ठाउँमा पनि पर्यटकीय गतिविधिहरु संचालन गर्न र सफलता हासिल गर्न सकिन्छ भन्ने उदाहरण पेश गरीपछि अहिले सामुदायिक

वनमा पनि पर्यटन गतिविधिहरु संचालन गर्ने लहर देशभरी नै चलेको छ । वनमा पानी र टहराको निर्माण गरेर वनभोज खानेलाई सुविधा दिनेदेखि लिएर सामुदायिक वनको केहि भागलाई तारबार गएर पार्क निर्माण, रुख र वनस्पतिको ढाचा र अवस्थामा परिवर्तन गरेर पर्यटकीय स्वरूप निर्माण, वन भित्रका तालतलैया र मुहान संरक्षण गरेर जालविहार तथा भू-दृश्यको संवर्द्धन गरेर पर्यटनलाइ प्रवर्धन गर्ने काममा सामुदायिक वनहरू लागि रहेका छन् । केहि सामुदायिक वन समुहहरुले समुदायसँग मिलेर घरबास ( होमस्ते ) संचालन र पर्यटकहरुको लागि कोशेली उत्पादन समेत गरिरहेका छन् ।

नेपालमा सामुदायिक वनको रुपमा समुदायले वनको व्यवस्थापन गर्न थालेको ३ दशक पुगिसकेको भएपनि लामो समयसम्म यी वनबाट वन पैदावार संकलन , उपयोग र विक्री बाहेक अरु तरिकाबाट समेत आम्दानि हासिल गर्न सकिन्छ भन्ने कुरामा ध्यान नै दीइएन । ऐन कानूनहरुमा व्यवस्था नभएपनि केहि सामुदायिक वन समुहहरुले गैह्र व्यवसायिक उद्धेस्यले ५० को दशकमै वन भित्र पार्क र पिकनिक स्थल निर्माण गर्न थालिसकेका थिए । सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन २०५८ लाई २०६५ सालमा संसोधन गरेपछि *सामुदायिक वनको दिगो व्यवस्थापनबाट उपलब्ध हुने जलाधार एवं जैविक विविधता संरक्षण, भुदृश्य-सौन्दर्य तथा कार्वन-संचिति जस्ता वातावरणीय सेवाहरूको संभावनाको खोजी गरी तिनको उपयोग गरेर आयआर्जनको अवधारणालाई अगाडि बढाउन सकिनेछ* भन्ने कुराहरु थप गरेपछि धेरै सामुदायिक वनहरुका कार्य योजनामा पर्यापर्यटनका कुराहरु समावेश हुन थालेको देखिन्छ । सामुदायिक वन समुहहरुले पर्या-पर्यटनमा उल्लेखनीय उपलब्धि हासिल गर्ने सम्भावना देखेर वन ऐन २०४९ को दोश्रो संसोधन २०७३मा सामुदायिक वन उपभोक्ता समूहले जिल्ला वन कार्यालयमा दर्ता गरी स्वीकृत कार्ययोजनाले निर्दिष्ट गरेका वन उद्यम तथा पर्यापर्यटन कार्यक्रम सञ्चालन गर्न सक्ने (दफा ३० ख) व्यवस्था समावेश गरेको थियो ।

पछिल्लो पटक नेपाल सरकारले आर्थिक वर्ष २०७५/७६ को लागि वन मन्त्रालयको स्वीकृत कार्यक्रममा सामुदायिक वनमा पर्या-पर्यटन कार्यक्रम समावेश गरेको छ । चालु आर्थिक वर्षमा संघीय सरकारले १०० वटा सामुदायिक वनमा पर्या-पर्यटन प्रवर्धन गर्न एक करोड रुपिया , प्रदेश मन्त्रालय अन्तर्गत ७ सय सामुदायिक वनमा पर्या-पर्यटन प्रवर्द्धन हुने लक्ष्य लिएर सात करोड रुपिया विनियोजन गरिएको छ । त्यसैगरी स्थानीय तह अन्तर्गत संचालन हुनेगरी ९ करोड १५ लाख ८९ हजार रुपैया विनियोजन गरिएको छ । ५८८ वटा स्थानीय तहका कम्तिमा एउटा सामुदायिक वन समुहलाई एक लाख देखि ५ लाख रुपैया उपलब्ध गराई सामुदायिक वनमा पर्यापर्यटन प्रवर्द्धनका कार्यक्रमहरु संचालन गर्ने वन मन्त्रालयको योजना रहेको छ । सामुदायिक वनमा पर्या-पर्यटन सञ्चालन गरी जैविक विविधता संरक्षण, दिगो वन व्यवस्थापन र स्थानीय तथा राष्ट्रिय समृद्धिमा योगदान पुऱ्याउने लक्ष्यका साथ **सामुदायिक वनमा पर्यापर्यटन प्रवर्द्धन कार्यविधि २०७५** समेत ल्याइएको छ । वन तथा वातावरण मन्त्रालयले पर्यटकीय सम्भावना रहेका सामुदायिक वनमा वन पैदावारको उत्पादनसहित वातावरणीय सेवाको प्रवर्द्धन गरी पर्या-पर्यटन सञ्चालन गर्न कार्यविधि जारी गरेको हो । सामुदायिक वनमा पर्या-पर्यटन व्यवसाय संचालन गरि जैविक विविधता संरक्षण लगायतका वातावरणिय सेवाको प्रवर्द्धन तथा सदुपयोग गर्ने, पर्या-पर्यटन व्यवसायलाई समुहको वैकल्पिक आयश्रोतको रुपमा स्थापित गरि आम्दानि र रोजगारीका अवसर सहितको वातावरण मैत्री विकासमा योगदान पुऱ्याउने, समूह र सहकारी, स्थानीय तह वा निजी क्षेत्र (जहाँ जुन सम्भव छ) को व्यावसायिक साझेदारीमा पर्यापर्यटन व्यवसाय सञ्चालन गरी स्थानीयस्तरमा संरक्षण तथा समृद्धि हासिल गर्ने कार्यविधिको उद्देश्य रहेको छ ।

**सामुदायिक वनमा पर्याप्पर्यटन सम्बन्धि व्यवस्था**

सामुदायिक वन समूह आफैले वा निजि क्षेत्र, सहकारी,स्थानीय तहको साझेदारी र सहकार्यमा सामुदायिक वनमा पर्या-पर्यटन सम्बन्धि

व्यवसाय संचालन गर्न सक्ने व्यवस्था कार्यविधिले गरेको छ । समुहले पर्या-पर्यटन व्यवसाय संचालन गर्न चाहेमा विषय छनौट गरि पर्या-पर्यटन व्यवसाय संचालन गर्ने निर्णय साधारण सभाबाट अनुमोदन गरि कार्य योजनामा समावेश गर्न डिभिजन वन कार्यालयबाट स्वीकृत लिनु पर्नेछ । समुहले निजि क्षेत्रको साझेदारी वा सहकार्यमा पर्यापर्यटन व्यवसाय संचालन गर्ने भएमा कार्यविधिले व्यवस्था गरे अनुसारको आशयपत्र र प्रस्ताव आव्हान, मुल्यांकन, संचालक छनौट तथा करार गरि कार्ययोजनामा समावेश गर्न डिभिजन वन अधिकृतको स्वीकृति लिनु पर्ने व्यवस्था गरिएको छ । सामुदायिक वनले निजि व्यवसायीलाई १० वर्षको लागि करार गरि वनमा पर्या-पर्यटन व्यवसाय गर्न दिनको लागि करारनामा गर्न सक्ने, व्यवसायीको काम सन्तोषप्रद देखिएमा थप एक अवधिको लागि करार गर्न सकिने र करारनामा वा निर्देशिकाको प्रतिकुल हुनेगरी काम गरेमा संचालकलाई हटाउन सक्ने प्रावधान कार्यविधिमा उल्लेख छ । निर्देशिकाले सामुदायिक वनमा वन्यजन्तु पालन सहितको पर्यापर्यटनको लागि विशेष व्यवस्था समेत गरेको छ । यो व्यवस्था अनुसार समुहले सामुदायिक वनको भौगोलिक अवस्था र हावापानी सुहाउदो किसिमको असहाय, घाइते ( उपचार पश्चात), मुद्धाको रोहमा प्राप्त भएका , उद्धार गरिएका वन्यजन्तुको संग्रह, पालन र व्यस्थापन गरि वन्यजन्तुको महत्व, स्वभाव,संरक्षणको स्थिति आदिको बारेमा जानाकरी तथा संरक्षण शिक्षा संचालन गर्न सक्नेछन् । यस्तो व्यवस्थाले मिनी जू संचालन गर्न चाहने शंकरनगर वनबाटिका जस्ता सस्थालाई काम गर्न सहज हुने देखिन्छ ।

**सामुदायिक वनमा पर्यापर्यटन किन ?**

अहिलेसम्म सामुदायिक वन समुहहरुले घास दाउरा बेचेर आम्दानी गर्ने, हरियाली वृद्धि गर्ने काममा मात्र आफुलाई सिमित गर्दै आएका थिए । कतैकतै वनमा आधारित उद्यम संचालन गर्ने र समुदायलाई परम्परागत उद्यममा सघाउने काम समेत गरेको देखिन्छ । सामुदायिक वनको यस किसिमको उपयोगबाट सिमित व्यक्तिहरुले मात्र लाभ प्राप्त गर्न सकेका थिए । सामुदायिक वनको अहिलेसम्मको अभ्यासले सामुदायिक वनप्रति स्थानीयको अपनत्व कम देखिन्छ । सामुदायिक वनबाट बहुआयामिक लाभको खोजि गर्नेक्रममा सामुदायिक वनमा पर्यापर्यटनको अवधारणा आएको हो । पर्यापर्यटन व्यवसायलाई वन उपभोक्ता समूहको वैकल्पिक आयस्रोतको

**सामुदायिक वन क्षेत्रमा संचालन गर्न सकिने पर्यापर्यटन व्यवसाय सम्बन्धि क्रियाकलापहरु**
**( सामुदायिक वनमा पर्यापर्यटन प्रवर्द्धन कार्यविधि २०७५, अनुसुची २ बमोजिम )**

क.सामुदायिक वन भित्र वा आसपास ऐतिहासिक , धार्मिक र पुरातात्विक महत्वका मठ, मन्दिर,चैत्य , गुम्बा , झरना, सिमसार लगायका सम्पदाहरुको संरक्षण, व्यवस्थापन र विकासमा टेवा पुग्नेगरी अवलोकन भ्रमण , पदयात्रा, वन विहार, पौडी पोखरी, जलविहार जस्ता कार्यहरु संचालन ,
ख. प्राकृतिक सौन्दर्य, भूदृश्य एवम वन्यजन्तुको अवलोकनको लागि मचान निर्माण र संचालन,
ग. सामुदायिक वनमा पाइने काष्ठ, गैह्र काष्ठ वनस्पति प्रजाति र वन्यजन्तु लगायतका जैविक विविधता सम्बन्धि सुचना केन्द्र स्थापना र संचालन,
घ.असहाय, मुद्धाको रोहमा प्राप्त भएका तथा उद्दार गरिएका वन्यजन्तुको संग्रह, पालन तथा मिनी चिडियाखानाको स्थापना र संचालन,
ङ.जंगली पुष्प बगैचा, जैविक विविधता पार्क, ईको-बाल उद्यान आदि संचालन गर्ने,
च. न्युनतम क्षेत्रफल ( समग्र वन क्षेत्रको दश प्रतिशत वा पाँच हेक्टरमा जुन न्यून हुन्छ सोहि)मा नबढ्ने गरि स्थायी भौतिक संरचना निर्माण गर्न,
छ.बास, बेत, ख खदाईआदि स्थानीय सामग्री र प्रविधि प्रयोग गरि तोकिएको स्थानमा कटेज,प्रतिक्षालय , गोलघर, आराम स्थल, अस्थायी पसल, तथा रेस्टुरेन्ट आदि निर्माण गरि संचालन गर्न,
ज.वातावरणमैत्री हरित पुर्वाधारहरु निर्माण,पिकनिक स्पटको व्यवस्थापन,
झ. हात्ती सफारी, हर्स राइडिंग, वर्ड वाचिंग, वटरफ्लाई वाचिंग, फिसिंग, भिडियोग्राफी, साइक्लिंग, फोटो टुर, क्यानोपी वाक,हाइरोप, केवल कार आदि संचालन गर्ने

रुपमा स्थापित गरी आम्दानी र रोजगारीका अवसर सहितको वातावरणमैत्री विकासमा योगदान माध्यमको रुपमा लिइएको छ ।

विस्वको पर्यटन क्षेत्रमा तीव्र विकास भइरहेको छ । पर्यटकहरु नयाँ स्वादका पर्यटनमा रमाउन खोज्ने क्रम बढेको छ । नेपालमा ठुलो संख्यामा पर्यटकहरु प्राकृतिक सन्दौर्यतामा रमाउन आउने गर्छन । त्यसैगरी पछिल्लो समयमा नेपालीहरुमा पनि घुम्ने, रमाउने प्रवृति बढिरहेको छ । यी कारणहरुले गर्दा नेपालमा पर्यापर्यटनको सम्भावना उच्च रहेको छ । सामुदायिक वनमा पर्या पर्यटन एक संरक्षणमुखी अवधारणा हो । वनमा भार नपारी समुदायलाई आम्दानी दिने भएकोले यसलाई संरक्षणसंगै रोजगारीको माध्यम बनाउन सकिन्छ । सरकारले ल्याएको निर्देशिकामा सामुदायिक वनमा पर्यापर्यटन व्यवसाय संचालकले आफ्नो व्यवसाय प्रवर्द्धनको लागि स्थानीय स्तरमा उत्पादित वस्तु, सेवा,कला र सस्कृतिको प्रयोगलाई उच्च प्राथमिकता दिनुपर्ने , स्थानीय जनशक्तिलाई रोजगारीको लागि प्राथमिकता दिनुपर्ने उल्लेख छ । यस अनुसार सामुदयिक वनमा पर्यापर्यटन व्यवसाय संचालन गर्दा स्थानीय कृषि उत्पादन, परम्परागत उत्पादनहरुले बजार पाउने भएकोले स्थानीय बासिन्दाहरुले आफ्नै ठाउँमा बसेर पनि आम्दानि गर्न सक्छन् । त्यस बाहेक पर्यटन व्यावासय संचालनको क्रममा दक्ष र अदक्ष व्यक्तिहरुले क्षमता अनुसार रोजगारी प्राप्त गर्न सक्छन भने सामुदायिक वन बाहिर होमस्ते संचालन, होटेल व्यवसाय, यातयात व्यवसाय संचालन गरेर समुदायले लाभ लिन सक्छ. पर्यटकीय गतिविधिबाट लाभ प्राप्त गरेमा स्थानीय वासिन्दाहरु आम्दानीको लागि वन दोहन गर्ने काम गर्दैनन् र सामुदायिक वन प्रति सकारात्मक धारणा समेत विकास हुदै जान्छ । पर्यापर्यटन व्यवसाय संचालनबाट समुहले आर्जन गरेको रकम समुहको कोषमा रकम जम्मा गरि " सामुदायिक वन उपभोक्त समुहको आर्थिक कार्यविधि निर्देशिका, २०७३" बमोजिम वार्षिक कार्यक्रम तथा बजेट तयार गरि समुहले खर्च गर्न पाउने भएकोले समुहले गरेको आम्दानि सामुदायिक हित, वन व्यवस्थापन र पर्यटकीय पूर्वाधार निर्माणमा लगानी गर्न सक्छन् । यी सबै क्रियाकलापबाट स्थानिय क्षेत्रमा पर्यावरण संरक्षण, कृषि र घरेलु उद्यमको विकास, आतिथ्य उद्योगको विकास जस्ता प्रत्यक्ष उपलब्धिहरु दिर्घकालिन ढंगले प्राप्त गर्न सकिनेछ ।

**सामुदायिक वन समुहले गर्नुपर्ने कार्य**

अहिले धेरै सामुदायिक वन समुहहरुले पर्यटनको नाममा पिकनिक स्थल बनाउने काममा मात्र आफुलाई सिमित गरेको देखिन्छ । सामुदायिक वनको केहि क्षेत्रलाई तारबार गरेर पिकनिक सेड बनाउने, विश्राम गृह बनाउने र केहि फूलका विरुवाहरु रोपेर सेल्फी खिच्ने ठाउँ बनाउनुलाइ पर्यटनको सुरुवात गरेको मान्न सकिदैन । समुदायिक वनले पर्या पर्यटनबाट लाभ लिने हो भने सामुदायिक वनभित्र रहेका वनस्पति, जीवजन्तु, भूबनोट, तालतलैया तथा खोला नदि र स्थानीय मौलिक ईतिहास र सभ्यतामा पर्यटकलाई रमाउने अवस्थाको निर्माण गर्नुपर्छ । पर्यटकीय पूर्वाधारको नाममा सामुदायिक वन भित्र कंक्रिटका भव्य संरचनाहरु तयार गर्ने , स्थानीय प्रजातिका वनस्पतिहरु नासेर बाहिर वनस्पतिहरु सामुदायिक वनभित्र हुल्ने, जिवजन्तुलाई साँघुरो स्थानमा थुन्ने, वनभित्र रमाइलो मेला संचालन गर्न खोजियो भने यसले पर्यावरणमा नकारात्मक असर पार्ने र पर्यापर्यटनको मर्म विपरितको काम हुने भएकोले वनको मौलिक स्वरूपमै पर्यटन व्यवसाय संचालन गर्नुपर्छ ।

समुदायको सहभागिता र अपनत्व विना वनमा पर्यापर्यटन व्यवसाय संचालन गर्न सकिदैन । त्यसैले स्थानीय वासिन्दाहरुसंग सहकार्य गरि स्थानीय उत्पादनको खपत गर्ने र वन बाहिरपनि पर्यटन व्यवसायको लाभ पुऱ्याउने कुरामा सामुदायिक वन समुहहरुले ध्यान दिनै पर्छ । सामुदायिक वनमा संचालन हुने पर्यापर्यटनबाट स्थानीय सरकारले समेत लाभ लिने भएकोले समुहका हरेक पर्यटकीय गतिविधिहरुलाई स्थानीय सरकारका पर्यटन योजनासंग जोड्नुपर्छ । सामुदायिक वनलाई पिकनिक खाने र फर्कने थलो नबनाई नेचर ट्रेकिंग, वर्ड वाचिंग, जंगल सफारी, हाइकिंग जस्ता कार्यहरु गराई पर्यटकहरुलाई सकेसम्म धेरै समय टिकाउने काम वन समुहहरुले

गर्नुपर्छ । पर्यटकहरुको बसाई लम्ब्याउन वन बाहिर रहेका सास्कृतिक सम्पदा, सिमसार क्षेत्रका सरोकारवालाहरु, छिमेकि वन समुहहरुसँग मिलेर पर्यटन योजनाहरु बनाउनुपर्छ । सबै सामुदायिक वन समुहहरुले सुरुमा आफ्नै आम्दानीले पर्यटकीय पुर्वाधारहरु तयार गर्न नसक्ने भएकोले स्थानीय वासिन्दा र विज्ञहरुसंग छलफल गरि दिर्घकालिन पर्यटन योजना बनाएर स्थानीय सरकार, प्रदेश सरकार, पर्यटन र वन मन्त्रालयबाट बजेट प्राप्त गर्ने र ति निकायले बनाउने पर्यटन योजना र कार्यक्रममा आफ्नो सामुदायिक वनले गर्ने पर्यापर्यटनलाई समावेश गर्ने पहल गर्नुपर्छ । यी कार्यहरु गर्न सकेमा अहिले वन र वातावरण संरक्षणमा उदाहरण बनिरहेका सामुदायिक वनहरू देशमा पर्यटन उद्यमलाई उचाइमा पुर्याउन र स्थानीय आर्थिक विकासमा समेत बलिया खम्बा बन्न सक्नेछन् । *वनबाटीका, २०७६*

# Tourism in Community Forests: Practices and Prospects

Yubaraj Kandel

*Abstract*

The revision of the CF Development Program Guidelines from 2058 to 2065 has highlighted the potential for income generation through the exploration of environmental services in community forests. These services include watershed and biological diversity protection, landscape beauty, and carbon storage achieved through sustainable forest management. As a result, tourism is now being considered as part of the action plan for these forests. The introduction of the Tourism Promotion Procedure in 2075 aims to contribute to biodiversity conservation, sustainable forest management, and local and national prosperity through tourism activities in community forests. This procedure allows Community Forest User Groups (CFUG) to engage in tourism-related businesses either independently or in collaboration with the private sector, cooperatives, and local authorities. Tourism in community forests serves as an alternative source of income for forest user groups while promoting environmentally friendly development and providing opportunities for income and employment. By embracing eco-tourism, communities can combine conservation efforts with economic benefits. Establishing homestays, hotels, and transportation services outside the community forest can further enhance the economic potential of tourism activities. To attract tourists, community forests must showcase their unique flora, fauna, landscapes, valleys, rivers, and local history and culture. By generating income from tourism, local residents are less likely to exploit forests for financial gain, fostering a positive attitude towards community forest conservation. It is essential for tourism activities in community forests to align with the local government's tourism plan to ensure mutual benefits for both the community and the government. By leveraging the natural and cultural assets of community forests, tourism can become a sustainable and mutually

beneficial endeavor for all stakeholders

प्रतिशत रकम सम्बन्धित स्थानीय तहको

# सामुदायिक वन कसको लागि ?

## Who is Owner of Community forest?

युवराज कंडेल

*नेपालमा वन संरक्षणमा सामुदायिक वन कार्यक्रमले मुख्य योगदान गरेको छ तर सामुदायिक वन स्थानीय र परम्परागत उपभोक्ताकै हातमा र हितमा छ भन्ने आधारहरु कमजोर भैरहेका छन् । सामुदायिक वनहरू स्वार्थ समुहहरु, राजनैतिक दलहरु, काठका ठेकेदारहरु र सामुदायिक वन उपभोक्ता महासंघका पदाधिकारीहरु खेल्ने ठाउँ बन्दै गएको छ । यस्ता गतिविधिले सामुदायिक वन कार्यक्रमको उद्धेश्य नै ओझेलमा पर्दै गएको छ. सामुदायिक वन समुदायको वन सम्बन्धि आवस्यकताहरु पुरा गर्न र वातावरण संरक्षण गर्नको लागि गठन गरिएका हुन् । समुदायलाई नै वनबाट टाढा राखेर वन संरक्षण गर्ने र काठ विक्री गरेर आम्दानि गर्ने कार्यलाइ राम्रो मान्न सकिदैन । वन श्रोत स्थानीय समृद्धिको आधार हो । उपभोक्तालाई टाढा राखेर र रुख काटेर वनले दिगो लाभ दिन सक्दैन । वनमाथि परम्परागत उपभोक्ताको अधिकारलाई अक्षुण राख्दै वनको वैकल्पिक प्रयोग गर्ने कुरामा तिनै तहका सरकारहरु नयाँ सोचका साथ आउनुपर्छ ।*

involved.

### लडाँई

सामुदायिक वन उपभोक्ता महासंघ चार महिनायता आन्दोलनमा छ । सामुदायिक वन तेहोरो करको मारमा परेको देखि लिएर वन ऐन २०७६ ले सामुदायिक वनलाइ खुम्च्याउन खोजेको र चुरे संरक्षण समितिको गठन जस्ता मुद्धाहरुमा सामुदायिक वन महासंघको आन्दोलान कायम छ । संविधानको अनुसूची ९ को बुँदा ७ अनुसार वनजंगल, वन्यजन्तु र जललगायतको उपयोगमा संघ, प्रदेश र स्थानीय तहको साझा अधिकार हुने उल्लेख छ । गत चैतमा मात्र स्थानीय सरकार सञ्चालन ऐन, ०७४ संशोधन गरि दफा ६२ ख थप गरिएको छ, जसअनुरूप सामुदायिक वनले वन पैदावारको बिक्रीबापत प्राप्त हुने रकमको १० संचित कोषमा जम्मा पर्ने हुन्छ । संघीयता लागू हुनुअघि साल र खयर सहितका काठ बिक्रीबाट

प्राप्त आम्दानीको १५ प्रतिशत आयकर राज्यलाई बुझाउनुपर्ने व्यवस्था भए पनि अहिले तीन वटै सरकारले हकदाबी गरेका छन् ।

प्रदेश ३ सरकारले समूहभन्दा बाहिर बिक्री-वितरण गरिएको वन पैदावार (काठ-दाउरा) बिक्रीबाट प्राप्त रकमको २५ प्रतिशत सेवा शुल्कबापत प्रदेश सञ्चित कोषमा जम्मा गर्नुपर्ने र प्रदेश १ सरकारले त १५ प्रतिशत कर लगाउने गरी विधेयक गरी अघि बढाएपछि महासंघले विरोध जनाएको छ । अहिलेसम्म सामुदायिक वन समुहहरुले आफैले कार्ययोजना बनाएर वन पैदावारको विक्री वितरण गरि

आफूखुशी खर्च गरिरहेको अवस्थामा स्थानीय र प्रदेश सरकारहरुले सामुदायिक वनको आम्दानीमा हिस्सा खोज्दा महासंघ भस्किएको छ । भर्खर प्रमाणिकरण भै कार्यान्वयनमा आएको वन ऐन २०७६ को दफा २२ ले उपभोक्ता समुहले कार्ययोजना बमोजिम आर्जन गरीको वर्षिक आयबाट कम्तिमा २५ प्रतिशत रकम वनको विकास, संरक्षण र व्यवस्थापन कार्यमा खर्च गरि बाकि रहेको रकमको कम्तिमा ५० प्रतिशत सम्बन्धित स्थानीय तहसँग समन्वय गरि गरिवी न्यूनीकरण, महिला शशक्तिकरण तथा उद्यम विकास कार्यमा खर्च गर्नुपर्ने र यसरी खर्च गरि बाँकि रहेको रकम उपभोक्ता समुहको हितमा प्रयोग गर्नुपर्ने उल्लेख गरिएको छ । केहि स्थानीय सरकारहरुले हालका सामुदायिक वनको व्यवस्थापन अबका दिनहरुमा आफैले गर्ने वा आम्दानीको खर्च आफुले तोकेको काममा हुनुपर्ने गरि स्थानीय कानूनहरु निर्माण गर्न थालेका छन् । संघीय, प्रदेश र स्थानिय सरकारले पछिल्ला दिनहरुमा गरेका कानूनी र नीतिगत व्यवस्थाहरुले गर्दा सामुदायिक वनमा शासन चलाइरहेको महासंघको एकाधिकारमा धक्का लागेको छ ।

**समस्या**

उपभोक्ता समितिका पदाधिकारी र ठेकेदारको मिलोमतोमा सामुदायिक वनको काठ सस्तोमा बिक्रि गर्न लागेको भन्दै साउनको दोश्रो साता स्थानीयले कावासोती नगरपालिकामा रहेको मध्यबिन्दु हरियाली सामुदायिक वन उपभोक्ता समितिको कार्यालयमा तालाबन्दी गरे । उपभोक्ता समितिले वनको १० हजार ७ सय ३६ क्यूफिट गोलिया र २२ चट्टा दाउरा बिक्रि गर्न पत्रिकामा सूचना प्रकाशन गरेको थियो । ठेकेदारसँगको मिलेमतोमा टेन्डर भर्ने वातावरण बनाइएको, टेण्डर सम्बन्धी विवरण, काठ बिक्रि भएको परिणाम र मूल्य बारे जानकारी माग्दा उपभोक्ता समितिले दिन नमिल्ने बताए पछि केहि स्थानीय उपभोक्ताहरुले तालाबन्दी गरेका थिए । सामुदायिक वन उपभोक्ता समितिका अध्यक्ष टेन्डर सम्बन्धि कुराहरु सार्वजनिक गर्न आवस्यक नरहेको भन्ने अभिव्यक्ति दिएपछि विवाद चर्किएको थियो । यो भन्दा पनि ठुलो विवाद रुपन्देहीको बुटवल सामुदायिक वनमा दुइ वर्षदेखि चलिरहेको छ । दुइवटा समूहको विवादले २ वटा समानान्तर समिति भइ एउटै कार्यालयमा २ वटा ताला लाग्ने र खोल्ने क्रम चलिरहदा कुनै समयमा उत्कृष्ट सामुदायिक वनको रुपमा पुरस्कृत समेत भएको सामुदायिक वन अस्तव्यस्त बनेको छ ।

**बन्देज**

रुपन्देही जिल्लाका शंकर नगर र करहिया सामुदायिक वन समुह नेपालकै पहिलो पुस्ताका सफल सामुदायिक वन मानिन्छन । संरक्षणको हिसावले यी वनहरू उदाहरणीय छन् । तिलोत्तमा नगरपालिकाका ९० प्रतिशत भन्दा बढी बासिन्दाहरुले दशकौदेखी यी वनहरू उपभोग गर्दै आएपनि सामुदायिक वन गठन गर्दा साबिकका शंकरनगर र करहिया गाविसका उपभोक्ताहरुलाई मात्र सदस्य बनाउदा अन्य क्षेत्रका परम्परागत उपभोक्ताहरु स्वाभाविक रुपमा वनको प्रत्यक्ष उपभोग गर्नबाट बन्चित हुन पुगेका थिए । जतिजति यी सामुदायिक वनहरू सफल बन्दैगए उतिउति वन क्षेत्रमा तारबार, तारजाली लाग्न थाल्यो । सामुदायिक वनमा परम्परागत उपभोक्ताको निर्वाध प्रवेश र घाँस दाउरामा प्रतिवन्ध लाग्दै गयो, पशु चरिचरनमा अघोषित प्रतिवन्ध लाग्दै गयो । अहिले वस्तितर्फ जाली लगाएर वन प्रवेश गर्न नमिल्ने गराइएको छ । वनका केहि मुख्य नाकामा फलामे गेट लगाएर बन्द गरिएको छ । वनबाट काठ निकाल्न वा समितिका पदाधिकारी वा कर्मचारी वन प्रवेश गर्न यी ढोकाहरु खुल्ने गरेपनि परम्परागत उपभोक्ताहरु घाँस दाउरा लिन, पशु चराउन, पात टिप्न, कन्दमूल खोज्न वन प्रवेश गर्न यी गेटहरु खुल्दैनन । रुख ढालेर काठ ओसार्नको लागि वन सहज भएपनि परम्परागत किसिमले वन उपभोग गर्न गर्ने उपभोक्ताहरुको लागि वन टाढा हुदै गएको छ । वनमा हरियाली बढेको छ तर जसको लागि सामुदायिक वन समुह गठन गरिएको हो

उनीहरु को उपस्थिति वनमा पातलिदै गएको छ ।

**व्यवस्था र बदमाशी**

नेपालमा वातावरण संरक्षणमा सफलताको क’रा गर्दा सामुदायिक वनहरुलाई सधै अघि सार्ने गरिन्छ । चालिसको दशकमा निरन्तर ओरालो लागेको वन बढेर अहिले कूल भूभागको ४४ प्रतिशत पुगेको छ । यस्तो स्थिति आउन नदिनमा सामुदायिक वनहरुको मुख्य देन छ । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुर्‍याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार नेपालमा २२ हजार २ सय ६६ सामुदायिक वन स्थापना गरी २२ लाख ३७ हजार ६ सय ७० हेक्टर राष्ट्रिय वन संरक्षण तथा व्यवस्थापनका लागि स्थानीय उपभोक्ता समूहलाई हस्तान्तरण गरिएको छ । २९ लाख ७ हजार ८७१ परिवार सामुदायिक वन उपभोक्ता समूहमा आबद्ध छन् । तथ्याकको विश्लेषण गर्ने हो भने यति धेरै उपभोक्ताहरु सदस्यहरु भएको सामुदायिक वन कार्यक्रम निकै सफल जस्तो देखिएपनि माथिका ४ वटा उदाहरणहरुले सामुदायिक वन कसको हो त भन्ने प्रश्न उठान भैरहेको छ ।

नेपालको वन व्यवस्थापनमा परम्परादेखि नै जनताको प्रत्यक्ष संलग्नता हुदै आएको भएपनि सरकारी तवरमा पहिलोपटक राष्ट्रिय वन योजना २०३३ मा समुदायको आवस्यकता महशुस गरिएको थियो. यसै अनुरुप वि.सं.२०३५ सालमा वन ऐन २०१८ लाई संसोधन गरी वनको व्यवस्थापन गर्न अधिकार र जिम्मवारी स्थानीय निकायलाई सुम्पन प्रक्रिया सुरु भएको थियो । २०४६ सालमा बनेको वन विकास गुरुयोजनाले सामुदायिक वनलाई प्राथमिकता प्राप्त कार्यक्रमको रूपमा राखी वन व्यवस्थापनमा जनसहभागिता हुनुपर्ने कुरामा जोड दियो । . २०४६ सालमा प्रजातन्त्रको पुर्नबहाली भएपछि निर्माण गरी लागू गरिएको वन ऐन २०४९ र वन नियमावली २०५१ ले सामुदायिक वन उपभोक्ता समूहलाई अबिच्छिन्न उत्तराधिकारवाला स्वशासित र संगठित संस्थाको रूपमा स्थापित गरी वनको विकास, संरक्षण, उपयोग र व्यवस्थापन गर्न जिम्मेवारी सुम्पन सुरु गरेको थियो । सामुदायिक वनको मुख्य आधार साविकको वन ऐन २०४९ हो । यो ऐनको दफा २५ ले वनको विकास, संरक्षण, उपयोग, व्यवस्थापन गर्न तथा स्वतन्त्र रुपले वन पैदावारको मूल्य निर्धारण गरी बिक्री वितरण गर्न पाउने गरी जिल्ला वन अधिकृतले राष्ट्रिय वनको कुनै भाग तोकिए बमोजिम सामुदायिकवनको रुपमा उपभोक्ता समूहलाई सुम्पन सक्ने व्यवस्था गरेको थियो । सामुदायिक वन विकास कार्यक्रम कार्यान्वयन गर्न सजिलो होस् र कार्यान्वयन प्रक्रियामा एकरुपता आओस् भन्नाका लागि वि.सं. २०५२ सालमा सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन तयार गरी लागू गरिएको थियो । देशमा आएको राजनीतिक, सामाजिक र आर्थिक परिवर्तनसंगै सामुदायिकवनको प्रक्रियालाई अझ बढी समावेशी, पारदर्शी, विपन्नमुखी र सहभागितामूलक बनाउन र वि.सं. २०५८, वि.स.. २०६५, २०६८ र २०७१ सालमा परिमार्जन गरिएको थियो । अहिले सामुदायिक वन विकास कार्यक्रमको परिमार्जित मार्गदर्शन २०७१ अनुसार सामुदायिक वन समुहको गठन, व्यवस्थापन र लाभको बाँडफाँड हुदै आएको छ ।

मार्गदर्शन अनुसार परम्परागत रूपमा भोगचलन गर्दै आएका घरधुरी, पायक पर्ने घरधुरी, उपभोक्ता समूहमा समावेश हुने चाहना भएका घरधुरी, वनमा आश्रित घरधुरी, वनको संरक्षण र व्यवस्थापनमा योगदान दिन सक्ने घरधुरी, वन व्यवस्थापनमा योगदान दिन सक्ने अन्य विकल्प नभएका टाढाका घरधुरीलाइ सामुदायिक वनको उपभोक्ताको रुपमा लिनुपर्ने व्यवस्था गरिएको छ । मार्गदर्शनले सामुदायिक वन समुहमा कोहि नछुटुन भन्नका लागि यस सिलसिलामा घर-घर वा टोल-टोलमा गई सकेसम्म सबै घरधुरीका सदस्यहरूसँग वन सम्बन्धी नीति र कानून, सामुदायिकवनको

कानूनी र सामाजिक मान्यता, उपभोक्ताको अधिकार र कर्तव्य तथा सामुदायिक वन बनाउने प्रक्रियाबारे व्यापक छलफल गर्नु पर्ने र उपभोक्ताको पहिचान र सशक्तीकरणको प्रक्रियाबाट प्राप्त जानकारीको आधारमा विधानको खाका तयार गरि उक्त खाका साधारण सभामा प्रस्तुत गरी आम सहमतिबाट पारित गर्नुपर्ने व्यवस्था गरेको छ । तर नेपालका अधिकांश सामुदायिक वन समुहहरु गठन गर्दा परम्परागत र योगदान दिन सक्ने उपभोक्ताहरुसंग छलफल नै नगरी केहि टाठाबाठा मानिसहरु बसेर समूह गठन गर्ने र पछी मात्र अरुलाई जानकारी दिने गरेका छन् । सिमित व्यक्तिहरु बसेर भौगोलिक, प्रशासनिक सिमानाको आधारमा सामुदायिक वन गठन गर्दा धेरै परम्परागत उपभोक्ताहरु सामुदायिक वनको सदस्य बन्नबाट बन्चित हुदै आएको पाइन्छ ।

सामुदायिक वन समुह सबै उपभोक्ताको भएकोले सबैको यसको गठन, साधारणसभा र समिति गठनमा उनीहरुको सहभागिता सुनिस्चित हुनुपर्ने नीतिगत व्यवस्था छ. साधारणसभा आयोजना गर्दा सम्पूर्ण उपभोक्ताहरु विशेषत विपन्न, महिला, दलितहरुको कम्तिमा पनि ५० प्रतिशत सहभागिता हुनेगरी सम्पूर्ण उपभोक्ताहरु सहभागी हुने वातावरण तयार गर्नुपर्ने र समिति गठन गर्दा समितिमा विपन्न, दलित, आदिबासी, जनजाति समेतका प्रतिनिधित्व हुने गरी कम्तिमा ५० प्रतिशत महिलाको अनिवार्य व्यवस्था गर्ने र बाकी ५० प्रतिशतमा पनि विपन्न, दलित, आदिबासी, जनजाति र जातजातिका समानुपातिक प्रतिनिधित्व गनुपर्छ ।. अध्यक्ष र सचिवमध्ये एक जना महिला हुनुपर्ने,. समिति गठन गर्दा सबै छोलको प्रतिनिधित्व हुने ब्यवस्था मिलाउने साथै समिति चयन गर्दा सकेसम्म आमसहमतिको आधारमा गनुपर्ने व्यवस्था सामुदायिक वन विकासको मार्गदर्शन २०७१ ले गरेको छ । नीतिगत रुपमा उपभोक्तामैत्री व्यवस्था भएपनि सामुदायिक वन गठन प्रक्रिया देखि नै उपभोक्ताको नाममा समुदायमा रहेका केहि टाठाबाठाहरुले आफूखुशी समुह गठन गर्ने, समितिमा उनीहरुले चाहेकै व्यक्ति मात्र रहने वातावरण बनाउने र समितिको बैठकमा आफु अनुकूल निर्णय गराएर काठ बिक्रि र आम्दानीको उपयोग गरिरहेका छन् । यस्तो प्रवृतिले गर्दा धेरै परम्परागत उपभोक्ताहरु सामुदायिक वनबाट टाढिदै गएका छन् । सामुदायिक वनका उपभोक्ताहरुमध्ये धेरैलाई आफ्नै सामुदायिक वनको अध्यक्षको नाम समेत थाहा नपाउनेले यहि कुराको संकेत गर्छ ।

**विवादको चुरो**

सामुदायिक वन कार्यक्रमको मुख्य उद्धेश्य वन संरक्षण गर्दै स्थानीय वासिन्दाको वन पैदावार सम्बन्धि आवस्यकताहरु पुरा गर्नु हो । स्थानीय वासिन्दाहरुले शदियौ देखि वनमा पशु चराउने, घास दाउरा प्राप्त गर्ने काम गरिरहेका छन । तर पछिल्लो समयमा वन व्यवस्थापनको नाममा उपभोक्ताहरुलाई नै वन प्रवेशमा रोक लगाउन थालिएको छ । पशु चरिचरण र घास दाउरा संकलनमा रोक लगाउदा स्थानियहरुको दैनिकी नै प्रभावित भैरहेको छ । सामुदायिक वन समुहहरु वनबाट बढीभन्दा बढी काठ निकालेर बेच्ने र आम्दानि गर्ने ध्याउन्नमा लागिरहेका छन् । अझ काठ काट्नको लागि सामुदायिक वनमा पनि बैज्ञानिक वन व्यवस्थापन लागु गर्ने क्रम बढिरहेको छ । उपभोक्ताहरुले नै उपभोग गर्न नपाउने वनलाई कसरि उपभोक्ताको वन भन्न सकिन्छ?

सामुदायिक वनहरुले काठ काटेर बेचेर आम्दानि गर्ने क्रम बढे संगै यसको आम्दानीमा समितिका पदाधिकारी देखि स्थानीय, प्रदेश र संघीय सरकार सम्मले सामुदायिक वनमा आँखा गाड्दै गएका छन् । प्रचलित वन ऐन, नियमावली र मार्गदर्शनले सामुदायिक वनले कार्ययोजना वमोजिम आर्जन गरेको वार्षिक आम्दानीबाट कम्तिमा २५ प्रतिशत रकम सामुदायिक वनको विकास, संरक्षण र व्यवस्थापन कार्यमा खर्च गर्नुपर्ने, आम्दानीको कम्तिमा ३५ प्रतिशत रकम सहभागितामूलक सम्पन्नता स्तरीकरणलाई आधार मानी विपन्न वर्गका महिला, दलित, आदिबासी, जनजातिका लागि लक्षित कार्यक्रममा परिचालन गर्न व्यवस्था मिलाउने तथा बाँकी रकम समूहको

वार्षिक योजना तयार गरी साधारण सभाको निर्णय अनुसार सामुदायिक विकास कार्यका लागि खर्च गर्न सकिने व्यवस्था गरेका छन् । सामुदायिक वन समुहहरुले गरेको आम्दानीलाई आन्तरिक नीतिगत प्रक्रिया मिलाएर पदाधिकारीहरुले आफ्नो अनुकूलका कार्यक्रमहरुमा खर्च गर्ने, तालिम, भ्रमण र बनभोज जस्ता अनुत्पादक काममा खर्च गर्ने प्रवृति बढ्दो छ । सामुदायिक बन समुहका गैर उद्धेस्यमूलका कामलाई वन कर्मचारीहरुले उक्साउने र सहयोग गर्ने काम गरिरहेका छन् ।

अहिलेसम्म वन पदाधिकारी र कर्मचारीहरुले मात्र अप्रत्यक्ष लाभ लिएको अवस्थामा स्थानीय र प्रदेश सरकारले वनको आम्दानीमा हिस्सा खोज्न थालेपछि र समुहले आफूखुशी संचालन गरिरहेका कार्यक्रमहरुलाई सरकारका योजना र कार्यक्रमहरु अन्तर्गत ल्याउन खोजेपछि सामुदायिक वन समूह र महासंघको नाममा वनमा ढलिमली गरेको एउटा समुहको रोइलो सुरु भएको छ । वनहरू तिनै तहको सरकारको अधिकार क्षेत्रमा पर्ने भएकोले सरकारले लाभमा हिस्सेदारी खोज्नु जायज छ । हिजो स्थानीय तहमा जनप्रतिनिधि नभएको अवस्थामा सामुदायिक वन समूहहरुले आम्दानीमा आफूखुशी खर्च गरिरहेको र अहिले स्थानीय तहमा जनप्रतिनिधिहरु आएर काम गर्न थालिसकेकोले र सामुदायिक विकास स्थानीय सरकारको कर्तव्यको क्षेत्र भएकोले स्थानीय र प्रदेश सरकारले सामुदायिक वनको आम्दानीलाई आफुले लिएर सार्वजनिक हितमा खर्च गर्न खोज्दा सामुदायिक वनका सरोकारवालाहरुले विरोध जनाउनुपर्ने आवस्यकता देखिदैन ।

**अबको बाटो**

नेपालमा वन संरक्षणमा सामुदायिक वन कार्यक्रमले मुख्य योगदान गरीको छ तर सामुदायिक वन स्थानीय र परम्परागत उपभोक्ताकै हातमा र हितमा छ भन्ने आधारहरु कमजोर भैरहेका छन् । सामुदायिक वनहरू स्वार्थ समुहहरु, राजनैतिक दलहरु, काठका ठेकेदारहरु र सामुदायिक वन उपभोक्ता महासंघका पदाधिकारीहरु खेल्ने ठाउँ बन्दै गएको छ । यस्ता गतिविधिले सामुदायिक वन कार्यक्रमको उद्धेश्य नै ओझेलमा पर्दै गएको छ. सामुदायिक वन समुदायको वन सम्बन्धि आवस्यकताहरु पुरा गर्न र वातावरण संरक्षण गर्नको लागि गठन गरिएका हुन् । समुदायलाई नै वनबाट टाढा राखेर वन संरक्षण गर्ने र काठ विक्री गरेर आम्दानि गर्ने कार्यलाइ राम्रो मान्न सकिदैन । वन श्रोत स्थानीय समृद्धिको आधार हो । उपभोक्तालाई टाढा राखेर र रुख काटेर वनले दिगो लाभ दिन सक्दैन । वनमाथि परम्परागत उपभोक्ताको अधिकारलाई अक्षुण राख्दै वनको वैकल्पिक प्रयोग गर्ने कुरामा तिनै तहका सरकारहरु नयाँ सोचका साथ आउनुपर्छ । सामुदायिक वन समुह र उपभोक्ता महासंघले आफुलाई समानान्तर सरकार नठानेर सरकार र उपभोक्तालाई जोड्ने पुलको रुपमा कार्य गर्नुपर्छ । यसो गरेमा मात्र बदलिदो परिस्थितिमा सामुदायिक वनहरू सफल रहिरहन सक्नेछन् ।

*बुटवल टुडे, २२ कार्तिक २०७६*

yrkandel@gmail.com

# Who is Owner of Community forest?

Yubaraj Kandel

*Summary*

Community forestry has seen significant success over the past decade. However, as these community forests thrive, traditional consumers are increasingly being restricted from accessing the forest for grass and firewood collection, as well as animal grazing. Many community forests have been fenced off to prevent entry, leading to a disconnect for those who rely on the forest in a traditional manner. In Nepal, many community forest groups have been established without consulting traditional and potential consumers. Often, groups are formed by individuals from distant locations who later inform others, resulting in many traditional consumers being excluded when community forests are established based on geographical or administrative boundaries. The primary goal of the community forest program is to meet the forest-related needs of local residents while also protecting the forest. However, recent restrictions have prevented consumers from accessing the forest for their daily needs, such as animal grazing and firewood collection. Some community forestry groups are focused on maximizing wood production for sale, leading to conflicts of interest among committee officials, forest employees, and government entities. Community forests have become a battleground for various interest groups, political parties, timber contractors, and FECOFUN officials, overshadowing the original purpose of the program. The primary objective of community forests is to address the forestry needs of the community and protect the environment. It is essential to ensure that the focus remains on these goals, rather than prioritizing income generation through wood sales at the expense of community access and environmental preservation.

*Butwal Today 8 Nov 2019*

# सामुदायिक वनको अबको बाटो

## Future of Community Forestry

युवराज कंडेल

*सामुदायिक वन कार्यक्रम विस्वमै उदाहरणिय बनेको छ । केहि अपवादलाई छोड्ने हो भने सामुदायिक वनले वन संरक्षण, वन पैदावरको उपलब्धता, जिविकोपार्जन, पर्यावरण सन्तुलन, पर्यटन क्षेत्रमा ठूलो योगदान पुऱ्याईरहेका छन् । देश संघियतामा गईसकेको अवस्थामा सामुदायिक वनको भूमिका पहिले भन्दा अझ बढेको छ । यस्तो अवस्थामा सामुदायिक वन र तीनै तहका सरकारहरले अहिलेसम्मका कमजोरीहरुलाई तत्कालै सुधार गरेर संघियताको मर्म अनुसार सामुदायिक वनलाई स्थानीय समृद्धिको आधार बनाउने गरी पुनर्संरचना र व्यवस्थापन गर्नु जरुरि छ ।*

पछिल्लो सर्वेक्षणले नेपालमा ४०.३६ प्रतिशत वन क्षेत्र र ४.३८ प्रतिशत बुट्यान क्षेत्र गरि देशको ४४.७४ प्रतिशत क्षेत्र वनले ढाकेको देखिन्छ ( नेपाल वन श्रोत प्रतिवेदन २०१५)। नेपालको वन क्षेत्रलाई जोगाईराख्न र खुईलिदै गएका जमिनलाई हराभरा बनाउनमा सामुदायिक वनहरुको मुख्य भूमिका रहेको छ । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार वन विभागमा प्राप्त पछिल्लो विवरणअनुसार नेपालमा २२ हजार २ सय ६६ सामुदायिक वन स्थापना गरी २२ लाख ३७ हजार ६ सय ७० हेक्टर राष्ट्रिय वन संरक्षण तथा व्यवस्थापनका लागि स्थानीय उपभोक्ता समूहलाई हस्तान्तरण गरिएको छ । करिब २९ लाख ७ हजार ८७१ परिवार सामुदायिक वन उपभोक्ता समूहमा आबद्ध छन् । समूहलाई हस्तान्तरित सामुदायिक वनको क्षेत्रफल नेपालको कुल वनक्षेत्रको ३३ प्रतिशत र राष्ट्रिय वनक्षेत्रको ४१ प्रतिशत हुन आउँछ । साथै ४३,३१७ हेक्टर वनक्षेत्र ७१,७५३ परिवारहरु मिलेर ७,४८४ वटा कबुलियती वन उपभोक्ता समूहद्वारा व्यवस्थापन हुँदै आएको छ । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । यो फैलावट संगै सामुदायिक वनका उपलब्धी, सम्भावना र चुनौतिहरु समेत निरन्तर बढिरहेका छन् ।

नेपालको वन व्यवस्थापनमा परम्परादेखि नै जनताको प्रत्यक्ष संलग्नता हुदै आएको भए तापनि सरकारी तवरबाट यसको अपरिहार्यता राष्ट्रिय वन योजना २०३३ मा प्रतिबिम्बित भएको हो । सोही योजना बमोजिम २०३५ सालमा वन ऐन २०१८ लाई संशोधन गरी वनको व्यवस्थापन गर्ने अधिकार र जिम्मेवारी स्थानीय निकायलाई सुम्पने प्रक्रिया सुरु भएको थियो । २०४४ सालमा सम्पन्न पहिलो सामुदायिक वन राष्ट्रिय गोष्ठीले परम्परागत रूपमा वनको प्रयोग गर्दै आएका उपभोक्ताहरूको समूह बनाई वन हस्तान्तरण गर्नुपर्ने कुरा औंल्याएको थियो । २०४६ सालमा बनेको वन विकास गुरुयोजनाले सामुदायिक वनलाई प्राथमिकता प्राप्त कार्यक्रमको रूपमा राखी वन व्यवस्थापनमा जनसहभागिता हनु पर्ने

कुरामा जोड दियो । यहि गुरुयोजना अनुसार बि.स. २०४६ पछि स्थापना सुरु भएका र वन ऐन् २०४९ बने पछि कानूनी हैसियत प्राप्त गरेका नेपालका सामुदायिक वनहरुले समुदायको सहभागिता बढी भएमा प्राकृतिक श्रोत संरक्षण कार्य कठिन हुदैन भन्ने राम्रो उदाहरण प्रस्तुत गरेका छन् ।

खासगरी पछिल्ला २ दशकमा नेपालका सामुदायिक वनहरूले वन व्यवस्थापन र वातावरण संरक्षणमा गरेको काम प्रशासनीय छ । सामुदायिक वनको विकास र विस्तारले क्षतिग्रस्त वनक्षेत्रको पुनरुत्थान, वनको घनत्वमा वृद्धि, बढ्दो वन्यजन्तुसहित प्रजाति विविधता, पानीका मुहान संरक्षणजस्ता अनेकौं उपलब्धि भएका छन् । वन डढेलो नियन्त्रण, वन अतिक्रमण तथा अवैध कटानी र ओसारपसार नियन्त्रणमा समुदायको उल्लेख्य सहभागिता भएको छ वनको आम्दानीलाई वन क्षेत्रकै व्यवस्थापन गर्न पुनः लगानी गर्ने, ग्रामीण पूर्वाधार तथा सामाजिक विकासमा टेवा पुऱ्याउने कार्यसमेत भएको छ । सामुदायिक वनको आम्दानीले लघु उद्योग संचालन, जदिबुतिमा आधारित उद्योगको संचालन, पर्या-पर्यटनको अभ्यास जस्ता कामहरु गरेर र वन पैदावार बेचेर गरेको आम्दानीले विद्यालय संचालन, बाटो निर्माण, लघु जलविद्युत संचालन, सामुदायिक भौतिक पूर्वाधारको निर्माण जस्ता काममा सघाइरहेका छन् । केहि सामुदायिक वनले आफ्ना उपभोक्तालाई सौर्य उर्जा, बायोग्यास प्लान्टको स्थापना र स्थानीय आवस्यकतामा आधारित तालिम समेत दिएर सघाइरहेका छन् । सबैभन्दा ठुलो उपलब्धि भनेको सामुदायिक वनको कारणले अहिले नेपालको संरक्षण क्षेत्र बाहिरको वन जोगिएको हो भन्ने कुरामा दुईमत छैन ।

आमसहभागिता, आमसहमति, न्यायोचितता, लैंगिक समानता/ समता, जीविकोपार्जन,श्रोत माथिको पहुँच तथा अधिकार , श्रोतको एकीकृत व्यवस्थापन, पारदर्शिता र दिगो वन व्यवस्थापन सामुदायिक वनका विशेषताहरु हुन् । सामुदायिक वनमाा समावेशीता सुनिश्चित गर्नको लागि उपभोक्ता समिति गठन समितिमा विपन्न, दलित, आदिवासी, जनजाति समेतको प्रतिनिधित्व हुने गरी कम्तिमा ५० प्रतिशत महिलाको अनिवार्य व्यवस्था गर्नुपर्ने र बाकि ५० प्रतिशतमा विपन्न, दलित, आदिबासी,जनजाति र जातजातिको समानुपातिक प्रतिनिधित्व हुनुपर्ने तथा अध्यक्ष वा सचिव मध्ये कम्तिमा एक जना महिला हुनुपर्ने कुरा सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन २०७१मा व्यवस्था गरिएको छ । नीतिगत बाध्यताले गर्दा सामुदायिक वन समुहका पदाधिकारीहरुमा महिला, दलीत, जनजाती र विपन्नहरुको राम्रै उपस्थिति भएको देखिन्छ । लामो समयसम्म स्थानीय तहहरु प्रतिनिधिविहीन बनेको अवस्थामा सामुदायिक वनहरुले नै सबै समुहका स्थानीयलाई बोल्ने र प्रजातान्त्रिक अभ्यास गर्ने अवसर दिएको थियो । स्थानीय तहको निर्वाचन हुँदा सामुदायिक वनमा पदाधिकारी बन्ने अवसर पाएका प्रायजसो उम्मेदवारले चुनाव जित्नुले पनि सामुदायिक वनले समाज र राजनीतिमा कत्तिको प्रभाव पारेको रहेछ भन्ने प्रष्ट हुन्छ ।
सामुदायिक वनहरुका सफलताका कथाहरु सुनिदै गर्दा पछिल्ला समयमा सामुदायिक वन भित्रका विकृतिहरु उजागर भैरहेका छन् । वनका परम्परागत उपभोक्ताहरुलाई समावेश गरेर सामुदायिक वनको गठन गर्नुपर्ने र सामुदायिक वन बनाउदा स्थानीय तह र जिल्लाको सिमानाले असर नपर्ने भन्ने कानूनी व्यवस्था भएपनि केहि टाठाबाठाहरुले उपभोक्ताहरुलाई थाहै नदीई सामुदायिक वन समुह गठन गर्ने गरेको समेत देखिन्छ , जसले गर्दा उपभोक्ता एउटा स्थानीय तहमा र वन अर्कै स्थानीय तहमा पुगेर द्वन्द सिर्जना समेत भएको छ ।

उपभोक्ताहरुको सर्वसम्मतीको आधारमा सबैको प्रतिनिधित्व हुनेगरी सामुदायिक वन समूह गठन गर्ने भने पनि अधिकांस वन समुहहरुको कार्य समिति गठन दलीय भागवण्डाको आधारमा

हुनेगरेको छ र कतिपय ठाउँमा काठ ठेकेदारको आर्थिक लगानीमा सामुदायिक वन समुहहरु गठन भएका खबरहरु पनि बारम्बार आउने गर्छन । पछिल्लो समयमा उपभोक्ताहरुलाई थाहै नदिई केहि टोले नेताहरु मिलेर पदहरुको भागबण्डा गर्ने, वनका विभिन्न समिति र उपसमितिहरुमा घुमाई फिराई आफुहरु मात्र बस्ने वातावरण निर्माण गर्ने र वनले बनाउने कार्यक्रम र खर्च गर्ने रकममा उनीहरुले नै मोज गर्ने गरिरहेका छन् । यि कारणले गर्दा सामुदायिक वनले गरिवी निवारण र जीविकोपार्जन जस्ता क्षेत्रमा अपेक्षित सफलता पाउन सकेको छैन ।

| **नेपालमा सामुदायिक वनको क्षेत्रमा भएको वृद्धि** | | | |
|---|---|---|---|
| वर्ष ( वि.सं.) | सा.व. समुहहरुको संख्या | सा.व.मा संलग्न परिवार | सामुदायिक वनको क्षेत्रफल ( हेक्टरमा) |
| २०५१ | २७५६ | - | १,१२,६२६ |
| २०५८ | ११,५८६ | १२,७६,४३३ | ९,१०,३७० |
| २०६२ | १४,२५८ | १६,४०,२३९ | ११,८७,००० |
| २०६८ | १७,६८५ | २१,७७,८५८ | १६,५२,६५४ |
| २०७२ | १८,९६० | २३,९२,७५५ | १७,९८,७३३ |
| २०७८ | २२,२६६ | २९,०७,८७१ | २२,३७,६७० |
| श्रोतः वन विभागका विभिन्न वर्षका प्रकाशनहरु | | | |

वन आफैमा थुप्रै सम्भावना भएको श्रोत हो । वनमा काठपात मात्र हैन जडिबुटी, फलफुल, घाँसपात जस्ता प्रत्यक्ष वन्य श्रोत पाइन्छन नै, वन सौन्दर्यताको कारणले यसलाई पर्यटनको आधार बनाउन सकिन्छ. वनबाट प्रत्यक्ष र अप्रत्यक्ष थुप्रै किसिमका लाभ लिन सकिने अधिकाश सामुदायिक वन समुहको ध्यान त्यसतर्फ जान सकेको छैन । केहि सामुदायिक वनहरुले पर्यापर्यटन, जडिबुटि र घाँसलाई आम्दानीको श्रोत बनाएको भएपनि धेरैले काठपात र दाउरा बेचेरै आम्दानी गरिरहेका छन् । गैह्रकाष्ठ वन पैदावरको उपयोग तथा वातावरणिय सेवाबाट पनि आम्दानी हासिल गर्न सकिनेमा त्यसतर्फ निकै कम समूहले मात्र ध्यान दिएको पाईन्छ । अझ पछिल्लो समयमा त झन बैज्ञानिक वन व्यवस्थापनको नाममा वन कर्मचारीसंगको मिलेमतोमा वनमा रहेका गतिला रुख काटेर बेच्ने प्रवृति निकै मौलाएको छ । वन ऐन र नियमावलीले पहिले वन संरक्षण गर्दै उपभोक्ताको आवस्यकता पुरा गर्ने र त्यसपछी मात्र आर्थिक उपार्जनमा ध्यान दिनुपर्ने अनि समुहको आम्दानी वनको हितमा खर्चिनु पर्ने व्यवस्था गरेको भएपनि अधिकांस वन समुहको कार्य समितिले जसरी भएपनि आम्दानी गर्ने र कोष वृद्धि गर्ने र सामुदायिक वनको आम्दानी वन संरक्षण भन्दा पनि कार्यालय संचालन, तलबभत्ता, आर्थिक सहायता, चन्दा ,पुरस्कार, भ्रमण र वनभोजमा खर्चन तल्लिन देखिन्छन । सामुदायिक वनमा पदाधिकारहिरुको यस्तो व्यवहारले गर्दा उपभोक्ता र सामुदायिक वन समुह विचको दुरि क्रमश बढिरहेको देखिन्छ ।

देश संघियतामा गैसकेको अवस्थामा वनमा कसको अधिकार रहने भन्ने बारेका विवादहरु सतहमा आईरहेका छन् । वन मन्त्रालयले पुरानै केन्द्रिकृत संरचनासंग मेल खाने तीन तहको वन प्रशासनको मोडेल अघि सारेपछि वन उपभोक्ता महासंघ सशंकित भएको छ । महासंघले संघिय सरकारको प्रस्ताव अस्विकार गर्ने कुरा गरिरहदा केहि स्थानिय सरकारहरु भने वनको अधिकार आफू मातहत भएको भन्दै सामुदायिक वन समुहमाथि नियन्त्रण गर्न कस्सिएका छन् । प्रदेश सरकारले समेत आफुले वनको उपयोग गरेर समृद्धि हासिल गर्ने कुरा गरिरहेको छ । संबैधानिक व्यवस्था अनुसार वनक्षेत्रको नीति तथा कार्यक्रम निर्माण र कार्यान्वयन गराउने दायित्व कानुनी रूपमै स्थानीय, प्रदेश तथा संघ तीनै तहमा पुगेको छ । नेपालको संबिधान २०७२ को अनुसूची ८मा स्थानीय सरकारका र संविधानको अनुसूची ९ ले संघ, प्रदेश र स्थानीय तहका साझा अधिकारको सुची प्रस्तुत गरेको छ । स्थानिय सरकार सन्चालन ऐन २०७४को दफा ११को उपदफा ४ ले संघ तथा प्रदेश कानुनको अधिनमा रही सामुदायिक वनको सन्चालन र व्यवस्थापनबाट प्राप्त रोयल्टी संकलन गर्ने, स्थानिय स्तरमा सामुदायिक, ग्रामिण तथा शहरी, धार्मिक, कबुलियत र साझेदारी वनको

संरक्षण, सम्वर्धन, उपयोग, अनुगमन ,नियमन तथा वन उपभोक्ता समूहको व्यवस्थापनको अधिकार स्थानिय सरकारलाई प्रदान गरेको छ । सबै सरकारहरुको प्रमुख आर्थिक श्रोत नै वन लगायतका प्राकृतिक श्रोतहरु खासगरी प्रदेश र स्थानीय सरकारले समृद्धिका योजना बनाउदा वन र वन्य सम्पदाको उपयोग र परिचालन गर्ने नीति बनाउन खोज्नु स्वभाविक हो । प्रदेश र स्थानीय सरकारले वनको लाभमा स्वामित्व खोज्ने तर समुदायले आफुले संरक्षण गरेको वनको लाभ र स्वामित्वमा अन्य निकायलाइ भाग नदिने कारणले गर्दा समुदायिक वन र स्थानीय सरकार विचमा द्वन्द उत्पन्न हुने र त्यसले सामुदायिक वन विकास, संरक्षण र उपयोगमा मात्र नभई स्थानीय समृद्धिमा समेत प्रतिकुल असर पर्ने देखिन्छ ।

अहिले सामुदायिक वन उपभोक्ता महासंघ र स्थानीय सरकारका पदाधिकारीहरु सामुदायिक वन स्थानीय सरकार मातहत नै रहनुपर्छ भनिरहेका छन्, यसको पछाडी दुबैको साझा स्वार्थले काम गरेको देखिन्छ । सामुदायिक वन पदाधिकारी र स्थानीय सरकारका पदाधिकारीहरु एउटै दलका मानिसहरु रहेकोले पनि दुवै सामुदायिक वन स्थानीय तह अन्तर्गत रहदा आलोपालो दुवै ठाउँमा वस्न सकिने सम्भावना रहने, संघीय सरकारका वन प्रशासनको रोकतोक बेहोर्नु नपर्ने र काम लिन सजिलो हुने भएकोले सामुदायिक वन महासंघले स्थानीय सरकार अन्तर्गत रहन खोजेको देखिन्छ भने स्थानीय सरकारले पनि सामुदायिक वनलाई आफ्नो मातहतमा राख्न सकेमा स्थानीय सरकारको आम्दानी बढाउन र समुदायमा पकड कायम गर्न सकिन्छ भन्ने मनशाय राखेको कुरा केहि ठाउँमा स्थानीय सरकार गठन भए लगत्तै सामुदायिक वन समुह विघटन गर्न खोजेको कुराबाट प्रष्ट हुन्छ । प्रदेश सरकारले वनमाथिको पकड बिना जलश्रोत, पर्यटन जस्ता क्षेत्रबाट लाभ लिन नसकिने भएकोले सामुदायिक वन लगायत सबै किसिमका वनहरुलाई आफ्नो नियन्त्रणमा राख्न खोजेको देखिन्छ । यी स्वार्थहरुले गर्दा सामुदायिक वनको अभिभावक को बन्ने भन्ने द्वन्द भित्रभित्रै बढिरहेको भान हुन्छ ।

सामुदायिक वन कार्यक्रम विस्वमै उदाहरणिय बनेको छ । केहि अपवादलाई छोड्ने हो भने सामुदायिक वनले वन संरक्षण, वन पैदावरको उपलब्धता, जिविकोपार्जन, पर्यावरण सन्तुलन, पर्यटन क्षेत्रमा ठूलो योगदान पुऱ्याईरहेका छन् । देश संघियतामा गईसकेको अवस्थामा सामुदायिक वनको भूमिका पहिले भन्दा अझ बढेको छ । यस्तो अवस्थामा सामुदायिक वन र तीनै तहका सरकारहरले अहिलेसम्मका कमजोरीहरुलाई तत्कालै सुधार गरेर संघियताको मर्म अनुसार सामुदायिक वनलाई स्थानीय समृद्धिको आधार बनाउने गरी पुनर्संरचना र व्यवस्थापन गर्नु जरुरि छ ।

बुटवल टुडे, २०८० पुष ५

# Future of Community Forestry

Yubaraj Kandel

*Summary*

Forests are a valuable resource with endless possibilities. While some community forests have successfully utilized tourism, herbs, and grass as sources of income, many still rely on selling wood and firewood. It is concerning that only a small number of groups have recognized the potential for income generation through non-timber forest products and environmental services. Unfortunately, there has been a recent increase in the unsustainable practice of cutting and selling trees in collusion with forest staff under the guise of scientific forest management. As our country transitions into a federal state, conflicts over forest rights are emerging. According to the constitution, the responsibility for creating and implementing forest sector policies and programs now lies with the local, state, and federal levels of government. Natural resources, including forests, are crucial financial assets for all governments. As provincial and local governments strive for prosperity, it is essential to develop policies for the sustainable use and management of forests and wildlife resources. While state and local governments seek to claim ownership of forest benefits, communities that protect these forests do not always receive their fair share. This disparity may lead to conflicts between community forests and local governments, potentially hindering the development, protection, and utilization of community forests, as well as local prosperity. The community forest program has gained recognition worldwide as a successful model. Despite some challenges, community forests play a significant role in forest conservation, providing forest products, supporting livelihoods, maintaining environmental balance, and promoting tourism. With the shift to federalism, the importance of community forests has only grown. It is imperative for community forests and all levels of government to collaborate immediately to address these issues and ensure the sustainable management of our forests for future generations.

Butwal Today, 21 Dec. 2023

# सामुदायिक वनमा गैह्रकाष्ठ वनस्पतिको उपयोग

Utilization of Non-timber plant in Community Forests

युवराज कंडेल

*प्रदेश सरकार र संघीय सरकारले समेत जडिबुटी र अन्य गैह्र काष्ठ वनस्पतिको उपयोग र बजारिकरणलाई महत्व दिएकोले सामुदायिक वनसमुहहरुले जंगलबाट घाँसदाउरा बेचेर आम्दानी गर्ने भन्दापनि वनको बैकल्पिक ढंगले उपयोग गरेर आर्थिक विकास गर्ने कोशिस गर्नुपर्छ । यसको लागि सामुदायिक वनमा रहेका गैह्र काष्ठ वनस्पतिहरुको संरक्षण, प्रचार ,उपयोग र बजारीकरण गर्नु जरुरि हुन्छ । सामुदायिक वनका रणनीति र कार्यक्रमहरु बनाउदा काठपात मात्र नभई त्यहाँ रहेका गैह्रकाष्ठ वनस्पतिहरु समेत सदुपयोग हुने र त्यसबाट स्थानीय बासिन्दाको जीवनस्तर उकासिने कुरामा ध्यान दिनु पर्छ । परम्परागत पेशा, ज्ञान र आदिबासी पहिचानलाई जोगाईराख्नको लागि पनि सामुदायिक वनका गैह्र काष्ठ वनस्पतिहरुको संरक्षण र व्यवस्थापन गर्नु जरुरि छ ।*

क्षेत्रफलको हिसाबमा नेपालले विस्व मानचित्रमा सानो स्थान ओगटेको भएपनि प्राकृतिक सम्पदाको दृष्टिमा नेपाल विस्वका सम्पन्न राष्ट्रहरुको सुचीमा पर्दछ । यहाको भौगोलिक तथा जलवायुको विविधताको कारणले गर्दा नेपालमा धेरै किसिमका वन तथा वनस्पतिहरु पाइन्छन् । नेपालमा लगभग ६,५०० प्रजातिका फूल फुल्ने र ४,०६४ प्रजातिका फूल नफुल्ने वनस्पतिहरु सूचीकृत गरिएको छ । यिनीहरुमध्ये २,००० भन्दा बढी प्रजातिहरुलाई उपयोगी गैरकाष्ठ वनस्पतिका रुपमा चिनिन्छन् । जसमध्ये १,६२४ प्रजातिहरु जडीबुटीको रुपमा उपयोगमा आएको अनुमान छ । गैरकाष्ठ वन पैदावार भन्नाले वन-जङगल, झाडी तथा चरन क्षेत्रका साथै अन्य प्राकृतिक वा कृत्रिम पारिस्थितिक प्रणालीबाट प्राप्त गर्न सकिने ,सामाजिक, साँस्कृतिक, धार्मिक अथवा आर्थिक महत्व भएका, दाउरा, घाँस र चिरानकाठ बाहेकका सम्पूर्ण जैविक श्रोतहरुलाई बुझिन्छ । यस्ता जैविक श्रोतहरुमा बिभिन्न थरीका वनस्पतीहरु जस्तै ढुसी (च्याउ), झ्याउ, उन्यू, फूल फुल्ने वनस्पति र तिनका अङगहरु पर्छन् । त्यस्तै गैरकाष्ठ वन पैदावारका रुपमा पूरै बिरुवा वा वनस्पतिका बिभिन्न भागहरु जस्तै जरा, पात, बोक्रा, फूल, फल, बीउ, चोप, खोटो, तेल, आदि प्रयोग गरिन्छ । नेपाल सरकारले खेती विस्तारका हिसाबले जम्मा १२ प्रकारका जडिबुटीलाई प्राथमिकता दिई खेती विस्तारमा मात्र गरेको छैन की औचित्य एवं आवश्यकताको आधारमा प्राविधिक, प्रशासनिक एवं आर्थिक सहयोग समेत गर्न सकिने सरकारी प्रावधान छ । यसरी सिफारिसमा परेका प्रजातिहरुमा गुर्जु, सुगन्धकोपिला, पिपला, कुरिलो, सर्पगन्ध, टिमुर, लेठसल्ला, सुगन्धवाला, जटामसी, चिरैतो, कुटकी, पाँचऔलेहरु छन । माथि उल्लेखित गरेका १२ सहित १८ प्रकारका थप अरु समेत गरेर जम्मा ३० प्रजातिलाई गैरकाष्ठ वन पैदावार प्रजातिहरुलाई नेपाल सरकारले अति उपयोगि प्रजातिका रुपमा संरक्षण र विकासका लागि प्राथमिकतामा राखेको छ । नेपाल सरकारले अति उपयोगी प्रजातिका रुपमा संरक्षण र विकासका लागि प्राथमिकताको सुचिमा राखेका गैह्र काष्ठ वनस्पतिहरु अतिश, विष. बोझो, कुरिलो ( सतावरी) नीम,पाखनवेद, सुगंधकोकिल, तेजपात,यार्सागुम्बा,पाँचऔले,झ्याकुर,धसिंग्रे,ओखर,गुच्ची च्याउ,जटामसी , कुट्की, झ्याउ, अमला, पिपला , लघुपत्र ,सर्पगन्ध, पदमचाल,

मजिठो, रिठ्ठा,चिराइतो, जंगली सयपत्री, लोठसल्ला, सुगन्धवाल, गुर्जो, टिमुर रहेका छन । तर व्यावसायिक तथ्यांक तथा अन्य प्रतिवेदन आदिको अभिलेख हेर्दा लगभग १६० प्रजातिका गैरकाष्ठ वन पैदावारको सङकलन, व्यापार र निकासी भएको देखिन्छ । नेपाल सरकारले मिति २०६५/३/२३ मा वन नियमावली, २०५१ को अनुसूची ३ र ६ मा हेरफेर गरी २३७ प्रकारका गैरकाष्ठ वन पैदावारलाई राजश्व निर्धारण्ँका लागि आठ भागमा वर्गीकरणँ गरेको छ । यस अनुसार फल र बीउ जातिमा सबै भन्दा बढी ६५ प्रजातिहरु पर्छन् भने त्यसपछि जरा तथा गानो जातिमा ४८ प्रजातिहरु पर्छन् । त्यस्तै लोक्ता, अर्गेली, अल्लो, बाँस, निगालो आदिलाई अन्य वनस्पतिजन्य वन पैदावारमा वर्गीकरण गरेको छ ।

काठ दाउरा संग नेपाली समाजको जाति निकटता छ त्यो भन्दा बढी गैर काष्ठ वन पैदावार संग नेपाली समाजको सम्बन्ध रहेको पाइन्छ । जडिबुटी, खाद्यान्न , मसला, कृषि तथा पशुपालनका साधनको रुपमा गैह्र काष्ठ प्रजातिका वनस्पतिका जरा, पात, फूल, बोक्रा र पुरै विरुवाको उपयोग भैरहेको पाइन्छ । खासगरी आदिबासी तथा वन नजिकका बासिन्दाहरुको दैनिक जीविकोपार्जनमा कृषि उत्पादनपछि सबै भन्दा धेरै सहयोग गैरकाष्ठ वनस्पति बाट प्राप्त भैरहेको छ । पछिल्लो समयमा नेपालमा फर्निचरको लागि समेत विदेशबाट काठ ल्याउनु परिरहेको छ तर नेपालका गैरकाष्ठ वनस्पति र तिनका उत्पादनहरु भने समुन्द्रपारीसम्म पुगिरहेका छन । नेपालबाट विदेश निर्यात गर्ने प्रमुख बस्तुहरुमा गैह्र काष्ठ वन पैदावारहरु रहेका छन । सरकारले लगभग ८० प्रकारका गैरकाष्ठ वन पैदावारहरुको सङ्कलन र निकासीबाट नगण्य राजस्व प्राप्त गरिरहेको छ। नेपालमा गैरकाष्ठ वन पैदावारहरुको प्रचुर भण्डार भएपनि त्यसको सहि उपयोग हुन नसक्दा नेपालीहरले विदेशबाट महंगो मुल्य तिरेर ठूलो परिमाणमा तिनै गैरकाष्ठ वन पैदावारहरु आयात गरिरहेका छन् ।

| उपयोगि भागका आधारमा व्यापारमा रहेका गैर काष्ठ वन पैदावारहरु | | | |
|---|---|---|---|
| सि.नं. | गैरकाष्ठ वन पैदावारको वर्गीकरण | प्रजाति संख्या | प्रतिशत |
| १ | जरा तथा गानो जाति | ४८ | २०.३ |
| २ | बोक्रा जाति | २५ | १०.५ |
| ३ | पात/डाँठ जाति | ३० | १२.७ |
| ४ | फूल र भूवा जाति | १६ | ६.८ |
| ५ | फल र बीउ जाति | ६५ | २७.४ |
| ६ | पूरै बिरुवा जाति | २१ | ८.९ |
| ७ | गम, रेजिन र लोहावान | ८ | ३.४ |
| ८ | अन्य वनस्पतिजन्य वन पैदावार | २४ | १०.१ |

नेपालमा वातावरण संरक्षणमा सफलताको कुरा गर्दा सामुदायिक वनहरुलाई सधै अघि सार्ने गरिन्छ । चालिसको दशकमा निरन्तर ओरालो लागेको वन बढेर अहिले कूल भूभागको ४४ प्रतिशत पुगेको छ । यस्तो स्थिति आउन नदिनमा सामुदायिक वनहरुको मुख्य देन छ । समुदायलाई सहभागी बनाएर वनको संरक्षण गर्ने र उनीहरुलाई जीविकोपार्जनमा पनि सहयोग पुऱ्याउने उद्धेस्यले सुरु भएको सामुदायिक वन कार्यक्रम अहिले देशभरी नै फैलिएको छ । वन विभागको पछिल्लो तथ्यांक अनुसार नेपालमा २२ हजार २ सय ६६ सामुदायिक वन स्थापना गरी २२ लाख ३७ हजार ६ सय ७० हेक्टर राष्ट्रिय वन संरक्षण तथा व्यवस्थापनका लागि स्थानीय उपभोक्ता समूहलाई हस्तान्तरण गरिएको छ । २९ लाख ७ हजार ८७१ परिवार सामुदायिक वन उपभोक्ता समूहमा आबद्ध छन् ।

नेपालका सामुदायिक वन समुहहरु वन व्यवस्थापन गरेर आफ्ना उपभोक्ताहरुलाई सहज ढंगले दाउरा र घाँस वितरणलाई प्राथमिकता दिदै आएका छन् । तराई क्षेत्रका केहि ठुला वन समुहहरुले वनका घाँस दाउरा बिक्री वितरण गरेर आर्थिक उपार्जन गरेर त्यो आम्दानीलाई सामुदायिक बिकासका गतिविधिहरुमा खर्च गरेको समेत देखिन्छ । अधिकांश सामुदायिक वन समुहहरुको ध्याउन्न वनको व्यवस्थापन गरेर काठजन्य वस्तुहरुको उपलब्धता बढाउनुमा केन्द्रीत भएको देखिन्छ । तराइका केहि वनहरुले वेतबाट आम्दानि गरेको खबर सुनिएपनि त्यो नगन्य मात्रामा छ, पहाडका सामुदायिक वनले भने अम्रिसो, दालचिनी, सल्लाको खोटो, अल्लो, र जडिबुटीहरु संकलन र बिक्री वितरण गरेर आम्दानि गरेका खबरहरु बेलाबेलामा आइरहेका छन. तर यस्ता कार्यहरु दिगो हुन सकेको भने देखिदैन । नेपालमै धेरै सामुदायिक वन समुहहरु भएको पाल्पा जिल्लाका वन समुहहरुले खेर गैरहेको भीरपाखामा अम्रिसो र दालचिनी लगाएर वनलाई आयआर्जनको माध्यम बनाईरहेका छन् । तर पनि सामुदायिक वन उपभोक्ता समुहहरु काठजन्य वन पैदावर ( कतैकती जडिबुटी पनि) को उपभोग र बिक्रीवितरणमा मात्र केन्द्रीत भएकोले वनको गैह्रकाष्ट पैदावारको उपयोगका सम्भावनाहरु ओझेलमा परेका छन् ।

सामुदायिक वन समुहहरु अहिलेपनि काष्ठ प्रजातिका वनस्पतिहरुको संरक्षण र वृद्धि गरेर उपभोक्ताहरुलाई सहज ढंगले काठ दाउरा उपलब्ध गराउने सोचाइले प्रेरित भएको देखिन्छ । यसो गर्दा वनमा उपलब्ध बहुमुल्य गैह्रकाष्ठ वनस्पतिहरुबाट कुनै लाभ लीन नसकी त्यत्तिकै खेर गैरहेका छन । वर्तमान समयमा काठ दाउराका विकल्पहरु तयार भैसकेका छन तर गैह्र काष्ठ वनस्पतिका विकल्पहरु भेटिएका छैनन । वनबाट उपलब्ध हुन सक्ने जडिबुटी, मसलाजन्य उत्पादन, बोक्रा, फलफुल र अन्य अवयवहरुको संरक्षण, संकलन ,प्रयोग र बजारीकरण गर्न सक्ने हो भने सामुदायिक वनमा हरियाली वृद्धी हुने मात्र नभई समाजको आवस्यकताहरु पुरा गरेर समाजको आर्थिक विकास गर्न सजिलै सकिन्छ । सधै काठ दाउराको, घाँस र स्याउलाको पछी मात्र दगुर्दा बहुमुल्य वनस्पतिहरु खेर गैरहेका मात्र छैनन् तिनीहरु विस्तारै लोप समेत भैरहेका छन ।

पछिल्ला वर्षहरुमा देखा परेको जलवायु परिवर्तनको असर, वनमा दोहोरिने वन डढेलो, अति चरिचरन र जडिबुटी लगायतका गैह्र काष्ठ प्रजातिका वनस्पतिहरुको अन्धाधुन्द संकलन जस्ता कार्यले सामुदायिक र अन्य क्षेत्रमा रहेका महत्वपूर्ण गैह्र काष्ठ वनस्पतिहरु संकटमा परिरहेको अवस्थामा पछिल्लो दशकमा सामुदायिक वनमा सुरु भएको वैज्ञानिक वन व्यवस्थापनले पनि गैह्र काष्ठ वनस्पतिहरुको अस्तित्वमा प्रहार भैरहेको छ । पछिल्लो समयमा सामुदायिक वनमा वैज्ञानिक वन व्यवस्थापन लागु गर्ने होडबाजी चलिरहेको छ । वैज्ञानिक वन व्यवस्थापन लागु गरिएका सामुदायिक वनहरुका कार्ययोजनालाई हेर्दा काठपात दिने रुख हुर्काउदै काट्दै जाने कुरालाई प्राथमिकता दिएको देखिन्छ । आम्दानि गर्ने मात्र कुरालाई ध्यान दिने भएकोले काठ प्रजातिका रुखहरु काटिने छन र पुराना रुखहरु सकिएपछि रुखहरु हुर्काउनतर्फ ध्यान दिइनेछ । यसका लागि अन्य विरुवाहरु हटाएर भएपनि काष्ठ प्रजातिका रुखहरु छिटो हुर्काउने प्रयास गरिनेछ । यस्तो कार्यले बैज्ञानिक वन व्यवस्थापनको एक चक्र पुरा हुदा कार्यक्रम लागु भएको वनमा काठ दिने रख बाहेक अरु प्रजातिका वनस्पतिहरु नासिएर जानेछन् । अधिकांश वन्यजन्तुहरु गैर काष्ठ वनस्पतिहरु वन्यजन्तुका आहारा हुन् । तर अचेल वैज्ञानिक वन व्यवस्थापनका नाममा वनमा काष्ठ प्रजातिका रुखहरु मात्र हुर्काएर नाफा कमाउने दाउमा कर्मचारी र सामुदायिक वनका पदाधिकारीहरु लागेकाले गैर काष्ठ वनस्पतिहरु तीव्र रुपमा मासिदै गएका छन् । वनमा वन्य फलफुल र कन्दमूलहरुको अभाव भएपछि वन्यजन्तुको आहारामा कमि आएको छ । आफ्नो प्राकृतिक वासस्थानमा आहाराको अभाव भएपछि अचेल वनस्पतिहरु आफ्नो ठाँउ छोडेर अन्यत्रको वनमा जाने र त्यहाँ पनि उपयुक्त अवस्था नभेटेपछि त्यसैको खोजीमा

नजिकैका खेतवारी र वस्तीहरुमा पुगेर सताउने क्रम अहिले सवै वनहरुमा देखिएको छ ।
घँस दाउरा र हरियालीको लागी मात्र सामुदायिक वन व्यवस्थापन गर्ने अवधराणा अब पुरानो भैसकेको छ । अब सामुदायिक वनलाई “गरिबको धन “को रुपमा व्यवस्थापन गर्नुपर्ने बेला भएको छ । त्यसैले अब वन उपभोक्ता समुहहरुले वनलाई घाँसदाउरा ल्याउने थलोको रुपमा मात्र नहेरी जीविकोपार्जन र आर्थिक विकासको माध्यमको रुपमा पनि हेर्नु पर्छ । नेपाल सरकारले पछिल्ला आवधिक योजनाहरुमा गैह्र काष्ठ वनस्पतिको उपयोग गरि जीविकोपार्जन र आयआर्जनमा सघाउने कार्यक्रमहरुलाई प्राथमिकता दिदै आएको पाइन्छ । वन नीति २०७१ र प्रस्तावित राष्ट्रिय वन नीति २०७५ ले समेत सामुदायिक वन र राष्ट्रिय वनमा रहेका गैह्र काष्ठ वनस्पति र जडिबुटीको संरक्षण, उत्पादन, व्यवस्थित संकलन, बजारीकरण र मुल्य श्रृंखला वृद्धि जस्ता कुराहरुलाई प्राथमिकता दिएको छ । गत वर्ष वनमन्त्रीले घोषणा गरेको वन तथा वातावरण क्षेत्र सुधार कार्ययोजना २०७५ मा जडिबुटी र गैह्र काष्ठ प्रैदावारको संरक्षण, व्यवस्थापन र उपयोग गरि रोजगारी वृद्धि गर्ने कुरा उल्लेख छ , जुन सामुदायिक वनको हकमा समेत लागु हुने देखिन्छ ।

प्रदेश सरकार र संघीय सरकारले समेत जडिबुटी र अन्य गैह्र काष्ठ वनस्पतिको उपयोग र बजारिकरणलाई महत्व दिएकोले सामुदायिक वनसमुहहरुले जंगलबाट घाँसदाउरा बेचेर आम्दानी गर्ने भन्दापनि वनको बैकल्पिक ढंगले उपयोग गरेर आर्थिक विकास गर्ने कोशिस गर्नुपर्छ । यसको लागि सामुदायिक वनमा रहेका गैह्र काष्ठ वनस्पतिहरुको संरक्षण, प्रचार ,उपयोग र बजारीकरण गर्नु जरुरि हुन्छ । सामुदायिक वनका रणनीति र कार्यक्रमहरु बनाउदा काठपात मात्र नभई त्यहाँ रहेका गैह्रकाष्ठ वनस्पतिहरु समेत सदुपयोग हुने र त्यसबाट स्थानीय बासिन्दाको जीवनस्तर उकासिने कुरामा ध्यान दिनु पर्छ । परम्परागत पेशा, ज्ञान र आदिबासी पहिचानलाई जोगाईराख्नको लागि पनि सामुदायिक वनका गैह्र काष्ठ वनस्पतिहरुको संरक्षण र व्यवस्थापन गर्नु जरुरि छ । काठकै लागि मात्र सामुदायिक वन व्यवस्थापन गर्न खोजियो भने सामुदायिक वन कार्यक्रम छिट्टै नै असफल हुनेछ र यसतर्फ वन उपभोक्ता समुह, वन मन्त्रालय र अन्य सरोकारवाला निकायहरुले बेलैमा ध्यान दिनु जरुरि छ ।

*बुटवल टुडे, ९ असार २०७६*

# Utilization of Non-timber plant in Community Forests

Yubaraj Kandel

***Summary***

Community forest groups in Nepal have traditionally focused on distributing firewood and grass to their consumers through forest management practices. However, it appears that these groups are primarily concerned with providing firewood, neglecting the potential benefits of non-timber plants found in the forests. While alternatives to wood firewood have been explored, little attention has been given to non-timber plant. It is crucial to recognize the untapped potential of herbs, spices, bark, fruits, and other non-timber products that can be harvested from the forest. By incorporating these resources into forest management practices, not only can community forests thrive, but also the economic development of society can be significantly enhanced by meeting the needs of the community. The outdated notion of managing community forests solely for grass, firewood, and greenery must be reevaluated. Forest user groups should view forests not only as a source of firewood, but also as a means of livelihood and economic growth. Therefore, it is imperative to protect, cultivate, utilize, and market non-timber plants within community forests. When developing strategies and programs for community forests, it is essential to consider the utilization of non-woody vegetation to improve the standard of living for local residents. Preserving traditional professions, knowledge, and tribal identities can also be achieved through the protection and management of non-timber plants. Failure to incorporate non-woody vegetation into community forest management practices may lead to the program's downfall. Forest user groups, the Ministry of Forestry, and other relevant agencies must prioritize the utilization of non-timber plants to ensure the long-term success of community forest initiatives.

*Butwal Today, 24 June 2019*

# वैज्ञानिक वन व्यवस्थापनको बाटो

## Pathways to Scientific Forest Management

युवराज कंडेल

*तराई र चुरे क्षेत्रमा रहेको प्राकृतिक वनमा वैज्ञानिक वन कार्यक्रम लागू गरी प्राकृतिक वन विनाश गरिएकोले वन्यजन्तुको वासस्थान लोप हुन गई संकटापन्न वन्यजन्तुहरु लोप भएको, मानव-वन्यजन्तु द्वन्द्वमा व्यापक वृद्धि भएको र रुख कटान भएका क्षेत्रहरुमा अतिक्रमण र बसाई-सराई भई सामाजिक द्वन्द्व समेत वृद्धि भैरहेको छ । वनको विशिष्टता,क्षमता र जैविक विविधताको वेवास्ता गरि वनमा प्लटहरु बनाएर रुखहरु काट्ने गरिएकोले विगतमा संरक्षणकर्मिहरुले आशंका गरे अनुसार नै काठ प्रजाति बाहेक अन्य प्रजातिका वनस्पतिहरु मासिएको, जैविक करिडोरमा समेत कार्यक्रम लागु गर्दा वन्यजन्तुहरु नासिएका र अन्यत्र सरेका, जलाधार क्षेत्र र सिमसार क्षेत्र विनाश भएका कुराहरु अध्ययन प्रतिवेदनमा उल्लेख छ ।*

सरकारले वार्षिक ६ देखि १२ करोड घन फिट काठ दिगो रुपमा उत्पादन हुने, करिव १३ लाख मानिसले वर्षैभरी रोजगारी पाउने र राज्यले २० देखि ४० अर्ब रुपियाँ प्रतिवर्ष राजस्व प्राप्त गर्ने दावीका साथ वि.स. २०७१ सालदेखि सुरु गरेको बैज्ञानिक वन व्यवस्थापन कार्यक्रम ७ वर्ष पुरा नहुदै विवादले घेरिएर खारेज हुने अवस्थामा पुगेको छ । अहिले वनमा भएका रुखहरु काटेर काठ उत्पादन गर्ने , ८० वर्षमा सबै पुराना रुखहरु हटाएर नयाँ रुखहरु हुर्काउने र यसले वनक्षेत्रमा अभूतपूर्व लाभ हासिल हुने सरकारी दावी अनुसार देशका विभिन्न ठाउमा वैज्ञानिक वन व्यवस्थापन सुरु गरिएको थियो र पछिल्लो समयमा सामुदायिक वनहरुलाई पनि बैज्ञानिक वन व्यवस्थापनको बाटोमा लाग्न बाध्य पारिएको थियो ।

वन जस्तो संबेदनशील र महत्वपूर्ण क्षेत्र सम्बन्धि निर्देशिका र कार्यविधिहरु मन्त्रिपरिषदले पारित गर्नुपर्नेमा तत्कालिन वन तथा भू(संरक्षण मन्त्रालयको सचिवस्तरीय निर्णयबाट २०७१ कार्तिक २७ मा वैज्ञानिक वन व्यवस्थापन कार्यविधि २०७१ स्वीकृत भई लागु गरिएको थियो । वन तथा भू संरक्षण मन्त्रालयले निकै हतारोमा ल्याएको बैज्ञानिक वन व्यवस्थापन कार्यक्रम सुरु हुनासाथ वन संरक्षनको क्षेत्रमा थुप्रै आशंकाहरु उब्जिएका थिए । वैज्ञानिक वन व्यवस्थापन हचुवामा ल्याइएको भनि संसदको वातावरण समितिले २०७१ मंसिर १५ गते निर्णय गरी राष्ट्रिय वन र साझेदारी वनमा गरिएको वैज्ञानिक वन व्यवस्थापनमा रोक लगाएको थियो । पछि २०७१ पौष २१ गते आफ्नो निर्णय पुनर्विचार गर्दै कार्यक्रमलाई निरन्तरता दिने निर्णय गरेको थियो । त्यसयता नेपालका सबैजसो सरकारका वार्षिक नीति तथा कार्यक्रममा बैज्ञानिक वन व्यवस्थापनलाइ प्राथमिकतामा राख्दै आइएको छ । सुरुमा चक्ला वन र साझेदारी वनमा लागु भएको यस्तो व्यस्थापन पद्धति पछिल्लो समयमा सामुदायिक वनमा समेत द्रुत गतिले प्रवेश गरेको थियो ।

वैज्ञानिक वन व्यवस्थापना लागु भएको वनमा पारिष्थितिक चक्र नै खल्बलिने गरि अन्धाधुन्द रुखहरु काटेकोले त्यसको ब्यापक विरोध

सुरुवात नै भएपनि वन प्रशासन देशभरी वैज्ञानिक वन व्यवस्थापन लागु गर्न दौडाहामै थियो । महालेखाको ५६ औ प्रतिवदनले बैज्ञानिक वन व्यवस्थापन कार्यक्रममा अनियमितता भएको औल्याउदासम्म चुप लागेर बसेको सरकारले देशभरी नै उपभोक्ता र संरक्षणकर्मीले वैज्ञानिक वन व्यवस्थापनका नाममा रूख कटानी बढेको र त्यसक्रममा व्यापक अनियमितता भएको भन्दै ब्यापक विरोध गरेपछि बाध्य भएर सरकारले गत जेठमा नेत्र तिमिल्सिना संयोजनमा पाँच सदस्यीय छानबिन समिति गठन गरेको थियो । समितिले मन्त्रालयले बनाएको वैज्ञानिक वन व्यवस्थापन कार्यविधिमा त्रुटि भएको औल्याउदै वैज्ञानिक वन व्यवस्थापन कार्यविधि खारेज गर्नुपर्ने सुझाव दिएर भदौ अन्तिम साता प्रधानमन्त्री केपी ओलीलाई प्रतिवेदन बुझाएको थियो ।

सरकारले छानविन समिति बनाएपछि प्रतिनिधि सभा लेखा समितिले सांसद प्रदीप यादवको संयोजकत्वमा गत असारमा तीन सदस्यीय अध्ययन उपसमिति गठन गरेको थियो। समितिले बैज्ञानिक वन कार्यक्रम लागू भएका वनहरुको अध्ययन गरि प्रतिवेदन तयार गरेर सरकारलाई बुझाइसकेको छ । यो प्रतिवेदनले वैज्ञानिक वन व्यवस्थापन कार्यविधि खारेज गरेर वन ऐन र वन नीतिअनुसार राष्ट्रिय मापदण्ड लागू गर्न सरकारलाई निर्देशन दिएको छ। वन फँडानी र उपयोगको नाममा काठ व्यवसायी, जनप्रतिनिधि, बहालवाला कर्मचारी तथा शिक्षकहरू उपभोक्ता समितिमा बसेर नेतृत्व गरेको, नक्कली उपभोक्ता समिति बनाएको, परामर्शदाताको बहानामा जथाभावी रकम खर्च गरेको, बिचौलिया र काठ व्यवसायीसँग मिलेमतो गरेको, गलत कार्ययोजना तयार पारेको, वन तथा वातावरणसँग सम्बन्धित ऐन, कार्यविधि, निर्देशिकाहरू उल्लंघन गरेको निष्कर्ष उपसमितिले निकालेको थियो। यहि प्रतिवेदनको आधारमा केहि साता पहिले प्रतिनिधिसभाको सार्वजनिक लेखा समितिले वैज्ञानिक व्यवस्थापनको नाममा जथाभावी वन फँडानी गरेर अधिकारको दुरुपयोग गरेको निष्कर्ष निकाल्दै सम्बन्धित कर्मचारीमाथि कारबाही गर्न अख्तियार दुरुपयोग अनुसन्धान आयोगलाई लेखिपठाउने निर्णय गरेको छ।

समितिको अध्ययन प्रतिवेदनले बैज्ञानिक वन व्यवस्थापना निर्देशिका बनाउदा लिएको आधार र प्रक्रिया नै कानून सम्मत नभएको औल्याएको छ । एकिकृत वा प्रदेशगत वन व्यवस्थापन रणनीतिक योजना तर्जुमा नगरी बैज्ञानिक वन व्यवस्थापनका कार्ययोजनाहरुको स्वीकृति दिने काम वन ऐन, २०७६ को दफा ११ को विपरित भएको, स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ६२ख मा “सामुदायिक वन उपभोक्ता समितिले वन पैदावार बिक्री तथा उपयोगसम्बन्धी आफ्नो वार्षिक कार्ययोजना बनाई गाउँपालिका तथा नगरपालिकाबाट स्वीकृति गराउनु पर्नेछ” भन्ने व्यवस्था भएपनि त्यसो नगरिएको, उत्पादनमूलक वनको पहिचानमा त्रुटी भएको, नेपालको वन क्षेत्रबाट वार्षिक रुपमा उत्पादन हुने वा उत्पादन गर्न सकिने काठको परिमाण वा तथ्यांकहरुका बीचमा ठूलो भिन्नता रहेको जस्ता नीतिगत र प्राविधिक त्रुटिहरु औल्याएको छ । यसैगरी त्रुटिपूर्ण कार्ययोजनाको निर्माण , सिफारिस र स्वीकृति प्रदान गरिएको, प्राकृतिक रुपमा पुनरुत्पादन हुन नसक्ने ठूलो क्षेत्रमा रहेका वनहरु र संवेदनशील क्षेत्रमा रहेका वनहरुमा वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम अन्तर्गत कटान भएका सामुदायिक वन र साझेदारी वन क्षेत्रहरु मध्ये अधिकांश वनहरुमा पुनरुत्पादन नभई वन विनाशको अवस्थामा पुगेको र विगतमा सालका रुखहरु भएको वनमा वैज्ञानिक वन व्यवस्थापन कार्ययोजना अनुसार रुख कटान पश्चात् वनमारा र झारपात फैलिएको, वन क्षेत्रबाट उत्पादन हुन सक्ने वार्षिक वृद्धिदर र उत्पादन परिमाणभन्दा अस्वभाविक रुपमा बढी र लगभग सबै रुख कटान गर्ने कार्ययोजना बनाएकोले सामदायिक वनहरुमा अस्वभाविक रुपमा बढी रुखहरु कटान गरी वन विनाश गरेको , माउ/बीउ रुख राख्दा सालका मात्र

राखेको र अन्य प्रजातिका माउ/बीउ नराखेकाले प्राकृतिक वनमा रहेका विभिन्न किसिमका रुख तथा वनस्पति र जैविक विविधताको पुनरुत्पादन हुन नसक्ने अवस्थाको सृजना भई जैविक विविधतामा गम्भीर नकारात्मक असर पर्ने देखिएको लगायतका व्यवस्थापकीय समस्याहरु अध्ययन प्रतिवेदनमा उल्लेख गरिएको छ ।

चुरे क्षेत्रलाई भौगर्भिक र पर्यावरणीय दृष्टिले निकै जोखिम क्षेत्र मानिन्छ । चुरेलाई जोगाउन भनेर नेपाल सरकारले २०७१ असार २ मा चुरे वातावरण संरक्षण क्षेत्र घोषणा गरको थियो । वन तथा वातावरण मन्त्रालयले मिति २०७१ कार्तिक १ मा चुरे वातावरण संरक्षण क्षेत्रमा रहेका सामुदायिक वन उपभोक्ता समूहको आन्तरिक माग आपूर्तिका लागि वन व्यवस्थापन कार्ययोजनामा उल्लेख भए अनुसार ढलापडा काठ दाउरा संकलन गर्ने तथा सो प्रयोजनका लागि चुरे क्षेत्रमा रहेको वन क्षेत्रमा बाटो बनाउन नपाईने निर्णय गरेको थियो । तर त्यहि चुर क्षेत्रमै बैज्ञानिक वन व्यवस्थापनको नाममा रुखहरु काट्ने र काठ ओसार्न जथाभावी सडक बनाउने काम भैरहको पाइन्छ । तराई र चुरे क्षेत्रमा रहेको प्राकृतिक वनमा वैज्ञानिक वन कार्यक्रम लागू गरी प्राकृतिक वन विनाश गरिएकोले वन्यजन्तुको वासस्थान लोप हुन गई संकटापन्न वन्यजन्तुहरु लोप भएको, मानव-वन्यजन्तु द्वन्द्वमा व्यापक वृद्धि भएको र रुख कटान भएका क्षेत्रहरुमा अतिक्रमण र बसाई-सराई भई सामाजिक द्वन्द्व समेत वृद्धि भैरहेको छ । वनको विशिष्टता,क्षमता र जैविक विविधताको वेवास्ता गरि वनमा प्लटहरु बनाएर रुखहरु काट्ने गरिएकोले विगतमा संरक्षणकर्मिहरुले आशंका गरे अनुसार नै काठ प्रजाति बाहेक अन्य प्रजातिका वनस्पतिहरु मासिएको, जैविक करिडोरमा समेत कार्यक्रम लागु गर्दा वन्यजन्तुहरु नासिएका र अन्यत्र सरेका, जलाधार क्षेत्र र सिमसार क्षेत्र विनाश भएका कुराहरु अध्ययन प्रतिवेदनमा उल्लेख छ । स्थलगत अध्ययनबाट वैज्ञानिक वन व्यवथापन लागू गर्नमा विभिन्न स्वार्थ समुहहरु लागेकोले यसको उद्देस्य भन्दा बाहिर गएर काम भएकोल यो कार्यविधि र कार्यक्रम नै खारेज गर्नुपर्ने सार्वजनिक लेखा समितिले सुझाव दिएको हो ।
समितिका अध्ययन प्रतिवेदनहरुले वैज्ञानिक वन व्यवस्थापनको औचित्य माथि नै प्रश्न उठाएपछि प्रतिबेदनको पक्ष विपक्षमा आवाजहरु उठिरहेका छन् । खासगरी वन प्रशासन र काठ व्यापारीहरु कार्यक्रम खारेज गर्नुपर्ने कुराले रुष्ट देखिएका छन् भने सामुदायिक वनका उपभोक्ताहरु खुशी देखिएका छन् । सामुदायिक वनहरुले प्रभावकारी ढंगले काम गरिरहेको समयमा वन प्रशासक र काठ व्यापारको स्वार्थमा चोर बाटोबाट बैज्ञानिक वन व्यवस्थापन कार्यक्रम ल्याईएको थियो । दिगो वन व्यवस्थापनको मोडेल अनुसार यो कार्यक्रम ल्याईएको भएपनि संलग्न पक्षहरु रुख काटेर बेच्नमा मात्र तल्लिन भएकोले कार्यक्रमबाट लाभ भन्दा हानी बढी देखिएको छ । वन व्यवस्थापनको यो कार्यक्रमलाई यसैगरी अगाडी बढाईरहने हो भने नेपालले धेरै आर्थिक, जैविक र वातावरणीय क्षति बेहोर्नुपर्न निश्चित छ । सरकारले जतिसक्दो छिटो यो कार्यक्रमको पुनरावलोकन गरि जैविक विविधताको संरक्षण र सबै वन पैदावारको दिगो उपयोग गर्नेगरि स्थानीय आवस्यकता र औचित्यतामा आधारित दिगो वन व्यवस्थापन कार्यक्रम ल्याउन ढिलाई गर्नु हदैन ।

yrkandel@gmail.com

# Pathways to Sustainable Forest Management

Yubaraj Kandel

*Abstract*

The government has projected that between 6 to 120 million cubic feet of wood can be sustainably produced, providing employment for approximately 1.3 million individuals annually, and generating 20 to 40 billion rupees in revenue for the state. The Scientific Forest Management program was initiated in 2071, despite facing numerous controversies surrounding forest protection. This program was particularly sensitive and crucial, given its implementation in vital forest areas. Since its inception, Scientific Forest Management has been a key focus in the annual policies and programs of the Nepalese government. Initially introduced in compart and partnership forests, this management system has rapidly expanded to include community forests. Unfortunately, the indiscriminate cutting of trees under this program has led to the destruction of unique forest ecosystems, resulting in the loss of non-wood species, wildlife displacement, and the degradation of biological corridors, watershed areas, and wetlands. The implementation of scientific forest programs in the Terai and Chure regions has further exacerbated these issues, leading to the disappearance of wildlife habitats, increased human-wildlife conflicts, and social tensions arising from encroachment and migration into deforested areas. It is evident that the current program is causing more harm than good. Nepal stands to suffer significant economic, biological, and environmental consequences if this unsustainable approach continues. It is imperative for the government to reassess the program promptly and develop a sustainable forest management strategy that aligns with local needs, promotes biodiversity conservation, and ensures the sustainable utilization of forest resources.

# सामुदायिक वनमा वैज्ञानिक वन व्यवस्थापन

Scientific Forest Management in Community Forest

युवराज कंडेल

*वैज्ञानिक वन व्यवस्थापन गर्ने क्रममा काटिने रुखबाट केहि समयसम्म ठुलो मात्रामा आम्दानि हुने भएकोले वन प्रशासक, वनका ठेकेदार र केहि स्थानीय व्यक्तिहरुले यसलाई निकै राम्रो कार्यक्रम भनिरहेको देखिन्छ । रुख काट्न थालेपछि बैज्ञानिक वन व्यवथापनको नाममा बढी कमाइ हुने भएपछी सामुदायिक वनका पदाधिकारीहरु पनि आफ्नो पालामा बढी भन्दा बढी आम्दानि गर्ने दौडमा लागेका छन् । वन प्राकृतिक श्रोत भएकोले वनलाई प्राकृतिक रुपमै हुर्कन दिनुपर्छ र प्राकृतिक रुपबाटै हुर्किएको वनमा नै आर्थिक उपार्जनका विकल्पहरु खोजिनु पर्दछ । वनबाट आम्दानी लिने नाममा दीर्घकालिन प्रभावलाई ख्याल नगरी रुख काट्ने र रुख हुर्काउने काममा जानी नजानी सामुदायिक वन समुहहरु संलग्न भैरहेका छन्, जसले सामुदायिक वनको उद्धेश्य नै विचलित भैरहेको छ । समुहको आम्दानि वृद्धि गर्ने नाममा जैविक विविधता सफाया गर्दै सिमित प्रजातिका विरुवाहरु हुर्काउन खोज्नु र बहुमुल्य रुखहरु काटेर बेच्नु अदुरदर्शिता मात्र नभएर वातावरणिय अपराध नै हो ।*

वन व्यवस्थापनमा सरकारी निकायहरु असफल भएपछि समुदायलाई नै वन व्यवस्थापनको जिम्मा लगाउन थालेको करिब ३ दशक भएको छ र यसले सकारात्मक नतिजाहरु समेत दिन थालेको छ । पातिलिएका वनहरू समुदायको पहलमा वन संरक्षण सुरु भएपछि हराभरा हुन थालेका छन र थोरै भएपनि आम्दानि गरि स्थानीय विकास र आयआर्जनमा सघाउन थालेका छन् । सामुदायिक वन कार्यक्रम विस्तारै सफलता तर्फ लागेको बेलामा सरकारले वैज्ञानिक वन व्यवस्थापनको कार्यक्रम अघि सारेको छ । वैज्ञानिक वन व्यवस्थापनको अवधारणा वि.स.२०५७ सालमा सुरु भएको हो । नेपालमा नै पहिलो पटक वनको उपयोगीता संगै त्यसको वैज्ञानिक तवरले व्यवस्थापन गरी आर्थिक आम्दानीको पाटो दरिलो बनाउनको लागि आर्थिक बर्ष २०६८/०६९ कपिलवस्तुको तिलौराकोट साझेदारी बनमा बैज्ञानिक वन व्यवस्थापनको सुरुवात भएको मानिन्छ । सुरुमा सरकारले साझेदारी वन व्यवस्थापन कार्यक्रम लागू भएका नौ जिल्लाका १९ वनमा रूख काट्ने कार्यक्रम तय गरेको थियो । बारामा सहजनाथ र हलखोरिया, पर्सामा सबैया र विन्ध्यवासिनी, रौतहटमा रंगपुर, जंगल चाहिया र लामलाल वृन्दावन , महोत्तरीमा बाँकेमहरा, टुकेश्वरनाथ, गढन्ता, बर्दीबास, सर्लाहीमा फूलजोर बाबा र लालबन्दी, कपिलवस्तुमा लिलौराकोट, गौतमबुद्ध र कपिलवस्तु साझेदारी वन , नवलपरासीमा बुद्ध शान्ति र कैलालीमा बार साझेदारी वनको ५५ हजार वनमा सरकारले वैज्ञानिक वन व्यवस्थापनका नाममा रूख काट्न थालेको थियो । सुरुमा नमुनाको रुपमा सुरु गरिएको भएपनि मिति २०७१/०७/२७ मा नेपाल सरकार सचिव स्तरकोबाट हतारहतार वैज्ञानिक वन व्यवस्थापन कार्यविधि २०७१ स्वीकृत गरि लागू गरेपछि वैज्ञानिक वन व्यवस्थापनलाई अभियानकै रुपमा देशव्यापी रुपमा अघि बढाइएको छ । साझेदारी वन पछि क्रमश सामुदायिक वनमा सरकारले यसको अभ्यास थालिसकेको छ ।

**बैज्ञानिक वन व्यवस्थापन के हो ?**

सामाजिक ,आर्थिक तथा वातावरणीय हिसाबले उपयुक्त र वनले प्रदान गर्ने वस्तु तथा सेवाको निरन्तरता वा बृद्धि हुनेगरी गरिने वन व्यवस्थापन नै दिगो वन व्यवस्थापन वा बैज्ञानिक वन व्यवस्थापन हो । नेपालमा सफलताको उदाहरणका रूपमा रहेको सामुदायिक वन संरक्षणमुखी मात्रै भएको र आम्दानी नदिएको भन्दै सरकारले नयाँ व्यवस्थापन ढाँचामा जानुपर्ने धारणा सार्वजनिक गरेको हो । वैज्ञानिक वन व्यवस्थापनका विज्ञका अनुसार यस प्रणालीमा ३० सेमिसम्म व्यास भएका रूखहरूलाई एड्भान्स ग्रोथ अर्थात् बालीका रूपमा कायम गरिन्छ र पुनरुत्पादन ( रि-जेनेरेसन)को सुनिश्चित हुनेगरी उमेर पुगेका बूढा रूखहरूलाई क्रमश हटाउँदै लगिन्छ । यसका लागि छनोट भएको वनलाई विभिन्न फेलिङ सिरिज (कम्पार्टमेन्ट) र आवधिक खण्ड ( सबकम्पार्टमेन्ट)मा विभाजन गरिन्छ । यसैका माध्यमबाट वनको दिगोपना र वार्षिक रूपमा उत्पादन हुने काठ दाउराको परिमाण निर्धारण हुन्छ । वैज्ञानिक वन व्यवस्थापनमा वन क्षेत्रलाई विभिन्न खण्डमा विभाजन गरी पुराना रूखहरू काट्ने र नयाँ बिरुवाहरू उत्पादन गर्ने गरिन्छ । बैज्ञानिक वन व्यवस्थापन अनुसार कार्य गर्ने हो भने ८० वर्ष भित्रमा हाल भएका सबै रुखहरु काटिन्छन् र त्यसको ठाउँमा नया रुखहरु हुर्किसक्नेछन् । बैज्ञानिक वन व्यवस्थापनका पक्षधरहरुको अनुसार बैज्ञानिक वन व्यवस्थापन गर्दा वनको हैसियतमा सुधार आउने, वातावरणीय लाभ प्राप्त हुने , स्थानीय रोजगारी सिर्जना हुने , वन पैदावारको निरन्तर आपूर्ति हुने, धेरै राजस्व प्राप्त हुने र वन संगठनहरुको छवि सध्रने र आपसी खिचातानी घट्ने जस्ता प्रत्यक्ष र अप्रत्यक्ष फाइदाहरु प्राप्त हुन्छन् । केहि महत्वपूर्ण प्रजातिको वन जस्तै तराईको वन, खोटे सल्लाको वन, उत्तिसको वन र कटुस चिलाउनेको वन व्यवस्थापन गर्न सके बार्षिक ६-१२ करोड घनफिट काठ दीगो रुपमा उत्पादन हुन सक्ने , ५ लाख ८५ हजार देखि १२ लाख ९५ हजार मानिसले बर्षैभरी रोजगारी पाउन सक्ने र वन व्यवस्थापनले काठ दाउराको आपूर्ति सहज गर्नका साथै प्रशस्त राजश्व आर्जन -अनुमानित १०० अर्व रुपैया प्रति बर्ष) भई राष्ट्रिय अर्थतन्त्रमा उल्लेखनिय योगदान पुग्ने, रोजगारी सृजना हुने र वनको हैसियतमा समेत सुधार हुने वन प्रशासनको दावी छ ।

सामुदायिक वनमा भैरहेको अभ्यास

वन अनुसन्धान तथा सर्वेक्षण विभागका अनुसार प्रदेश नं ५ मा १९ लाख ३२ हजार ६० हेक्टर क्षेत्रफलमध्ये नौ लाख ७४ हजार ३८० (५०.४३ प्रतिशत) वन रहेको छ । प्रदेश नम्बर ५ मा ३ हजार नौ सय ८९ सामुदायिक वन छन् । प्रदेश नम्बर पाँचका १२ जिल्लामा रहेका १ सय १२ वटा वनको वैज्ञानिक व्यवस्थापन गर्न सुरु गरिएको छ । सातवटा प्रदेशहरु मध्ये ७ नम्बर प्रदेश वनजंगलमा धनि रहेको छ । प्रदेश नं ७ मा १९ लाख ७७ हजार ३७० हेक्टर क्षेत्रफलमध्ये ११ लाख ४६ हजार ११० हेक्टर अर्थात् ५७.९६ प्रतिशत जंगल छ । प्रदेश नम्बर ७ मा आर्थिक बर्ष २०६६/०६७ बाट वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम सुरु गरिएकोमा यहाको ११ लाख ४६ हजार हेक्टर वन मध्ये अहिले सम्मा ७ हजार २ सय हेक्टर क्षेत्रफलमा मात्रै वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम लागु गरिएको छ । श्रोतहरुका अनुसार वैज्ञानिक वन व्यवस्थापन लागु भएको ७ हजार २ सय मध्ये ५ हजार ४ सय ७१ हेक्टर क्षेत्रफल कैलालीको मात्रै हो । वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम सुरु गरेक ८ वर्ष वितिसक्दा अहिले सम्म कैलाली, कञ्चनपुर, डोटी, अछाम र बाजुराका २७ वटा सामुदायिक वनको केहि भागमा मात्रै सञ्चालन गरिएको हो । कैलालीका १९, बाजुराका ४, कञ्चनपुरका २ तथा डोटीका ३ र अछाम जिल्लाका २ वटा डडेलधुरामा ३ बैतडीमा २ सामुदायिक वनमा वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम लागु गरिएको हो । कर्णाली प्रदेशमा ३० लाख ६७ हजार ८१० क्षेत्रफलमध्ये ११ लाख ८३ हजार ४०० (३८.५७ प्रतिशत) वन छ । रुकुम बाहेकका कर्णाली प्रदेशका अन्य जिल्लामा २ हजार ३०५ वटा सामुदायिक वन समुहहरु रहेका छन् । यहाँका सालका रुखहरु धेरै भएको सल्यान, दैलेख र सुर्खेतका सामुदायिक वनहरुमा वैज्ञानिक वन व्यवस्थापन सुरु गरिएको छ । आ.व. २०७३/७४ सम्मको तथ्याकं हेर्दा ४० वटा जिल्लाका २८५ वटा सामुदायिक वनमा वैज्ञानिक वन ब्यबस्थापन पद्धति अपनाएर

कार्ययोजना कार्यान्वयन भएको छ । गत आर्थिक वर्षसम्मको तथ्यांक हेर्दा वैज्ञानिक वन व्यवस्थापन अपनाएका सामुदायिक वनहरुमध्ये ५ नम्बर प्रदेशमा २१ प्रतिशत, कर्णाली प्रदेशमा ७ प्रतिशत र ७ नम्बर प्रदेशमा ४.२ प्रतिशत रहेको पाइन्छ ।

**कति आवस्यक छ वैज्ञानिक वन व्यवस्थापन?**

वन प्रशासनले वैज्ञानिक वन व्यवस्थापनलाई सुनको अण्डा दिने कुखुराको रुपमा प्रस्तुत गरेको भएपनि साझेदारी वनमा यस्तो व्यवस्थापनलाई लागु गर्ने बेलामा नै विवादमा तानिएको थियो । तत्कालिन व्यवस्थापिका संसदमा समेत वैज्ञानिक वन व्यवस्थापन सुरु गर्ने कुराको विरोध भएपछि संसदको वातावरण समितिले २०७१ मंसिर १५ गते निर्णय गरि बेज्ञानिक वन व्यवस्थापनमा रोक लगाएको भएपनि पछि वन प्राविधिक र विज्ञको दवावमा कार्यविधि ल्याइएको थियो ।सरकारी र साझेदारी वनमा मात्र वैज्ञानिक वन व्यवस्थापन लागु गरेर रुख हुर्काउने नाममा रुख काट्न थालेपछि संरक्षणकर्मिहरुले विरोध गर्दै आएका छन् । वन मन्त्रालयले जंगलका काठपात बेचेर राज्यलाई आम्दानी हुने दाबी गर्दै लागू गरेको वैज्ञानिक वन व्यवस्थापन कार्ययोजनाबाट राज्यलाई अहिलेसम्म एक पैसा आम्दानी नदेखिएकौ साथै कार्बन ब्यापारबाट राज्यलाई आम्दानि र वन क्षेत्रबाट आय आर्जन तथा रोजगारी सिर्जना हुन नसकेको महालेखा परीक्षकको ५५ औं वार्षिक प्रतिवेदनले औल्याउनुले पनि वैज्ञानिक वन व्यवस्थापन कति प्रभावकारी रहेछ भन्ने देखाउछ ।

वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम लागुभएको २ वर्षमै सर्खेतमा रहेका १७ वटा सामुदायिक वनबाट ७० हजार चार सय २९ क्युफिट काठका साथै ९८ चट्टा दाउरा विक्री वितरण गरिएको जिल्ला वन कार्यालय सुर्खेतलाइ उद्धृत गर्दै समाचारहरु आएका छन् । रुपन्देही जिल्लामा रहेका कहलिएका सामुदायिक वन समूहमा रुख कटानको रफ्तार पनि निकै छ । सामुदायिक वनमा रुख कटानको अवस्थालाई हेर्दा सामुदायिक वनको मर्म भन्दापनि रुख काटेर काठ दाउरा बेच्ने र भविस्यमा पनि काठपात निकाल्न सकिने खालका रुखहरु मात्र हुर्काउन खोजिएको देखिन्छ । सामुदयिक वन उपभोक्ता महासंघले पनि सामुदायिक वन समुहमा वैज्ञानिक वन्न व्यवस्थापन समुदायको स्वार्थमा नभई वन कर्मचारीको स्वार्थमा आएको र वन समुहका केहि ब्यक्तिहरुलाई उचालेर रुख काट्न लगाएर ठुलो रकम हात पारिरहेको आरोप लगाइरहेको छ । सरोकारवालाहरुको आरोप र वनमा भैरहेका अभ्यासलाई हेर्दा सामुदायिक वनमा वैज्ञानिक वन व्यवस्थापनको नाममा अदुरदर्शी खेल भैरहेको आशंका गर्न मिल्ने ठाउँहरु प्रसस्त देखिन्छन् ।

वैज्ञानिक वन व्यवस्थापन लागु गरिएका तराईका सामुदायिक वनहरुका कार्ययोजनालाई हेर्दा काठपात दिने रुख हुर्काउदै काट्दै जाने कुरालाई प्राथमिकता दिएको देखिन्छ । आम्दानि गर्ने मात्र कुरालाई ध्यान दिने भएकोले पहिले साल र अन्य काठ प्रजातिका  रुखहरु काटिने छन र पुराना रुखहरु सकिएपछि नयाँ सालका रुखहरु हुर्काउनतर्फ ध्यान दिइनेछ । यसका लागि अन्य विरुवाहरु हटाएर भएपनि काष्ठ प्रजातिका रुखहरु  छिटो हुर्काउने प्रयास गरिनेछ । यस्तो कार्यले बैज्ञानिक वन व्यवस्थापनको एक चक्र पुरा हुदा कार्यक्रम लागु भएको वनमा साल बाहेक अरु प्रजातिका वनस्पतिहरु नासिएर जानेछन् । साल, असना, खयर हुर्काउने नाममा तराइका धेरै वनस्पतिहरु लोप हुदै जाने मात्र नभई वनको पारिस्थितिक पद्धति विनास हुनेछ । वन व्यवस्थापनका नाममा बुट्यान र झाडी विनास हुदा वन्यजन्तुको बासस्थान र आहारा विनास हुनेछ । वनमा आहारा नपाएपछि वन्यजन्तुहरु नासिनु वा वस्तीमा पस्नुको विकल्प रहनेछैन । वनमा काठ प्रजातिका रुखहरु हुर्काउने काम भैरहदा स्थानीय वासिन्दाका आवस्यकता बनेका घासपात, जडिबुटी र चरिचरणहरु ओझेलमा पर्ने देखिन्छ । वनमा स्थानीय वासिन्दाहरुको पहुँच विस्तारै कम हुदै जानेछ र सामान्य वन पैदावारको लागि पनि स्थानीय बासिन्दाहरुले चर्को मुल्य तिर्नुपर्ने हुनेछ ।

वैज्ञानिक वन व्यवस्थापन गर्ने क्रममा काटिने रुखबाट केहि समयसम्म ठुलो मात्रामा आम्दानि हुने भएकोले वन प्रशासक, वनका ठेकेदार र केहि स्थानीय व्यक्तिहरुले यसलाई निकै राम्रो कार्यक्रम भनिरहेको देखिन्छ । रुख काट्न थालेपछि वैज्ञानिक वन व्यवथापनको नाममा

बढी कमाइ हुने भएपछी सामुदायिक वनका पदाधिकारीहरु पनि आफ्नो पालामा बढी भन्दा बढी आम्दानि गर्ने दौडमा लागेका छन् । वन प्राकृतिक श्रोत भएकोले वनलाई प्राकृतिक रुपमै हुर्कन दिनुपर्छ र प्राकृतिक रुपबाटै हुर्किएको वनमा नै आर्थिक उपार्जनका विकल्पहरु खोजिनु पर्दछ । वनबाट आम्दानी लिने नाममा दीर्घकालिन प्रभावलाई ख्याल नगरी रुख काट्ने र रुख हुर्काउने काममा जानी नजानी सामुदायिक वन समुहहरु संलग्न भैरहेका छन्, जसले सामुदायिक वनको उद्धेश्य नै विचलित भैरहेको छ । समुहको आम्दानि वृद्धि गर्ने नाममा जैविक विविधता सफाया गर्दै सिमित प्रजातिका विरुवाहरु हुर्काउन खोज्नु र बहुमुल्य रुखहरु काटेर बेच्नु अदुरदर्शिता मात्र नभएर वातावरणिय अपराध नै हो । सामुदायिक वन समूह गठन गरिनुको मुख्य उद्धेश्य स्थानीय उपभोक्ताका आवस्यकताहरु पुरा गर्दै दिगो वातावरण संरक्षण गर्नु हो । यो कामबाट विचलित भएर वनलाई तत्कालिन आम्दानीको बनाउन खोज्नु हुदैन । यसतर्फ वनका अगुवा र वनसँग नजीक रहेका स्थानीय तथा प्रदेश सरकारहरुले बेलैमा ध्यान दिनु जरुरि छ ।

*बुटवल टुडे, ३० अगस्त २०१८*

# Scientific Forest management in Community Forest

Yubaraj kandel

*Abstract*

Community forest officials are currently focused on maximizing profits through scientific forest management practices. However, in their pursuit of financial gain, they may be inadvertently causing harm to the environment. By prioritizing short-term profits over long-term sustainability, these officials are straying from the core principles of community forestry. It is evident that many community forestry groups are engaging in indiscriminate tree cutting and cultivation practices, solely for the purpose of generating income. Rather than fostering a healthy forest ecosystem, these actions are leading to the depletion of valuable resources and the destruction of wildlife habitats. In regions where scientific forest management has been implemented, there is a concerning trend of prioritizing the growth and harvesting of sapwood-producing trees, such as Sal.

This narrow focus on commercial tree species is resulting in the eradication of other plant species, which are essential for maintaining biodiversity and supporting local wildlife populations. Furthermore, the indiscriminate clearing of undergrowth and shrubs is disrupting the natural balance of the forest ecosystem, depriving wild animals of their habitat and food sources. This could potentially drive wildlife into human settlements, leading to conflicts and endangering both humans and animals. It is crucial for community forest groups to remember their primary objective of promoting sustainable environmental practices while meeting the needs of local communities. Leaders in the forestry sector, as well as local and state governments, must intervene to ensure that forest management practices are aligned with long-term environmental conservation a harmonious coexistence between humans and nature. goals. By prioritizing the preservation of forest ecosystems and the well-being of local residents, we can ensure

# वन्यजन्तु संरक्षणका चुनौतीहरु

## Challenges of wildlife conservation

युवराज कंडेल

*वन तथा कृषि प्रणालीको संचालन, सौन्दर्यता र पर्या–पर्यटनमा महत्वपूर्ण भूमिका खेलेका वन्यजन्तुहरु मानिसका अमुल्य सम्पत्ति हुन् । चोरि शिकारले यी सम्पदाहरु संकटमा परिरहेका छन् । अज्ञानताको कारणले गरिव र विपन्न वर्गका मानिसहरुले तस्करहरुको स्वार्थमा वन्यजन्तु शिकार गरिरहेका छन् । चोरि शिकारलाई रोक्न र समुदायको आवस्यकता पुरा गर्नको लागि वन्यजन्तुको लागि वनमाथिको निर्भरता हटाउनको लागि सबैभन्दा पहिले वन नजिकका वासिन्दाहरुलाई आयआर्जनका स्थायी विकल्पहरु उपलब्ध गराउनु पर्छ । अहिलेको चुनौती भनेको वन्यजन्तुमा भैरहेको निर्भरतालाई घटाउदै यिनीहरुको संख्या विस्तार गर्नु हो । मानिस र समुदायलाई कारवाही गरेर र वन प्रवेशमा रोक लगाएर मात्र वन्य जन्तु संरक्षण गर्न सकिदैन ।*

जीवजन्तुहरु मध्ये घरपालुवा बाहेक जुनसुकै जातिको स्तनधारी जन्तु , पंक्षी , घस्रिने जन्तु ( रेप्टायल्स), माछा, भ्यागुता जाति (एम्फिवियन्स) र कीरा फट्यांग्रा  र फुल पार्ने जन्तुको फुल समेतलाई "वन्यजन्तु" भनि वन्यजन्तु संरक्षण ऐन २०२९ले परिभाषित गरेको छ । अहिले सम्म विस्वमा १७ लाख २९ हजार सात सय प्रजातिका जीवजन्तु र वनस्पतिहरु पहिचानं भएका छन् । नेपाल वातावरण प्रतिवेदन २०१९ का अनुसार विस्वमा हालसम्म पत्ता लागेका वनस्पतिहरुका प्रजातिहरू मध्ये ३.३ प्रतिशत अर्थात १२ हजार ४८० प्रजतिहरु र जीवजन्तु प्रजातिहरू मध्ये १.१ प्रतिशत ( ११,७०६ प्रजाति ) नेपालमा पाइन्छन । सानो क्षेत्रफलमा यति धेरै प्रजातिहरू पाइएकोले जैविक विविधताको दृष्टिमा नेपाल विस्वमा २५ औं र एशियामा एघारौं सम्पन्न राष्ट्र मानिन्छ ।

हिमाल, पहाड , तराइ अनि नदि र पहाडले बनाएका खोच, गल्छी, उपत्यका र बेसिले नेपाललाई जैविक विविधताको फैलावटमा महत्वपूर्ण भूमिका खेलेका छन् । जीवजन्तुको ठुलो हिस्सा वन जंगलमा नै रहेको छ । सबै वनमा कुनै न कुनै वन्यजन्तु प्रजातिहरू पाइने भएपनि धेरै वन्यजन्तुहरु राष्ट्रिय निकुन्ज, वन्यजन्तु आरक्ष र संरक्षण क्षेत्र भित्र रहेका छन् । वन्यजन्तु संरक्षण ऐन २०२९ ले आसामी रातो बांदर,सालक (२ प्रजाती) हिसपिड खरायो ,सोंस ,ब्वांसो, हिमाली रातो भालु ,हाब्रे (रेडपाण्डा) , पाटे शिलु(लिङ्गसाङ) ,हुंडार ,चरी बाघ (लेपर्ड क्याट) ,लिंक्स ,ध्वांसे चितुवा ,बाघ ,हिउं चितुवा ,जङ्गली हात्ती ,गैंडा ,पुड्के बदेल, कस्तुरी मृग ,बाह्रसिंगा ,गोरवड्सन , योक नाक ,अर्ना ,नायन ,कृष्णसार ,चौका , चीलु गरि २७ वटा स्तनधारी जीव ; कालो स्टर्क ,सेतोस्टर्क ,सारस ,चीर ,डांफे,मोनाल ,खर मुजुर सानो खर मुजुर ठुलो धनेश गरि नौ वटा चरा र अजिङ्गर,घडियाल गोही,सुन गोहोरो गरि तीनवटा घस्रने जातका जन्तु (रेप्टायल्स)लाइ संरक्षित वन्यजन्तुको सुचिमा राखेको छ । त्यसैगरी आइयुसियन ( विश्व संरक्षण संघ)ले नेपालका ८४ प्रजातिका जिवजन्तुलाई संकटापन्य सुचिमा राखेको छ ।

पर्यावरणीय र सामाजिक–आर्थिक दृष्टिमा वन्यजन्तुहरु निकै महत्वपूर्ण मानिन्छन । वन्यजन्तुहरुले वनको पारिस्थितिक प्रणालीलाई

संचालन गरिरहेका हुन्छन । वनको संरक्षण र विस्तारमा वन्यजन्तुहरूको भूमिका ठुलो हुन्छ । वन्य वनस्पति र वन छेउछाउका खेतबारिहरुमा लगाइने बालीहरुमा परागसेचन गरि वनस्पति उत्पादकत्व वृद्धि गर्न चरा, किराफट्यांग्रा, मौरीले सहयोग पुऱ्याएका हुन्छन । बाघ , गैडा, अजिंगरजस्ता जीवले वन संरक्षणमा सहयोग गर्दछन । वन्यजन्तुले वनको प्राकृतिक सौन्दर्यताको रक्षा गर्दछन र पर्यटनमा सघाउँछ । नेपाल आउने अधिकांश पर्यटकहरु जंगल सफारी, पदयात्रा गरि गैडा, बाघ, हात्ती, चरा लगायतका जीवजन्तुहरु अवलोकनमा आफुलाई केन्द्रित गर्ने भएकोले नेपालमा पर्यटन विकासमा ठुलो मद्धत पुगिरहेको छ । मुलतः हिमाली र तराईका आदिवासिहरुको परम्परा र जीविकोपार्जन वन्यजन्तुसंग पनि सम्बन्धित भएको देखिन्छ । वन्य्जन्तुहरुलाई मारेर वा तिनीहरुका अवयवहरु संकलन गरेर खाने, विक्री गर्ने कार्य मानव सभ्यताको विकासक्रम संगै चलिरहेको छ । जंगलका चरा, खरायो, बँदेल. हरिण र माछा लगायतका जीवहरु संकलन गर्ने परम्परागत अहिलेपनि नेपालका गाउघरमा चलिरहेकै छ ।

विस्वब्यापी रुपमै अहिले वन्यजन्तुहरु संकटमा परिरहेका छन् । यसो हुनुको मुख्य कारण चोरि शिकारी, वन विनाश , तिब्र शहरीकरण र प्रदुषणलाई जिम्मेवार मानिन्छ । स्वदेशी र विदेशी बजारमा वन्यजन्तुका विभिन्न अंगहरुको ठुलो माग भएकोले विस्वभरी वन्यजन्तुहरुको शिकार गर्ने कार्य भैरहेको छ । संरक्षित क्षेत्रमा वन र सुरक्षा निकायको उपस्थितिले पछिल्ला वर्षहरुमा शिकारमा केहि कमि आएको भएपनि संरक्षण क्षेत्र भन्दा बाहिर र सुरक्षा निकायको पहुँच नभएको ठाउमा व्यापारिक र घरायसी प्रयोजनको लागि वन्यजन्तुको शिकार भैरहेको छ । पछिल्लो समयमा नेपालमा चोरी शिकार भन्दा कमजोर वन व्यवस्थापन, प्रदुषण, अव्यवस्थित विकास निर्माण कार्य र जलाधार क्षेत्रको विनाशले वन्यजन्तु विनाशमा मुख्य भूमिका खेलेको छ । सुकुम्बासीको नाममा जंगल विनाश भएर जैविक मार्ग टुक्रनु, वैज्ञानिक वन व्यवस्थापनको नाममा गैह्र काष्ठ वनस्पति, वन्य फलफूलका विरुवा र कन्दमूलहरु तथा मिश्रित प्रजातिका झाडिहरु निर्मूल पार्ने क्रम बढेकोले वन क्षेत्रमा वन्यजन्तुको लागि चरन, आहारा, आश्रय तथा क्रिडास्थलको अभाव हुदै गएको छ । रुख काटछाँटको नाममा वनमा मानिसको निरन्तर चहलपहल भैरहने र हरेक वर्ष वनमा दोहिरिने वनडढेलोको कारणले वन्यजन्तुको प्रजनन र वृद्धिमा प्रतिकुल असर पुगी वन्यजन्तुको संख्या द्रुत रुपमा घट्दै गएको छ ।

अचेल वन छेउछाउका खेतवारीमा किटनाशक विषादीको प्रयोग निर्वाध बढिरहेको छ भने शहरी क्षेत्र नजिकका वनहरू अघोषित डम्पिंग साइट बनिरहेका छन् । वनमा फ्याँकिएको फोहर वर्सादको पानीले वनमा छरिदा चरनक्षेत्र असुरक्षित बन्दै गएको छ । बाँच्नको लागि खेतवारीमा विषादीयुक्त अन्न, विषादीले मरेका साना जिव र वनको फोहर समेत खाँदा वन्यजन्तुहरु मर्ने क्रम बढिरहेको छ । पछिल्लो समयमा भूक्षयले वन क्षेत्रमा भएका पोखरी, ताल, खोल्सा र खोलाहरु पुरिदै गएका छन् । यस्ता कार्यहरुले वन क्षेत्रमा पानीको अभाव हुन् गई वन्यजन्तुको आहार विहारमा प्रतिकुल असर परिरहेको छ । वनमा सुरक्षित वासस्थान, आहारा र पानीको कमि भएपछि वन्यजन्तुहरु वन छेउछाउका वासिन्दाको घर, गोठ र खेतबारिमा पस्न थालेका छन् । वन्यजन्तुले मानिसलाई आक्रमण गर्ने, पशुपन्छी मार्ने र बालि नष्ट गर्ने काममा बृद्धि हुदै जादा पछिल्लो समयमा वन्यजन्तु र मानिस विचका द्वन्दहरु समेत बढिरहेका छन् । खेतवारीमा आएका वन्यजन्तुलाई आक्रमण गरेर घाइते बनाउने, मार्ने कामले तिब्रता पाएको छ । वन्यजन्तु संरक्षण ऐन २०२९ को दफा २६ र वन ऐन २०७६को दफा ४९ ले गैरकानूनी किसिमले वन्यजन्तु मार्न र वनमा शिकार खेल्न नपाइने कुरा उल्लेख गरेको छ । वन्यजन्तु मार्न नपाइने कानूनी व्यवस्था भएपनि नेपालमा वन्यजन्तु मारिने क्रम रोकिएको छैन ।

वन तथा कृषि प्रणालीको संचालन, सौन्दर्यता र पर्या–पर्यटनमा महत्वपूर्ण भूमिका खेलेका वन्यजन्तुहरु मानिसका अमुल्य सम्पत्ति हुन् । चोरि शिकारले यी सम्पदाहरु संकटमा परिरहेका छन् । अज्ञानताको कारणले गरिव र विपन्न वर्गका मानिसहरुले तस्करहरुको स्वार्थमा वन्यजन्तु शिकार गरिरहेका छन् । चोरि

शिकारलाई रोक्न र समुदायको आवस्यकता पुरा गर्नको लागि वन्यजन्तुको लागि वनमाथिको निर्भरता हटाउनको लागि सबैभन्दा पहिले वन नजिकका वासिन्दाहरुलाई आयआर्जनका स्थायी विकल्पहरु उपलब्ध गराउनु पर्छ । अहिलेको चुनौती भनेको वन्यजन्तुमा भैरहेको निर्भरतालाई घटाउदै यिनीहरुको संख्या विस्तार गर्नु हो । मानिस र समुदायलाई कारवाही गरेर र वन प्रवेशमा रोक लगाएर मात्र वन्य जन्तु संरक्षण गर्न सकिदैन । जसको लागि व्यक्तिगत वा सामुदायिक रुपमा वन्यजन्तुको पालन र उपयोग गर्न पाउने व्यवस्था गर्नु पर्छ । वन्यजन्तु पाल्न पाउने गरि सरकारले व्यवसायिक रपमा वन्यजन्तु पालन, प्रजनन तथा उपयोग सम्बन्धि मापदण्ड , २०८० ल्याई सकेको छ । यो मापदण्डले रतुवा, चित्तल, बँदेल लगायतका ७ किसिमका स्तनधारी, सर्प,मगर गोही, कछुवा ( संकटापन्य र अति संकटापन्य बाहेक), पाहा भ्यागुता र मयुर, कालिज, सुगा, मैना लगायतका २१ प्रजातीका चराहरु पालन, उपयोग तथा बेचबिखन गर्न पाउने व्यवस्था गरेको छ । यो मापदण्डलाई नागरिकस्तरसम्म जानकारी दिन र कार्यान्वयनमा सहजिकरण गरेमा धेरै मानिसहरुले पशुपालन जस्तै गरि वन्यजन्तु पालेर उपभोग गर्न सक्छन, जसले गर्दा वन्यजन्तुको लागि वन माथिको निर्भरतालाई घटाउन सकिनेछ र वनका वन्यजन्तुहरुलाई सुरक्षित राख्न सकिनेछ ।

संरक्षित क्षेत्र वरपर बढ्दो जनघनत्व एवं अव्यवस्थित भू-उपयोगका कारण वन्यजन्तुको वासस्थानमा भएको क्षयीकरण एवं संकुचनले गर्दा वन्यजन्तु आफ्नो वासस्थान छाडी गाउँ बस्तीमा पस्ने गरेको छ । यसबाट संरक्षित क्षेत्रभित्र तथा यसको वरिपरि बसोवास गर्ने समुदायहरुको वन्यजन्तुबाट मानवीय तथा आर्थिक क्षति हुँदै आएको छ । हात्ती, बाघ, गैंडा, हिउँ चितुवा, हिमाली कालो भालु, काठे भालु, बाँदरलगायतका वन्यजन्तुको आक्रमणबाट मानवीय क्षति (मृत्यु तथा घाइते) बालीनाली, घर, गोठको क्षति हुने गरेको छ । आ.व. २०७८/०७९ मा नेपालभरि वन्यजन्तुबाट मृत्यु हुने मानिसको संख्या ५८, सामान्य घाइते संख्या ७२ र सख्त घाइते हुनेको संख्या ११६ रहेकोमा आ.व. २०७९/०८० मा नेपालभर वन्यजन्तुबाट मृत्यु हुने मानिसको संख्या ३९, सामान्य घाइते संख्या ७२ र सख्त घाइते हुनेको संख्या १२४, घर/गोठको क्षति ५३१ छ । यसरी वन्यजन्तुबाट भएको क्षतिको कुल १०४२६ वटा घटना दर्ता भएको छ । वन्यजन्तुबाट मानविय क्षति मात्र नभई मानविय कारणबाट वन्यजन्तुमा हुने क्षति समेत बढिरहेको छ । आ.व.२०७८/७९ मा २० वटा संरक्षित क्षेत्रहरुमा जम्मा ४५८ वटा वन्यजन्तुको मृत्यु भएको थियो । आ.व.२०७९/८० मा २० वटा संरक्षित क्षेत्रहरुमा जम्मा ५५८ वटा वन्यजन्तुको मृत्यु भएको थियो । तराईका संरक्षित क्षेत्रहरुमा मृत्यु हुने वन्यजन्तुको संख्या बढ्दो छ भने पहाड तथा हिमाली क्षेत्रमा यो संख्या तुलनात्मक रुपले कम देखिन्छ ।संरक्षण क्षेत्र बाहिर वन्यजन्तुले गरेको क्षति र वन्यजन्तुमा परेको क्षति यो भन्दा धेरै रहेको छ ।

अहिले नेपालमा वन संरक्षणका राम्रा अभ्यास र उपलब्धिहरु भएपनि वन संरक्षण गर्दा वन्यजन्तुलाई वेवास्ता गरिएकोले वन्यजन्तु संरक्षणमा कठिनाइ देखिएको छ। वन्यजन्तुका प्रजातिहरु जोगाउदै यिनीहरुको संख्या विस्तार गर्नको लागि अहिले नेपालमा भैरहेको वन व्यवस्थापनलाई वन्यजन्तु मैत्री बनाउनु पर्छ ।

सामुदायिक र साझेदारी वनमा वन्यजन्तुको लागि विशेष स्थानको व्यवस्था, जैविक करिडोरहरुको निर्माण, प्रदुषण नियन्त्रण, डढेलो नियन्त्रण र वनक्षेत्रमा पानीको व्यवस्था जस्ता कार्यहरु गरेमा वन्यजन्तुलाई वनमा सुरक्षित राख्न सकिन्छ । वस्ती र खेतवारीमा वन्यजन्तुले क्षति पुर्‍याएमा सहज रुपमा क्षतिपूर्ति पाउने व्यवस्था गर्ने र किसानलाई वन्यजन्तुले नरुचाउने बालि लगाउन र त्यस्ता बालीको बजारिकरणमा सघाउने हो भने मानव र वन्यजन्तु विचको बढ्दो द्वन्दलाई घटाउन सकिन्छ । यस्ता कार्यक्रम ल्याउन सकिएन भने वन्यजन्तु मारिने र मासिने क्रम निरन्तर चलिरहनेछ ।

*बुटवल टुडे, २०८० फाल्गुन २०*

yrkandel@gmail.com

# Challenges of wildlife conservation

Yubaraj Kandel

***Summary***

Wildlife around the world is facing a grave threat. Poaching, deforestation, rapid urbanization, and pollution are identified as the primary causes of this crisis. The demand for various parts of wild animals in both domestic and foreign markets has led to widespread hunting of these creatures. While the presence of forest and security agencies in protected areas has helped reduce hunting in recent years, wildlife continues to be targeted for commercial and domestic purposes outside these zones and in areas inaccessible to authorities. In Nepal, poor forest management, pollution, unplanned development, and destruction of watershed areas have significantly contributed to the decline of wildlife populations. The lack of grazing areas, food sources, shelter, and breeding grounds has led to a rapid decrease in the number of wild animals. Annual deforestation further exacerbates the situation by hindering the reproduction and growth of these species. As a result of diminishing habitat, food, and water sources in the forests, wild animals are increasingly encroaching upon human settlements. Conflicts between humans and wildlife have escalated as these animals attack people, livestock, and crops. Despite legal provisions against the killing of wild animals, such incidents persist in Nepal.While there have been successful forest conservation efforts in Nepal, the neglect of wildlife conservation poses a significant challenge. To safeguard and increase the population of wild animal species, forest management practices in Nepal must prioritize wildlife protection and preservation.

*Butwal Today, 3 March 2024*

# वन छैन वन्यजन्तुलाई

## Where is forest for wildlifes?

युबराज कंडेल

*जंगलका रुखहरुबाट प्रत्यक्ष र तत्कालै लाभ लिन पाईने , तर वन्यजन्तुबाट त्यस्तो लाभ छिटो लिन नपाईने भएकोले सामुदायिक वन समुहहरुले वन्यजनुको व्यवस्थापनमा चासो देखाएको पाइदैन । वन्यजन्तुलाई अलग राखेर वन संरक्षण हुन नसक्ने र वनमा वन्यजन्तुको पहिलो अधिकार हुने भएकोले वन व्यवस्थापन सम्बन्धि हरेक कार्यहरु गर्दा वन्यजन्तुलाई असर नपुऱ्याईकन गर्नु पर्नेमा सामुदायिक वन समुहहरुले त्यस तर्फ राम्ररी ध्यान दिन सकेको देखिदैन । वन्यजन्तुको लागि आहारा र चहलपहलको लागि वन क्षेत्र भएर मात्र पुग्दैन । धेरैजसो वन्यजन्तुको लागि बाक्लो झाडी र ठुला रुख सहितको मानव चहलपहल रहित जंगल आवस्यक पर्छ. तर कुनैपनि सामुदायिक वन समुहहरुले आफ्नो वन क्षेत्र को आंशिक हिस्सा पनि मानव चहलपहल रहित र झाडियुक्त राख्न सकेका छैनन् । सबै वन क्षेत्रमा थिनिंग र प्रुनिंग जस्ता बिरुवा काँटछाँट कार्यहरु गर्ने र सबै मौसममा उपभोक्ताहरुलाई वन प्रवेश गर्न दिने जस्ता कार्यले गर्दा वन्यजन्तुको आहारविहारमा असर परिरहेको छ ।*

रुपन्देही जिल्ला सामुदायिक वन स्थापनाको दृष्टिले अग्रणी जिल्ला मानिन्छ । वन ऐन २०४९ आउनुपूर्व नै रुपन्देहीका करहिया र शंकरनगर वन उपभोक्ता समुहहरु अस्तित्वमा आईसकेका थिए । अहिले रुपन्देही जिल्लामा १०३ वटा वन उपभोक्ता समुहलाई हस्तान्तरण भैसकेको छ र करिव दर्जन बढि वन प्रस्तावित सामुदायिक वनको रुपमा उपभोक्ताहरुले व्यवस्थापन र उपयोग गरिरहेका छन् । १२ हेक्टर देखी ७ सय हेक्टर सम्म क्षेत्रफल ओगटेका सामुदायिक वन मध्ये धेरैजसो पुर्व पश्चिम राजमार्गको छेउछाउमा रहेका छन् ।

रुपन्देही लगायत तराईका सामुदायिक वनहरु जैविक विविधता सम्पन्न छन् । चुरे क्षेत्रबाट बगेर आउने खोला र खोल्साहरुमा पानी भैरहने र ठुला ठुला रुख, पोथ्रे झाडी तथा घाँसे क्षेत्रहरु भएकोले जिल्लाका उत्तरी क्षेत्रका सामुदायिक वनहरुमा हरिण बाह्रसिंगे,जंगली खरायो, निलगाई, बँदेल,चरीबाघ, वन बिरालो, बाँदर, स्याल,फ्याउरो, मयुर, वन कुखुरा, लुईंचे, तित्रा , सुगा,अजिंगर र गोहोरो जस्ता पशुपन्छी र सरिसृपहरु प्रसस्तै पाईन्छन् । यहाका सामुदायिक वनहरू बन्यजन्तु सम्पन्न भएपनि वन समुहहरु भने वन व्यवस्थापन र उपयोगमा मात्र केन्द्रित रहेको पाईन्छ. वन फँडानी नियन्त्रण, रुख विरुवाको काँटछाँट र काठ दाउरा बिक्रि गरि आम्दानी गर्ने खालका कार्यहरु सबै सामुदायिक वन समुहहरुले गरिरहेका छन् । केहि सामुदायिक वन समुहले वन भित्र बेसार खेति, घाँस खेति र फलफुल खेति समेत गरेर चर्चा बटुलेका छन् । तर, वनको अभिन्न पाटोको रुपमा रहेका वन्यजन्तुहरुको संरक्षण , व्यवस्थापन र उपयोग सम्बन्धि कार्यहरु भने सामुदायिक वन

समुहहरुका योजना र कार्यक्रम भित्र पर्न सकेका छैनन् ।

शंकरनगर सामुदायिक वन समुह भित्र सानो वनक्षेत्रमा तारवार र पर्यटकीय पुर्वाधारहरु निर्माण गरि ' वन वाटिका' नामक पार्क बनाएको छ । 'मिनी जू' भनिने यो वन वाटिकामा भालु, वन बिरालो, अजिंगर, बाँदर, निलगाई र सर्प जस्ता केहि जीवहरूलाई साँघुरा खोरहरुमा थुनेर राखिएको छ । वन व्यवस्थापन नमुना सामुदायिक वनहरू मध्येमा पर्ने यो सामुदायिक वनमा वनबाटिका बनाउने बाहेक वन्यजन्तु व्यवस्थापन सम्बन्धि अन्य कार्य गर्न सकेको छैन । शंकर नगर बाहेक यो क्षेत्रका कहलिएका सामुदायिक वन उपभोक्ता समुहहरुले अफ्नो कार्य योजनामा "वन्यजन्तु संरक्षण गरिनेछ" भन्ने वाक्यांश उल्लेख गर्ने र कतैकतै वन्यजन्तुलाई वस्तीमा पस्न नदिन जाली लगाउने बाहेक अरु केहि कार्य गरेकै छैनन् ।

वन ऐन २०४९ अन्तर्गत बनेको वन नियमावली २०५१ को नियम २८ ले सामुदायिक वनको कार्य योजनामा ' वन्यजन्तु सम्बन्धि प्रावधान' राख्नुपर्ने र नियम ३१ मा ' सामुदायिक वनमा प्रचलित कानुन बिपरित वन्यजन्तु पक्रन र मार्न पाईने छैन' भन्ने उल्लेख गरिएको छ । त्यसैगरी सामुदायिक वन विकासको मार्गदर्शन २०७१मा वनमा पाईने वन्यजन्त' एवं जैविक विविधता र तिनको संरक्षण सम्बन्धी व्यवस्थालाइ अनिवार्य रुपमा कार्ययोजनामा समेट्नुपर्ने व्यवस्था गरिएको छ । यिनै बाध्यताले गर्दा सबै सामुदायिक वन उपभोक्ता समुहको कार्य योजनामा ' सामुदायिक वन भित्र कुनैपनि वन्यजन्तु पक्रन र मार्न पाईने छैन. यदि कसैले कार्ययोजना र बिधान बिपरित वन्यजन्तु मरेमा वा नोक्सानी पुर्याएमा आवस्यक कारवाहीको लागि जिल्ला वन कार्यालय वा सम्वन्धित निकायमा पेश गरिने छ साथै वन र वन्यजन्तुको महत्वबारे जनसमुदायमा व्यापक प्रचारप्रसार गरिनेछ ' भन्ने वाक्यांश समावेस पाईन्छ । वन्यजन्तु मार्न र पक्रन पाईने छैन भन्ने उल्लेख गरे पनि आफ्नो वनमा रहेका वन्यजन्तुको संरक्षण र व्यस्थापन कसरि गर्ने भन्नेकुरा कार्य योजनामा उल्लेख गरेको भेटिदैन ।

जंगलका रुखहरुबाट प्रत्यक्ष र तत्कालै लाभ लिन पाईने , तर वन्यजन्तुबाट त्यस्तो लाभ छिटो लिन नपाईने भएकोले सामुदायिक वन समुहहरुले वन्यजनुको व्यवस्थापनमा चासो देखाएको पाइदैन । वन्यजन्तुलाई अलग राखेर वन संरक्षण हुन् नसक्ने र वनमा वन्यजन्तुको पहिलो अधिकार हुने भएकोले वन व्यवस्थापन सम्बन्धि हरेक कार्यहरु गर्दा वन्यजन्तुलाई असर नपुर्याईकन गर्नु पर्नेमा सामुदायिक वन समुहहरुले त्यस तर्फ राम्ररी ध्यान दिन सकेको देखिदैन । वन्यजन्तुको लागि आहारा र चहलपहलको लागि वन क्षेत्र भएर मात्र पुग्दैन । धेरैजसो वन्यजन्तुको लागि बाक्लो झाडी र ठुला रुख सहितको मानव चहलपहल रहित जंगल आवस्यक पर्छ. तर कुनैपनि सामुदायिक वन समुहहरुले आफ्नो वन क्षेत्र को आंशिक हिस्सा पनि मानव चहलपहल रहित र झाडियुक्त राख्न सकेका छैनन् । सबै वन क्षेत्रमा थिनिंग र प्रुनिंग जस्ता बिरुवा काँटछाँट कार्यहरु गर्ने र सबै मौसममा उपभोक्ताहरुलाई वन प्रवेश गर्न दिने जस्ता कार्यले गर्दा वन्यजन्तुको आहारविहारमा असर परिरहेको छ । पछिल्लो समयमा वैज्ञानिक वन व्यवस्थापनका नाममा पुराना ठुला र धोद्रा रुखहरु सखाप पार्ने क्रम जताततै देखिन्छ । त्यसैगरी वैज्ञानिक वन व्यवस्थापन गर्न काष्ठ प्रजातिका रुखहरुलाइ मात्र महत्व दिएर गैह्र काष्ठ प्रजातिका रुखहरुको फडानी भैरहेकोछ । ठुला र धोद्रा रुखहरु वन्यजन्तुका वासस्थान हुन भने गैह्र काष्ठ प्रजातिका रुखहरु शाकाहारी वन्यजन्तुका आहारा हुन् । सामुदायिक वन समुहले पुराना र ठुला रुख काटेपछि रुखलाई आश्रयस्थल बनाउने चराचुरुंगी र साना वन्यजन्तु समस्यामा परिरहेका छन् ।

चुरे क्षेत्रको भूक्षयको कारणले गर्दा सामुदायिक वन भित्रका खोला र खोल्साहरु क्रमश पुरिदै

गएको वनमा पानीको अभाव देखिन थालेको छ. आहारबिहार र प्रजननको लागि उपयुक्त वातावरण वन भित्र नभएपछि वन्यजन्तुहरूको प्रजनन, वृद्धि र विकास सुस्त त भएको छ नै, वनमा भएका वन्यजन्तुहरू पनि अन्यत्र बिस्थापित हुन थालेका संकेतहरु देखिन थालेका छन् । वर्षेनी दोहोरिने वन डढेलो, चरिचरन, भूक्षय, प्रदूषण र जंगल काँटछाँट कार्यले वन्यजन्तुलाई चर्न क्षेत्र, आहारा र पानीको कमी हुन थाले पछि सामुदायिक वनका वन्यजन्तुहरू पनि र आहारको खोजीमा छिमेकी गाउँका खेतवारीमा आउन थालेका छन् । वन्यजन्तुले बालीनाली नोक्सानी गरेर सताउन थालेपछि वन नजिकका गाउँले र सामुदायिक वन समुह बिचमा द्वन्दका स्वरहरु समेत सुनिन थालेका छन् । सामुदायिक बनलाई वन्यजन्तु मैत्री बनाउन अव पनि ढिला गरियो भने अहिले भएका वन्यजन्तुहरू पनि हराउदै जाने र तथा वन र समुदाय बीचको द्वन्द अझ चर्कदै जाने निश्चित छ । यो स्थितिले भविस्यमा वन संरक्षणमा चुनौती थप्ने कुरामा कुनै शंका छैन ।

वन्यजन्तु वनका आधा पाटो हुन् । जुन वनमा वन्यजन्तुहरु हुदैनन् ति वनलाई जीवित मानिदैन र त्यहाको पारिस्थितिक प्रणाली पनि लामो समयसम्म जीवित रहिरहन सक्दैन । वन संरक्षण गर्दा वन्यजन्तु र जैविक विविधताको संरक्षणलाइ प्राथमिकता दिनुपर्ने कुरा वन रणनीति (सं २०१६-२०२५), वन नीति २०७१ तथा राष्ट्रिय वन नीति, २०७५ ( मस्यौदा), वन तथा वातावरण क्षेत्र सुधार कार्ययोजना २०७५, वन विधेयक २०७५ मा समेत उल्लेख गरिएको छ । सरकारका पछिल्ला नितिहरुले त सामुदायिक वन समुहहरुलाई वन्यजन्तु पालन गरि आम्दानि हासिल गर्न पाउने बाटो समेत खोलिदिएको छ । अहिले वातावरण संरक्षणको नाम दिएपनि सामुदायिक वनको व्यवस्थापन उपभोक्ताको आवस्यकता पूर्ति र आम्दानीको दृष्टिले मात्र गरिएको छ , जसले गर्दा सामुदायिक वन समुहहरुको ध्यान वन पैदावार विकासमा मात्र केन्द्रित छन् । वनस्पति र वन्यजन्तुको आपसी सम्बन्धले मात्र वनको अस्तित्व रहन सक्ने र यहि सम्बन्धको उपयोग गरि समुदायले प्रसस्त आर्थिक र वातावरणीय लाभ लिन सक्ने भएपनि समुदाय यो काममा चुकेको देखिन्छ । वनमा वन्यजन्तुको उचित संरक्षण र व्यवस्थापन गर्न सकियो भने वनको संरक्षण त हुनेछ नै पर्या पर्यटन, नियमानुसार वन्य जीवको पालन र विक्रीबाट समेत सामुदायिक वन समुहहरुले दिर्घकालिन लाभ लिन सक्नेछन् ।

*बुटवल टुडे, १५ फाल्गुन २०७५*

yrkandel@gmail.com

# Where is Forest for Wildlifes?

Yubaraj Kandel

***Summary***

Forests play a crucial role in supporting wildlife, yet community forest groups often prioritize forest management and utilization over wildlife conservation. Unfortunately, the protection, management, and utilization of wild animals within community forests are often overlooked in their plans and programs. While the benefits of trees in the forest are readily apparent, the benefits of wild animals may not be as immediately tangible, leading to a lack of interest in their management. Despite legal requirements, many community forest user groups fail to address how to protect and manage wild animals in their action plans. It is essential to recognize that forest protection cannot be achieved without considering the needs of wild animals, as they have a rightful place in the ecosystem. Neglecting the impact of forest management activities on wildlife can disrupt their natural habitats and food sources. The current trend of prioritizing scientific forest management has resulted in the destruction of old and large trees, affecting the birds and small wildlife that rely on them for shelter. Additionally, the focus on timber trees has led to the neglect of non-timber trees, further impacting wildlife habitats. Forest fires, deforestation, erosion, pollution, and illegal logging within community forests have reduced grazing areas, food sources, and water availability for wild animals, forcing them to seek resources in neighboring villages and causing conflicts with local communities. It is imperative for community forest groups to prioritize wildlife conservation in their forest management practices to ensure the long-term sustainability of both forests and wildlife populations. By incorporating measures to protect and manage wild animals within their plans and programs, community forest groups can promote biodiversity, preserve ecosystems, and mitigate conflicts between humans and wildlife.

*Butwal Today, 3 March 2019*

# वन्यजन्तुलाई धराप बन्दैछन् विकासे संरचना

## Wildlife is Threatened by Development Structures

युवराज कंडेल

*वन विनाश, जलवायु परिवर्तन र चोरि शिकारीको कारणले वन्यजन्तुको संख्या निरन्तर घटिरहेको छ सिमित क्षेत्रमा मात्र वन खुम्चदा वन्यजन्तुको आहारविहारमा प्रतिकुल असर परिरहेको छ । सिमित क्षेत्रफलमा रहेको वनमा जिवजन्तुलाई जोगाउन विशेष पहल गर्नुपर्नेमा विकास संरचना निर्माणको काममा वनभित्र र वन नजिक जीवजन्तुको लागि धराप थाप्ने कामहरु भैरहेका छन् । संरक्षण क्षेत्रको विस्तार र सामुदायिक वनको कारणले वन्यजन्तुहरूको संख्या र चहलपहल बढिरहेको छ, तर त्यसलाई दिगो बनाउन र जीवजन्तुको वासस्थान, जैविक मात्र सुरक्षित बनाउन पहल हुन् सकेको छैन । वनभित्र र वनको नजिक विकासे संरचनाहरु निर्माण गर्दा जिवजन्तुलाई हानि नपुग्ने किसिमले बनाउन ढिला गरियो भने अहिले देखिएका धेरै वन्यजन्तुहरु पनि हराएर जानेछन् ।*

तिलोत्तमा नगरपालिकामा रहेको करहिया सामुदायिक वनमा माघ ५ गते हिमाली गिद्धको हुल देखिएको थियो । त्यस ठाउँमा झन्डै ३ दशकपछि ठुलो समुहमा तिन दर्जनको संख्यामा गिद्धहरु देखिएका थिए । वनमा एउटा गाई मरेको थियो, शायद त्यहि खानको लागी उनीहरु आएका हुनुपर्छ । सिनो नजिकका अग्ला सिसौका रुखमा गिद्धहरूले वासस्थान बनाएका थिए । रुख नजिकैबाट विजुलीको हाइटेन्सनका दुईवटा लाईन गएका थिए । ठुला गिद्धहरु यताउति उड्ने क्रममा दुईवटा गिद्धहरु हाईटेन्सन तारमा ठोकिन पुगे । खोजि गर्दै जाँदा एउटा मृत र अर्को घाईते अवस्थामा भेटियो । पंक्तिकारले खबर गरेपछि वन कार्यालयबाट कर्मचारी आएर मुचुल्का उठाएर गिद्ध गाड्ने काम भयो, सिनोलाई टाढा हटाएर तत्काललाई गिद्धलाई सुरक्षित राख्न सकिने भएपनि सरोकारवाला निकायहरुले वास्ता गरेनन् । यो घटनाको भोलिपल्ट सडक विस्तारको काम भइरहेको पूर्वपश्चिम महेन्द्र राजमार्गको भरतपुर गोन्द्राङ खण्डस्थित निर्माणाधीन नालामा खसेर माघ ९ गते एउटा भाले गैंडाको मृत्यु भएको दमौली ३३ केभी प्रसारण लाइनमा करेन्ट लागेर ६०/७० वटा करिब मरेको तथा बाँके राष्ट्रिय निकुन्जमा आर्थिक वर्ष २०७१/७२ देखि २०७७/०७८ सम्मको अवधिमा सवारी दुर्घटनामा परेर विभिन्न प्रजातिका ३५८ वन्यजन्तु मरेका खबरहरु समाचार सार्वजनिक भएका थिए । विद्युत प्रसारण लाईन, नहर, सडक दुर्घटना र अन्य मानवीय संरचनाको कारणले वन्यजन्तुको मृत्यु भएका समाचारहरु पछिल्ला वर्षहरुमा निकै आएको पाइन्छ ।

पछिल्ला २ दशकमा नेपालमा वन बढेको सरकारी दाबि छ । संरक्षण क्षेत्रहरुको संख्यामा वृद्धि र सामुदायिक वन समुहको रुपमा वनको व्यवस्थापनले गर्दा नेपालमा वनको क्षेत्रफल बढेको देखिएको हो । कागजमा वनजंगल बढेको भएपनि धरातलीय वास्तविकता भने फरक छ । ४ दशक अघिसम्म घना वन भएका स्थानहरुमा अहिले घना वस्तीहरु बनिसकेका छन् । कुनै बेलाका चारकोशे झाडिहरु अहिले केहि किलोमिटरको परिधिमा खुम्चिएका छन् । वन क्षेत्रहरु खण्डिकरण भएका छन् । वनको विच विचमा रहेका वस्तिहरुको कारणले जीवजन्तु

ओहोरदोहोर गर्ने जैविक मार्गहरु टुक्रिएका छन् । वस्ती विस्तारसंगै विकासे चाहनाहरु बढिरहेका छन् । फलस्वरूप आधुनिक संरचनाहरु थपिने क्रम बढिरहेको छ । मानिसलाई सुविधा थप्नका लागि बनाईएका आधुनिक संरचनाहरु भने जीवजन्तु विनाशका कारण बन्दै गएका छन् । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु विभागका वार्षिक प्रतिवेदनहरुलाई हेर्ने हो भने संरक्षण क्षेत्रभित्र मात्र आ.ब. २०७०/७१ मा १६ वटा वन्यजन्तुहरु विकासे संरचनाको कारणले मरेका थिए । आ.व. २०७४ मा विभिन्न ;संरक्षित क्षेत्रमा कूल ३२६ वटा वन्यजन्तुको मृत्यु भएको थियो जसमध्ये सडक दुर्घटनाबाट ४१% र सिंचाईको नहरमा डुबेर २.१४% वन्यजन्तुको मृत्यु भएको थियो । आ.व. २०७४/७५ मा ३९१ वटा वन्यजन्तुको मृत्यु भएको थियो, जसमध्ये सडक दुर्घटनाको कारणले ३४%, करेन्ट लागेर १.२८ प्रतिशत नहरमा डुबेर १.५३ % स.रक्षित वन्यजन्तु मरेका थिए । आ.ब. २०७६/७७ सडक दुर्घटनाको कारणले मात्र संरक्षण क्षेत्र भित्र १०८ वटा संरक्षित वन्यजन्तुको मृत्यु भएको देखिन्छ । यो तथ्यांकले नेपालमा संरक्षित वन्यजन्तुहरु समेत विकासका संरचनाको कारणले कति असुरक्षित भैरहेका छन् भन्ने प्रष्ट हुन्छ ।

पछिल्ला वर्षहरुमा अप्राकृतिक र अजैविक कारणले वन्यजन्तुहरुको मृत्यु हुने कारणहरु मध्ये सडक दुर्घटना मुख्य कारण बनिरहेको छ । महेन्द्र राजमार्ग निर्माण गर्दा घना वनलाई नै चिरेर बनाईएको थियो । अहिलेपनि घना वन यहि राजमार्गकै छेउछाउमा रहेको छ । पर्सा, चितवन, बाके, बर्दिया र शुक्लाफाँटा राष्ट्रिय निकुन्जलाई चिरेर महेन्द्र राजमार्ग फैलिएको छ । लुम्बिनी प्रदेशका सालझण्डी ढोरपाटन राजमार्ग, तौलिहवा-गोरुसिंगे- सन्धिखर्क सडक, रत्न राजमार्ग, गुलरिया-राजापुर सडक, रुद्रपुर-सालझण्डी, कोइलाबास- गढवा, लमही-घोराही, भालुवांग-प्युठान सडक वनभित्र नै रहेका छन् । यी सडक रहेको क्षेत्रहरु वन्यजन्तुहरु बसोबास गर्ने क्षेत्र हुन् । सिमित ठाउँमा रहेका वनक्षेत्रमा रहेका सडक वारपार आफ्नो दैनिक गतिविधि गर्नु वन्यजन्तुको बाध्यता हो । जीवजन्तु वारपार गर्ने र चहलपहल हुने क्षेत्रमा जीवजन्तुको लागि आकाशे पुल र भूमिगत पुलहरु छैनन्, जिवजन्तुलाई झुक्किएर सडकमा पुग्न नदिने कुनै छेकवार पनि छैनन् । राष्ट्रिय निकुन्ज भित्र सवारी चलाउदा गति नियन्त्रणमा ध्यान दिने भएपनि अन्यत्रको वनक्षेत्रमा लापरवाह ढंगले सवारी साधनहरु हुँईकिने गरेको देखिन्छ । गाडीको आवाज, हर्नले तर्सेर भाग्दा, नियमित रुपमा वनको एक भागदेखि अर्को भागमा जादा सवारी साधनसंग ठोक्किएर वा किचिएर वन्यजन्तुहरु मर्ने गरेका मात्र छैनन्, सवारी दुर्घटना भएर मानिसको मृत्यु समेत हुने गरेको छ । देशमा सवारी साधनको चाप बढिरहेको छ, सडक अनुशासन कमजोर बनिरहेको छ र सडकहरु वन्यजन्तु मैत्री बन्न सकेका छैनन्, यसले आउदा दिनहरुमा अझ बढी वन्यजन्तु क्षति भोग्नुपर्ने निश्चित छ ।

नेपालमा विद्युत प्रशारण लाइनको विस्तार तीव्र दरमा भैरहेको छ । ठुला शहर र आर्थिक केन्द्रहरुलाई विद्युत गृह र सब-स्टेशनसगं जोड्ने गरि उच्च भारवाहन क्षमतायुक्त हाईटेन्सन लाईन बनिरहेका छन् र वस्तीहरुमा र विद्युत लाईनको जालो नै बनेका छन् । वस्तीबाट हाइटेन्सन लाईन लैजादा स्थानीय वासिन्दाको विरोध हुने, उच्च मुआब्जा दिनुपर्ने भएकोले अधिकांश हाईटेन्सन लाईनहरु वनभित्र वा वनको किनारा हुदै निर्माण गरिएका छन् । यस्ता विद्युत लाईन चरा र बाँदरको लागि धराप बन्दै गएका छन् । चराहरु ओहोरदोहोर गर्दा वा झुक्किएर पोल, तारमा बस्न पुग्दा विद्युत सर्ट भएर मरेको पाइन्छ । वनजंगल हुदै लागिएको विद्युत सर्ट भएर वन क्षेत्र, रुखमा करेन्ट फैलिदा मा त्यहा रहेका जीवजन्तुहरु करेन्ट लागेर मरिरहेका छन् । शहरी क्षेत्रमा चराहरुको वासस्थान मासिएको छ र विजुलीका टावरलाई चराहरुले अस्थायी वासस्थान बनाउने गरेका

छन् । यसले गर्दा शहरका कुनै न कुनै स्थानमा चराहरु मरिरहेका हुन्छन् । वन क्षेत्रमा भूमिगत विद्युतीकरण र इन्सुलेटरयुक्त तारको प्रयोग गर्ने कुराहरु धेरै उठेपनि अहिलेसम्म त्यो कुरा कार्यान्वयनमा आउन सकेको छैन ।

वन क्षेत्र हुदै धेरै पक्कि नहर र कुलोहरु बनिरहेका छन् । पानीको खोजीमा वन्यजन्तुहरु तिनै कुलो र नहरमा पुग्ने गरेका छन् । धेरैजसो अवस्थामा जीवजन्तुहरु आपसमा लड्दा, आपसमा खेल्दा र ओहोरदोहोर गर्दा नगरमा खस्ने गरेका छन् । पक्कि नहर र कुलोहरु जीवजन्तु पस्न र निस्कन सक्नेगरी बनाईएका छैनन् । पानी पिउन गएका, झुक्किएर खसेका वा घाईते भएर खसेका वन्यजन्तुहरु नहरबाट निस्कन नसक्दा र नहरको ढोकामा अड्किएर नहर भित्र मरिरहेको वन्यजन्तु विभागका तथ्यांकहरुले देखाएका छन् । जलचर संरक्षण ऐन २०१७ को दफा ५ख मा विद्युत, खाने पानी, सिंचाई वा अन्य कुनै प्रयोजनको लागि बाँध निर्माण गर्ने निकायले जलचरको आवागमनमा बाधा पर्न नदिनको लागि सम्भव भएसम्म फीस ल्याडर निर्माण गर्नुपर्ने कुरा उल्लेख छ । तर नेपालमा बनाईएका नहरका बाँधहरु जलचर आवतजावत गर्न मिल्ने गरि बनाईएका छैनन् । जसले गर्दा बग्दै तल्लो क्षेत्रमा गएका जलचरहरु फर्केर माथिल्लो क्षेत्रमा आउँन सकिरहेका हुदैनन् । नगर र कुलोहरु निर्माण गर्ने क्रममा सिमसार मासिएका वा टुक्रिएका छन्, जसले गर्दा सिमसारमा आश्रित जिवजन्तुहरुको दैनिकीमा नै प्रतिकुल असर परिरहेको छ ।

नेपालमा समयमै विकास निर्माणका कामहरु पुरा नगर्ने प्रवृति जताततै देख्न पाइन्छ । सडक, पुल, नाली, भवन निर्माण सुरु गरेर लामो समयसम्म छोड्ने, निर्माण कार्य गर्दा सुरक्षात्मक उपायहरु अवलम्बन नगर्ने प्रवृतिले गर्दा निर्माण स्थलहरु जीवजन्तुको लागि धराप बनिरहेका छन् । चितवनमा निर्माणाधीन नालीमा परेर गैडा मर्नु त्यसको ज्वलन्त उदाहरण हो । उद्योगहरुले आफुले उत्सर्जन गरेको रसायन र फोहरयुक्त पानी प्रशोधन नगरी खुला ठाउँ र पानीका श्रोतमा मिसाउने गरेका छन् । यस्ता कार्यले जलचर त मासिदै गएका छन् नै, पानीको खोजीमा हिड्ने जीवजन्तुहरु समेत मरिरहेका छन् । यी बाहेक पर्यापर्यटनको नाममा वनमा निर्माण गरिएका संरचना र हुने गरेका गतिविधिहरु, साहसिक पर्यटनको नाममा जथाभावी भैरहेका प्यारा ग्लाईडिंग, बन्जीजम्पिंग, हिमाली वन क्षेत्रमा भैरहेका अनियन्त्रित हेलिकप्टर उडान र अवतरण जस्ता कारणले पनि वन्यजन्तुको दैनिकी, विकास र विस्तारमा नकारात्मक असर परिरहेको देखिन्छ ।

वन विनाश, जलवायु परिवर्तन र चोरि शिकारीको कारणले वन्यजन्तुको संख्या निरन्तर घटिरहेको छ सिमित क्षेत्रमा मात्र वन खुम्चदा वन्यजन्तुको आहारविहारमा प्रतिकुल असर परिरहेको छ । सिमित क्षेत्रफलमा रहेको वनमा जिवजन्तुलाई जोगाउन विशेष पहल गर्नुपर्नेमा विकास संरचना निर्माणको काममा वनभित्र र वन नजिक जीवजन्तुको लागि धराप थाप्ने कामहरु भैरहेका छन् । संरक्षण क्षेत्रको विस्तार र सामुदायिक वनको कारणले वन्यजन्तुहरूको संख्या र चहलपहल बढिरहेको छ, तर त्यसलाई दिगो बनाउन र जीवजन्तुको वासस्थान, जैविक मात्र सुरक्षित बनाउन पहल हुन् सकेको छैन । वनभित्र र वनको नजिक विकासे संरचनाहरु निर्माण गर्दा जिवजन्तुलाई हानि नपुग्ने किसिमले बनाउन ढिला गरियो भने अहिले देखिएका धेरै वन्यजन्तुहरु पनि हराएर जानेछन् । सडक, नगर, विद्युत लाईन, पुलपुलेसा, भवन बनाउदा "जीवजन्तु रहे,जीवन रहन्छ" भन्ने कुरालाई मूल मन्त्र बनाउन सकियो भने मात्र मानिस संगै सबै प्रकृति बाचिरहन सक्नेछ । संरक्षणकर्मिहहरुले मात्र नभई सबै तहका सरकारहरु, योजनाकार, विकासका उपभोक्ता र निर्माण व्यवसायीहरुले यसतर्फ तत्कालै ध्यान दिनु जरुरी छ । *बुटवल टुडे, २०७८ माघ १४*

yrkandel@gmail.com

# Wildlife is Threatened by Development Structures

Yubaraj Kandel

*Summary*

The government of Nepal has reported an increase in forest cover over the past two decades. However, the reality on the ground tells a different story. Formerly dense forests have been replaced by settlements, fragmenting once lush areas. This has disrupted the natural habitats and migration routes of wildlife. Wild animals now face obstacles such as roads and power lines in their daily activities. The lack of wildlife-friendly infrastructure, such as sky bridges or fences, has led to an increase in vehicle collisions with animals, resulting in both animal and human fatalities. As the number of vehicles on the roads continues to rise and road discipline weakens, the situation is expected to worsen for wildlife. Furthermore, poorly constructed canals and gullies within forest areas have become death traps for animals, hindering their ability to access water sources and navigate their surroundings.

Development projects in Nepal often face delays and neglect, leaving construction sites as hazardous zones for wildlife. It is imperative that immediate action is taken to address these issues and protect the natural habitats of Nepal's wildlife. Failure to do so will result in the disappearance of many species that are currently struggling to survive in the face of human encroachment and development.

*Butwal Today, 28 January 2022*

# वनमा राजनीति र चुनावी मुद्धा

## Forest in Politics and Electoral issues

युवराज कंडेल

*वनश्रोत स्थानीय सरकारको समृद्धिको आधार पनि हो । चुनाव जितेर गएकाहरुले वन लगायतका प्राकृतिक श्रोतको विवेकपूर्ण र योजनावद्ध परिचालन गर्न सके भने स्थानीय तहमा आर्थिक विकास, वातावरण संरक्षण, जीविकोपार्जन गर्न सजिलो हुनेछ । त्यसैले मतदाताले उम्मेदवार छनौट गर्दा उसको वन र अन्य प्रकृतिक श्रोत सम्बन्धि भावी योजना के कस्तो छन् भन्ने बुझ्नु जरुरि हुन्छ । वनसंग कृषि, खानेपानी, उर्जा, भूक्षय तथा नदि कटान नियन्त्रण,वातावरण संरक्षण जस्ता क्षेत्रहरु वनसँग जोडिएकोले स्थानीय तहले वन सम्बन्धि उपयुक्त नीति र कार्यक्रमहरु ल्याउन सकेनन भने स्थानीय वासिन्दाहरुले ठुलो समस्या बेहोर्नुपर्ने हुन्छ ।*

वन श्रोत सरकारको राजस्वको ठूलो श्रोत हो भने जनताको जीविकोपार्जन र दैनिक व्यवहारको मुख्य आधार हो । वन श्रोत सर्भेक्षण २०१४का अनुसार नेपालमा वनले करिब ५९ लाख ६२ हजार हेक्टर भू-भाग अर्थात  कूल क्षेत्रफलको ४०.३६% भाग र बुट्यान क्षेत्रले ६ लाख ४८ हजार हेक्टर (४.३८%) ओगटेको छ । यसरी नेपालको कुल क्षेत्रफल मध्ये वन तथा बुट्यान क्षेत्रले गरी जम्मा ४४.७४% भू-भाग ओगटेको छ । कूल वन क्षेत्रको ३७.८)% मध्यपहाडी भौगोलिक क्षेत्रमा, ३२.२५% उच्चपहाडी तथा उच्चहिमाली क्षेत्रमा २३.०४% चुरे क्षेत्रमा र ६.९०% तराई क्षेत्रमा अवस्थित छ । कूल वन क्षेत्र मध्ये संरक्षित क्षेत्रमा १० लाख ३३ हजार हेक्टर (१७.३२%) र संरक्षित क्षेत्र भन्दा बाहिर ४९ लाख २९ हजार हेक्टर ( ८२.६८%) वन रहेको छ । संरक्षित क्षेत्रको भित्री भागमा ७ लाख ९३ हजार हेक्टर र मध्यवर्ती क्षेत्रमा २ लाख ४० हजार हेक्टर वन रहेको पाइएको छ ।

### *वन अतिक्रमणको लहर*

पछिल्ला २० वर्षमा नेपालमा वन व्यवस्थापनको क्षेत्रमा वन विनाश तथा अतिक्रमण एक जटिल राष्ट्रिय समस्याका रूपमा रहेको छ । सरकारको पछिल्लो सर्भेक्षणले नेपालमा वन बढेको देखाएपनि हालसम्म तराई तथा भित्री मधेशका विभिन्न स्थानहरूमा करिब १ लाख हेक्टर वन क्षेत्र अतिकमण भएको सरकारी तथ्यांकहरुले नै देखाउछन् ।  वन श्रोत सर्वेक्षण २०१४ का अनुसार वि.सं. २०४८ देखि २०६७ सम्मको १९ वर्षे अवधिमा तराईमा ३२ हजार हेक्टर वन घटेको छ । यो अवधिमा तराईको वन वार्षिक ०.४४ प्रतिशतका दरले घटेको देखिन्छ । पछिल्लो नौ वर्ष (२०५८-२०६७ )मा मात्र तराईको वन १६ हजार ५९९ हेक्टर घटेको थियो । तराईका कैलाली, बर्दिया र कपिलवस्तुमा वन घट्ने दर सबै भन्दा धेरै रहेको छ । वि.स. २०३५ देखि २०४८ सम्मको अवधिमा रुपन्देही जिल्लामा ३७ प्रतिशत, नवलपरासीमा  २५ प्रतिशत र कपिलवस्तु जिल्लामा १४ प्रतिशत वन घटेको तथ्यांक छ । त्यस्तै वि.सं. २०५८-२०६८ को अवधिमा नवलपरासी र ?पन्देही जिल्लाको वन वार्षिक ०.१२ र ०.२१ प्रतिशतका दरले घटेको वन श्रोत सर्भेक्षण २०१४ ले देखाएको छ । तराई संगै जोडिएको चुरे क्षेत्रमा पनि ब्यापक वन विनास भएको देखिन्छ । वि.सं. २०५२-२०६७ को १५ वर्षे अवधिमा चुरेमा ३८ हजार ५१ हेक्टर वन क्षेत्र घटेको छ । यो क्षेत्रमा वार्षिक ०.१८ प्रतिशतका दरले वन घटेको देखिन्छ ।

वि.सं. २०६३- २०६७ को अवधिमा मात्र धेरै वन रहेका नेपालमा ३० जिल्लामा मात्र २९ हजार ५ सय हेक्टर वन अतिक्रमणमा परेर विनाश भएको छ । तराई र चुरेमा मात्र नभई पहाडी क्षेत्रमा समेत व्यापक रुपमा वन क्षेत्र घटिरहेको छ । खासगरी उपत्यका र भर्खर मोटरबाटो पुगेका वस्ती छेउछाउ वन अतिक्रमण बढिरहेको भएपनि पहाडमा वन क्षेत्र घट्ने दर चुरे र तराईमा भन्दा कम भएको देखिन्छ । वन मन्त्रालयका अनुसार अतिक्रमित वन क्षेत्र मध्ये करिव ६३ प्रतिशत खेतीपाती र बसोबासको लागि प्रयोग भैरहेको छ । पछिल्लो पटक विघटित सुकुम्बासी समस्या समाधान आयोगमा सुकुम्बासी र अव्यवस्थीत बसोबासी गरि करिव ७ लाख ९० हजार निवेदन परेका थिए , यिनीहरु मध्ये प्रायजसो अतिक्रमित वन क्षेत्रकै रहेका थिए ।

***वनमा राजनीति***

नेपालमा राजनैतिक अस्थिरता र संक्रमणको सबैभन्दा नराम्रो असर वन क्षेत्रमा पर्ने गरेको छ । जबजब देशमा राजनैतिक अस्थिरता हुन्छ तव तव वनमाफिया, वन कर्मचारी र वन अतिक्रमणकारिहरु सलबलाउने गरेको देखिन्छ । नेपालमा सबैभन्दा बढी वन विनाश जनमत संग्रहताका ( २०३५-२०३८ ) को अवधिमा भएको विभिन्न तथ्यांकहरुले देखाउछन । सो अवधिमा पंचायत पक्षमा मत बटुल्नको लागि वन मन्त्रीकै संरक्षणमा वन विनाश र अतिक्रमण भएको थियो । दोश्रो चरणमा पंचायती व्यवस्थाको अन्त्य पछि दलीय आडमा वि. स. २०४७-२०५२ को अवधिमा सुकुम्बासीको नाममा चितवन, नवलपरासी, रुपन्देही, कैलाली, बाँके जिल्लाको ठुलो क्षेत्र मासेर वस्ती बसालिएको थियो । रुपन्देहीको देवदह र बेलवरिया , रुद्रपुर क्षेत्रमा त्यो अवधिमा ठुलो क्षेत्रफलको वन मासेर सुकुम्बासी वस्ती बनाइएको थियो । सोहि अवधिमा अतिक्रमणलाई बैधानिकता दिनको लागि आयोग बनाएर लालपुर्जा समेत वितरण गरिएको थियो ।

देशमा माओबादी संघर्ष सुरु भएपछि द्वन्द पिडितहरु सुरक्षित बसेको खोजीमा तराईमा झरे र उनीहरुको रोजेको थलो राजमार्ग छेउछाउका जंगलहरु नै परे । वन कर्मचारी र सुरक्षा निकाय वनमा पुग्न नसक्ने अवस्थाको फाइदा उठाई भुमिहिनहरु मात्र नभई जग्गा भएकाहरु समेत  वन क्षेत्र ओगटेर बसेका थिए । द्वन्द चर्किएको समयमा कपिलवस्तु समेत पश्चिम तराईका जिल्लाहरुमा द्वन्द पिडितको नाममा धेरै मानिसहरुले वन अतिक्रमण गरि बसोबास र खेतीपाती गरेका थिए, ति ठाँउहरु अहिले घना वस्ती भैसकेका छन् । २०६२/६३ को आन्दोलन पछि राजनैतिक संक्रमण र माओबादी डरको फाइदा उठाएर माओवादि कार्यकर्ताहरुले वनको अतिक्रमण मात्र गरेनन माओवादी नेताहरुको संलग्नतामा वन क्षेत्रमा प्लटिंग गरीर घडेरी वेच्ने कामहरु समेत भएका थिए । यहि अवधिमा मुक्त कमैयाको नाममा पश्चिम तराईमा र मधेश आन्दोलन चलेपछि विस्थापित भएकाहरुले पूर्वी तराइका  राजमार्ग छेउछाउका वन जंगललाई नै आवास बनाउन पुगे । पछिल्लो समयमा भूकम्प पिडितको नाममा पहाडका वनहरुमा समेत अतिक्रमणकारिका आँखा पुगे । जनताले गरेको वन अतिक्रमणलाई सबै दलहरुले राजनीतिक अवसरको रुपमा उपयोग गरेकोले सरकारी संयन्त्रले वन अतिक्रमण हटाउन प्रयास गरेपनि सफल हुन् भने सकेको पाईन्न ।

***चुनावी दाउमा वन र सुकुम्बासी***

सुकुम्बासी, भूमिहीन, कमैया र विपन्न मुक्ति नेपालका सबै राजनैतिक दलहरुको चुनावी मुद्धा रहदै आएको छ । सुकुम्बासीलाई लालपुर्जा दिने, सुकुम्बासी क्षेत्रमा भौतिक पूर्वाधार विकास गर्ने जस्ता मुद्धालाई अघि सारेर चुनाव लड्ने काममा सबै राजनैतिक दलहरु अब्बल देखिदै आएका छन् । धेरै ठाउमा सुकुम्बासीहरुले नै जितमा निर्णायक भूमिका खेल्ने भएकोले स्थानीय राजनैतिक व्यक्तिहरु सुकुम्वासिहरुको पक्षमा वकालत गर्ने मात्र नभएर वन अतिक्रमणलाई सघाउने काममा समेत संलग्न रहेको पाइन्छ । आफ्नो दलले चुनाव जितेमा वन क्षेत्रमा बसेकालाई जग्गाको लालपुर्जा दिलाउने कुरा दलीय घोषणापत्र मै उल्लेख गर्न राजनैतिक दलहरु कहिल्यै पछि पर्दैनन् । यो कुरा अहिले नेपालका प्रमुख राजनैतिक शक्तिहरुको संबिधानसभा चुनाव र स्थानीय

तहको चुनावको घोषणापत्र हेर्ने हो भने छर्लंग देख्न पाइन्छ ।

पछिल्लो समयमा विस्वब्यापी रुपमा बढ्दै गएको वनप्रतिको चासो तथा युरोपियन युनियन, संयुक्त राष्ट्रसंघ लगायतका दातृ निकायको दवावको कारणले नेपालका राजनैतिक दलहरुले कागजी रुपमै भएपनि वन संरक्षणका मुद्धालाई घोषणापत्रमा उल्लेख गरेको देखिन्छ । अहिले चलिरहेको स्थानीय तहको निर्वाचनको लागि दलहरुले तयार गरेको घोषणापत्रमा सामुदायिक वन, निजि तथा सहरी वन र वन संरक्षण र विकासका कुराहरु समेटिएको देखिन्छ । नेपाली कांग्रेसले वनक्षेत्रलाई स्थानीय तहको आर्थिक स्रोतको एउटा प्रमुख आधार बनाउने कुरालाई घोषणापत्रमा जोड दिएको छ । न्युनतम ४० प्रतिशत वनक्षेत्र कायम राख्ने, निजि वनलाई प्रोत्साहन गर्ने, दुर्लभ वन्यजन्तु संरक्षण गर्ने, कृषिवनका माध्यमबाट खाद्य सुरक्षा, भूमिको सुरक्षा र उत्पादकत्व वृद्धि, उद्यम विकास र स्थानीय रोजगारीको सिर्जना गरिने, प्राकृतिक वनको व्यवस्थापनलाई वातावरणीय सेवा र पर्या-पर्यटनसंग आबद्ध गर्दै लगिने कुरा घोषणापत्रमा उल्लेख गरेको छ । नेकपा एमालेले समुदायमा आधारित वन व्यवस्थापनलाई थप व्यापक बनाउने, सामुदायिक वन र कबुलियती र निजी वनको विकासका लागि कानूनी जटिलतालाई सरलीकरण गरिने , न्यूनतम ४० प्रतिशत हरियाली (वन) क्षेत्र सुरक्षित गर्ने र वन सम्पदाको संरक्षण तथा व्यवस्थापन गरी वन क्षेत्रको उत्पादकत्व बढाइने , जैविक विविधता तथा पर्यावरण प्रणालीको दिगो संरक्षण गर्ने, चुरेकेन्द्रित सामुदायिक वन व्यवस्थापनलाई अगाडि बढाउने , नेपालको सम्पूर्ण प्राकृतिक वन जङ्गलको संरक्षण गर्दै सबै वन्यजन्तु आरक्षण क्षेत्रलाई प्राकृतिक चिडियाखानाको रूपमा विकास गरिने जस्ता कुराहरु ऐमालेले आफ्नो घोषनापत्रमा उल्लेख गरेको छ । राप्रपाले पर्यावरण संवर्द्धन शिर्षकमा गाउँ तथा नगरपालिका भित्रका वन तथा वन्यजन्तु संरक्षण गरिने छ भन्ने कुरा उल्लेख गरेको छ । नयाँशक्तिको घोषणापत्रमा जैविक विविधता, वनजंगल, जलाधार तथा पानीका स्रोतहरूको संरक्षण, वातावरण संरक्षण, जलवायु परिवर्तन अनुकुलन जस्ता कुराहरु उल्लेख छन् भने जनमोर्चा नेपालले पर्यावरणको समस्या विश्वव्यापी समस्या भएकोले पर्यावरण संरक्षणको लागि वन जङ्गलको संरक्षण गर्नुपर्छ भन्ने कुरा चुनावी घोषणापत्रमा उल्लेख गरेको छ । वन संरक्षणका कुराहरु प्रायजसो राजनैतिक दलहरुले घोषणापत्रमा समावेश गरेपनि आफ्ना मतदाता विच्केलान भन्ने डरले कुनैपनि दलले वन अतिक्रमण हटाउने कुरालाइ चुनावी मुद्धा बनाउन सकेका छैनन् ।

***आशंका र सम्भावना***

अहिले स्थानीय तहको निर्वाचन चलिरहेको अवस्थामा विगतमा जस्तै वन अतिक्रमणको लागि उपयुक्त वातावरण छ । यो अवस्थामा राजनैतिक आडमा समाजका केहि व्यक्तिहरुले वन, नदि उकास क्षेत्र र अन्य सार्वजनिक क्षेत्र अतिक्रमण गर्ने सम्भावना धेरै छ । राजनैतिक दलहरुले वन अतिक्रमणको बारेमा नबोलेको हुनाले चुनाव जितेर गएकाहरुले अतिक्रमण हटाएर वन क्षेत्र फिर्ता ल्याउलान भन्ने आशा गर्नु बेकार छ, बरु उनीहरुले अतिक्रमित क्षेत्रको स्वामित्व वैधानिक रुपमा व्यक्तिलाई हस्तान्तरण गर्ने आशंका छ ।

वनश्रोत स्थानीय सरकारको समृद्धिको आधार पनि हो । चुनाव जितेर गएकाहरुले वन लगायतका प्राकृतिक श्रोतको विवेकपूर्ण र योजनावद्ध परिचालन गर्न सके भने स्थानीय तहमा आर्थिक विकास, वातावरण संरक्षण, जीविकोपार्जन गर्न सजिलो हुनेछ । त्यसैले मतदाताले उम्मेदवार छनौट गर्दा उसको वन र अन्य प्रकृतिक श्रोत सम्बन्धि भावी योजना के कस्तो छन् भन्ने बुझ्नु जरुरि हुन्छ । वनसंग कृषि, खानेपानी, उर्जा, भूक्षय तथा नदि कटान नियन्त्रण,वातावरण संरक्षण जस्ता क्षेत्रहरु वनसँग जोडिएकोले स्थानीय तहले वन सम्बन्धि उपयुक्त नीति र कार्यक्रमहरु ल्याउन सकेनन भने स्थानीय वासिन्दाहरुले ठुलो समस्या बेहोर्नुपर्ने हुन्छ । संविधानले स्थानीय तहलाई वनको उपयोग र व्यवस्थापनको अधिकार समेत प्रदान गरेकोले यो अधिकारको उपयोग गर्ने दुरदृष्टि भएको स्थानीय नेतृत्व चयन गर्नु आवस्यक छ ।

yrkandel@gmail.com

# Forest in Politics and Electoral issues

Yubaraj Kandel

***Summary***

Political instability and transitions in Nepal have a significant impact on the forest sector. During times of political unrest, it appears that the forest mafia, forest employees, and forest encroachers gain strength. The liberation of squatters, landless individuals, earners, and the impoverished has become a prominent election issue for all political parties in Nepal. These parties excel in campaigning by promising to provide essential supplies to squatters and develop physical infrastructure in squatter areas. Squatters often play a crucial role in determining election outcomes, leading local political figures to not only advocate for squatters but also engage in aiding forest encroachment.I n response to the global focus on forest conservation and pressure from donor agencies like the European Union and the United Nations, Nepalese political parties have begun to include forest protection in their manifestos, at least in writing. The manifestos for the ongoing local elections address community forests, private and urban forests, and forest protection and development. It is crucial for voters to consider a candidate's stance on forests and natural resources when making their decision. Forests are closely linked to agriculture, drinking water, energy, soil erosion, river erosion control, and environmental protection. Failure to implement appropriate forest-related policies and programs at the local level could lead to significant challenges for residents. Given that the constitution grants local governments the authority to utilize and manage forests, it is imperative to elect leaders who understand the importance of this right.

# दलहरुको घोषणापत्रमा वन

Forests in the Election Manifesto of the Political Parties

युवराज कंडेल

*दलहरुको घोषणापत्र अध्ययन गर्दा सबै दलहरु वनको संरक्षण र दिगो उपयोग गरिनुपर्ने कुराहरुलाई आत्मसात गरेको देखिएको छ । कृषि वन र निजि वन, शहरी वनबाट वन पैदावार उत्पादन र आपूर्ति गर्न सकिने भएपनि यस सम्बन्धमा दलहरु स्पष्ट छैनन् । वन हुनमा वन्यजन्तुको मुख्य भूमिका हुन्छ । तर वन्यजन्तुको संरक्षण , विकास र उपयोगको बारेमा दलहरुको ध्यान पुगेको छैन । अहिले मानव- वन्यजन्तु द्वन्द ठुलो समस्या बनिरहेको भएपनि सरकारको उचित ध्यान जान सकेको छैन । ठुला दलहरुले पिडित नागरिकको भोट तान्न मात्र मानव-वन्यजन्तु द्वन्दको निराकरण,व्यवस्थापन र क्षतिपुर्तिको कुरा उठाएका हैनन् र चुनाव पछी वाचाहरु सम्भिmरहन सकेभने मानव र वन्यजन्तु दुबैले राहत पाउनेगरी भविस्यमा कार्यक्रमहरु आउने आशा गर्न सकिन्छ ।*

नागरिकको दैनिकी, कृषि, पशुपालन, उर्जा, खानेपानीका श्रोत संरक्षण, विपद नियन्त्रण र सस्कृतिसंग वनको अभिन्न सम्बन्ध रहेको हुन्छ । पंचायतको सुरुवाती दिनहरुसम्म वन नै सरकारको प्रमुख आम्दानीको श्रोत भएको र आम नागरिकको जीविकोपार्जन वनमा नै आधारित हुने भएकोले “ हरियो वन, नेपालको धन“ भन्ने लोकोक्ति प्रचलित थियो । वनलाई छिटो कब्जा गर्न सकिने र वनबाट छिटो फाइदा लिन सकिने भएकोले नेपालमा राजनैतिक प्रणाली अस्थिर हुँदा वनमा सबैभन्दा बढी क्षति भएको देखिएको छ । २०३५/३८ मा पंचायतका विभिन्न शक्ति केन्द्रहरुको आडमा, २०४७/४८ मा नेपाली कांग्रेसको आडमा, २०५१/५२ मा एमालेको आडमा, २०५२-२०६५ मा माओबादीको नाममा र २०६३ यता बिभिन्न राजनैतिक दलहरुको आडमा नेपालको वन अतिक्रमण र वन फडानी भएको सबैको स्मरणमा छ । वनलाई आम्दानिको आधार बनाउन सकिने भएकोले वनका मुद्धाहरु पेचिला राजनैतिक मुद्धा बन्ने गरेका छन् ।

२०६३ पछी राजनैतिक र शासकीय रुपमा सबैभन्दा बढी किचलो वन क्षेत्रमा नै देखिएको छ । लामो समय वनको नेतृत्व कसले र कसरि गर्ने भन्ने विवाद भैरह्यो । संघियताको मर्म अनुसार वन ऐन र नियमहरु बन्न नसक्दा स्थानीयदेखि केन्द्रिय नेतासम्मले वनलाई आफूखुशी चलाउन प्रयत्न गरेको देखियो । सामुदायिक वनको विवाद, बैज्ञानिक वन व्यवस्थापनको किचलो, वनका खोला खोल्साको दोहन, संरक्षण क्षेत्रको व्यवसायिक प्रयोग जस्ता कुराहरुमा पछिल्ला २ दशक अलमलिए । वन सम्बन्धमा राजनैतिक दलहरु स्पष्ट बन्न नसक्दा यी सबै समस्याहरु देखिएका थिए । वनलाई नागरिकको मुद्धाको रुपमा खासै नदेखेका दलहरुले २०७४ को निर्वाचनमा भने वन सम्बन्धि आफ्ना महत्वाकांक्षी धारणाहरु अघि सारेका थिए । धरातलीय आवस्यकता भन्दा पनि दतु निकायका अवधारणापत्र जस्ता देखिएका घोषणापत्रमा रहेका वन सम्बन्धि प्रतिवद्धताहरु पुरा गर्न भने पछिल्लो ५ वर्ष दलहरु सक्रिय देखिएनन् । विगतमा गरेका प्रतिवद्धताहरु के

कति पुरा भए? वन क्षेत्रमा दलहरु र तिनका सरकारले के के प्रतिफल दिन सके भन्ने बताउन नसकेपनि अहिले दलहरुले वनसम्बन्धी केहि धरातलीय प्रतिवद्धताहरु भने अघि सारेका छन् ।

सत्ता गठबन्धनको प्रमुख घटक नेपाली कांग्रेसले वन सम्बन्धि छुट्टै नीतिहरु घोषणापत्रमा ल्याएको छैन । तर, जलवायु परिवर्तन, वातावरण र विपद व्यवस्थापन शिर्षक अन्तर्गत नेपाललाई सन् २०४५ मा शून्य कार्वन उत्सर्जन राष्ट्र बनाउने प्रतिबद्धता अनुसार हरित तथा उत्पादनशील प्रकृतिको आर्थिक विकास, वन क्षेत्रको संरक्षण, कार्बन क्रेडिटबाट आर्थिक उपार्जन, पर्यापर्यटन, अर्गानिक कृषि प्रणाली र खाद्य सुरक्षा, वनमा आधारित उद्योग व्यवसाय, जैविक विविधताको संरक्षण, स्वच्छ ऊर्जा प्रवर्द्धन, वातावरणीय सुरक्षा उपार्जनको अवलम्बन र प्रत्याभूतिमा आधारित प्रभाव अध्ययन गरेर मात्र भौतिक पूर्वाधार विकास तथा जलवायुजन्य जोखिमबाट भएको हानी नोक्सानीको आकलन गर्ने क्षमताको विकास गर्ने योजना अघि सारेको छ । कांग्रेसले वन क्षेत्रको संरक्षणका लागि ढाकेको क्षेत्र ४७ प्रतिशत पुऱ्याउने तथा करिव ४ हजार जति सिमसार, ताल र पोखरीको विशेष संरक्षण वन सम्पदा लगायत जैविक विविधताको विवेकपूर्ण उपयोग गर्ने प्रतिवद्धता गरेको छ । स्थानीय तहको चुनावी घोषणा पत्रमा ३५ भन्दा बढी वन सम्बन्धित प्रतिवद्धता अघि सारेको कांग्रेसको अहिलेको घोषणापत्रमा वनको विकास, वन व्यवस्थापन पद्धति, वातावरणिय सेवाको लागि भुक्तानी,वन व्यवस्थापन र उपयोगमा रैथानेलाई प्राथमिकता जस्ता कुराहरु यसमा छैनन् । वनका मुद्धामा स्थानीय निर्वाचनको घोषणापत्र भन्दा अहिलेकोको कांग्रेसको घोषणापत्र कमजोर देखिन्छ ।

माओबादी केन्द्रले घोषणापत्रमा वनलाई वातावरण संरक्षण र विपद व्यवस्थापन शिर्षक अन्तर्गत राखेर आफ्ना प्रतिवद्धताहरु सार्वजनिक गरेको छ । वनको पहुँचभन्दा बाहिर रहेका समुदायलाई वनको पहुँचमा ल्याउने, समुदायमा आधारित वन व्यवस्थापनलाई विस्तार गर्ने र वन संरक्षक तथा पालकले वनबाट आर्थिक लाभ लिन पाउने कुराको सुनिस्चितता गर्ने, वन र वातावरण संरक्षणमा योगदान दिएका व्यक्ति र समुदायलाई अनुदान दिने, चुरे संरक्षण, प्राकृतिक श्रोतको दिगो व्यवस्थापन र जलवायु परिवर्तनका असर न्यूनीकरणका लागि आदिवासी र स्थानीय समुदायलाई सहभागी गराउने जस्ता कुराहरु माओबादीको घोषणा पत्रमा छ । माओबादीको आडमा विगतमा धेरै वनक्षेत्र अतिक्रमणमा परेको छ. त्यस्ता वन क्षेत्रको अतिक्रमण, जैविक विविधताको उपयोग, वन उद्यम, शहरी वन, समृद्धिको लागि वन जस्ता विगतका उसका प्रतिवद्धताहरु भने यसमा अट्न सकेका छैनन् ।

समुदायमा आधारित वन व्यवस्थापनलाई प्रोत्साहन दिदै दिगो वन व्यवस्थापनमा आधारित प्रणालीमार्फत वनको उत्पादकत्वमा वृद्धि गरी काठ र काठजन्य वन पैदावरहरूमा देशलाई आत्मनिर्भर बनाउन पहल गरिने, जैविक विविधता र जलाधार क्षेत्रको संरक्षण र संवर्द्धन गरिने, प्राकृतिक स्रोतहरूको दिगो व्यवस्थापनका लागि समुदायसँग सहकार्य गरिने, विकासका कामहरूमा वातावरण संरक्षण, स्रोतको सुरक्षा लगायत विषयमा समुचित ध्यान दिइने साथै राष्ट्रिय निकुञ्ज, वन्यजन्तु आरक्षण एवं संरक्षण क्षेत्रहरूको दिगो व्यवस्थापनमा ध्यान दिइने कुरा नेकपा एकीकृत समाजबादिको घोषणापत्रमा छन् । यसैगरी पर्यावरण संरक्षणका लागि नदी-नाला, तालतलैया, सिमसार क्षेत्रहरू, पानीका मुहान, धार्मिक स्थल, खुला क्षेत्र, सडक र सार्वजनिक स्थलहरूको सरसफाई तथा सार्वजनिक, निजी जग्गा एवं वन जंगलका खाली क्षेत्रहरूमा वृक्षारोपण गर्ने कार्यलाई हरेक वर्ष अभियानका रूपमा सञ्चालन गरिने , हरित शहर निर्माण जस्ता कुरा समाजवादीको घोषणापत्रमा छन् । राष्ट्रिय प्रजातन्त्र पार्टीले स्थानीय निर्वाचनमा गरेकै प्रतिवद्धता दोहोऱ्याएको छ । एक स्थानीय तह, -एक स्थानीय बन तथा जलाधार व्यवस्थापन, सामुदायिक वनहरुलाई उपभोक्ताको आय आर्जनसंग जोड्ने, वन, वन्यजन्तु,जलाधार तथा जैविक विविधताको संरक्षण र विकासलाई राज्यको उच्च

प्राथमिकतामा राख्ने तिन बुंदे प्रतिवद्धता राप्रपाले अघि सारेको छ ।

एमालेले घोषणापत्रमा वन र वातावरणलाई छुट्टै शिर्षक अन्तर्गत राखेर प्रतिवद्धताहरु ल्याएको छ । न्यूनतम ४५ प्रतिशत हरियाली वन क्षेत्र सुरक्षित गर्ने र वन क्षेत्रलाई सघन वन क्षेत्रमा रूपान्तरण गर्ने, जैविक विविधता तथा पर्यावरण प्रणालीको दिगो संरक्षण गर्ने र जलवायु परिवर्तनका असर कम गर्ने गरी रणनीति तर्जुमा गर्ने, काठ उत्पादनमा आत्मनिर्भर बन्ने लक्ष्यका साथ वनको संरक्षण, विकास र उपयोग गर्ने , काष्ठ. गैरकाष्ठ र फलफूलका विरुवाहरू देशव्यापीरूपमा रोप्ने र संरक्षण गर्ने अभियान सञ्चालन गर्ने र यसका लागि योजनाबद्ध ढङ्गले नर्सरीको विकास गरिने घोषणा पत्रमा छ । त्यस्तै वन जङ्गलको संरक्षण, प्रवर्द्धन र सही उपयोग गर्दै वातावरणीय सन्तुलन कायम , जैविक विविधताको संरक्षण र विकास गरिने , वनक्षेत्रमा मानव-जनावरबिच द्वन्द्व र क्षति हुन नदिन संरक्षण र नियन्त्रणका योजना कार्यान्वयन गरिने, वन्यजन्तुको संरक्षण हुने, पारिस्थितिक प्रणाली (इकोसिस्टम) मा खलबल नहुने र जनधनको क्षति पनि नहुने अवस्था सिर्जना गरिने तथा वन्यजन्तुबाट भएको क्षति हेरी उचित क्षतिपूर्ति उपलब्ध गराइने कुरा एमालेको घोषणापत्रमा छन । दुर्लभ वन्यजन्तु तथा हुर्कन सयौं वर्ष लाग्ने जातिका रूखहरू भएको वन संरक्षणका लागि विशेष कार्यक्रम, वन, फलफूल, जडिबुटी तथा कृषिजन्य वनपैदावारको खेती विस्तार र बजार प्रवर्द्धन , एक सामुदायिक वन-एक वन उद्यमको अवधारणा कार्यान्वयन शहरी हरियाली प्रवर्द्धन, नमूना कृषि वन र निजि वन विकासमा सहयोग जस्ता कुराहरु घोषणापत्रमा परेका छन् । उद्योग, कलकारखाना र विकासका पूर्वाधार निर्माण गर्दा वातावरणमा प्रतिकुल असर नपर्नेगरी सहज रुपमा वनको उपयोग गर्ने व्यवस्था मिलाउने, सार्वजनिक निकायमा स्वदेशी काठ तथा फर्निचर प्रयोग गर्ने नीति लिने एमालेले बताएको छ । एमालेको घोषणापत्रमा सामुदायिक वन, लाभको वितरण, वातावरणिय सेवाको लागि भुक्तानीका कुराहरु परेका छैनन् । एमालेको सरकार बनेमा वनमा कस्तो व्यवस्थापन पद्धति अवलम्बन गर्ने भन्ने कुरा घोषणा पत्रमा स्पष्ट छैन । यसैगरी वनलाई काठ उत्पादन गर्ने क्षेत्रको रुपमा मात्र हेर्न खोजेको देखिन्छ । वनसँग जोडिएर आउने भूसंरक्षण, जलाधार संरक्षण, कार्बन व्यापार, जलवायु अनूकूलन विकासका कार्यक्रमहरु संचालन जस्ता प्रतिवद्धताहरु एमाले, कांग्रेस र समाजबादीका जस्तै छन् ।

ठुला दलहरुको घोषणापत्र अध्ययन गर्दा सबै दलहरु वनको संरक्षण र दिगो उपयोग गरिनुपर्ने कुराहरुलाई आत्मसात गरेको देखिएको छ । कृषि वन र निजि वन, शहरी वनबाट वन पैदावार उत्पादन र आपूर्ति गर्न सकिने भएपनि यस सम्बन्धमा दलहरु स्पष्ट छैनन् । वन हुनमा वन्यजन्तुको मुख्य भूमिका हुन्छ । तर वन्यजन्तुको संरक्षण , विकास र उपयोगको बारेमा दलहरुको ध्यान पुगेको छैन । अहिले मानव- वन्यजन्तु द्वन्द ठुलो समस्या बनिरहेको भएपनि सरकारको उचित ध्यान जान सकेको छैन । ठुला दलहरुले पिडित नागरिकको भोट तान्न मात्र मानव-वन्यजन्तु द्वन्दको निराकरण,व्यवस्थापन र क्षतिपुर्तिको कुरा उठाएका हैनन् र चुनाव पछी वाचाहरु सम्झिरहन सकेभने मानव र वन्यजन्तु दुबैले राहत पाउनेगरी भविस्यमा कार्यक्रमहरु आउने आशा गर्न सकिन्छ । संविधानले वन र वन्यजन्तुलाई प्रदेश र संघको अधिकारमा राखेकोले वन सम्बन्धमा दलहरुले गरेका वाचाहरुको ठुलो अर्थ रहन्छ । घोषणापत्रमा गरिएका प्रतिवद्धताहरु दलहरुले पुरा गर्न तम्सेलान् भन्ने खासै आशा त छैन । तरपनि यी दलहरु सदन र सरकारमा रहदा वनको दिगो व्यवस्थापन, जलाधार संरक्षण, वन्यजन्तुमुखी वन व्यवस्थापन, वन विकास, संरक्षण र उपयोगमा समुदायको सहभागिताको सुनिस्चितता, वनको बहुउपयोग, वन नभएका पालिकामा वनको विकास, वनमाथी सबै नागरिकको पहुँच वृद्धि जस्ता कार्यहरु गरेमा नेपालको वनको अवस्थामा सुधार, वनबाट समुदायको जीविकोपार्जनमा सहयोग , जैविक विविधता संरक्षण र वातावरण सन्तुलन जस्ता उपलब्धिहरु आउदो दशकमा पक्कैपनि हासिल हुनेछन् ।

yrkandel@gmail.com

# Forests in the Election Manifesto of the Political Parties

Yubaraj kandel

*Summary*

In recent decades, the issues of land conservation, watershed protection, carbon trading, climate adaptation, and development have become integral components of political manifestos in Nepal's elections. The commitments outlined in these manifestos, such as the implementation of various programs, mirror those of prominent parties like UML, Congress, and CPN Socialist. Upon closer examination of the manifestos of these major parties, it is evident that all parties recognize the importance of protecting and sustainably utilizing forests. However, there is a noticeable lack of emphasis on the conservation, development, and utilization of agricultural forests, private forests, urban forests, and wildlife. The escalating issue of human-wildlife conflict is a pressing concern that has not received adequate attention from the government or major political parties.The failure to address human-wildlife conflict resolution, management, and compensation in party manifestos suggests a prioritization of securing votes over addressing the needs of affected citizens. It is crucial that these parties follow through on their promises post-election to implement programs that provide relief for both humans and wild animals. Given that the constitution designates forests and wildlife as the responsibility of states and the union, the commitments made by political parties regarding forest management hold significant weight. While there may be skepticism regarding the fulfillment of these promises, there is potential for positive change if parties prioritize sustainable forest management, watershed protection, wildlife-focused forest management, and community involvement in conservation efforts. By promoting multi-use of forests, developing forests in non-forested municipalities, and increasing access to forests for all citizens, Nepal's forest conditions can be improved. These efforts will not only support the livelihoods of local communities but also contribute to the protection of biological diversity and environmental balance in the country over the next decade.

# वृक्षरोपणको दर्शनशास्त्र

## Philosophy of Plantation

युवराज कंडेल

*नेपालमा हरेक वर्ष सरकारी निकाय र संघसस्थाहरुले करोडौ खर्चेर २/३ करोड विरुवा रोपिरहेका छन् । पछिल्ला ३ दशकमा मात्र वनक्षेत्र, सार्वजनिक जमिन, निजि जमिन र सडक किनारमा गरिएका यस्ता वृक्षारोपणमा रोपिएका रुखहरु जोगिएको भए अहिलेसम्म नेपालको घना वनक्षेत्र बाहिर त्यो भन्दा ठुलो वन तयार भैसक्नुपर्थ्यो । तर अहिलेपनि वन क्षेत्रमा रुख विरुवाको संख्या घट्दै गएको, वस्तीहरुमा हरियाली घटिरहेको अनि नेपालका रैथाने वनस्पतिहरु हराउदै गएको जस्ता दृष्यहरु बढिरहेका छन् । हाम्रो वृक्षारोपणको दर्शन स्पष्ट नहुदा वृक्षारोपण कार्यक्रम प्रभावकारी हुन सकिरहेको छैन ।*

खालीठाउँमा रुखविरुवा रोप्नु वृक्षारोपण हो । नेपालमा जेठको अन्तिम सातादेखि फाल्गुनसम्म कतै न कतै वृक्षारोपण चलिरहेकै हुन्छ । कुनै दिवस, उत्सव वा विशेष अवसर पारेर सामाजिक सस्थाहरुले विरुवा रोप्ने गर्छन भने अचेल व्यक्तिगत उल्लासका अवसरमा पनि विरुवा रोप्ने चलन छ । नेपालमा वि.स. २००२ सालदेखि कार्यक्रमको रुपमा वृक्षारोपण गरेको पाइन्छ । दोश्रो पंचवर्षीय योजनादेखि नेपालका हरेक आवधिक योजना, वार्षिक योजना र वन मन्त्रालयका कार्य योजनाहरुमा वृक्षारोपणले स्थान पाएको देखिन्छ । सरकारी तथ्यांकलाई हेर्दा आ.ब. २०६६/६७ देखि २०७५/७६ सालको अवधिमा सरकारी निकायबाटमात्र १४ करोड ४५ लाख १९ हजार विरुवा उत्पादन भएको देखिन्छ । उत्पादित बिरुवाको सरदर मृत्युदर २० प्रतिशत कट्टा गर्दा उक्त बिरुवाबाट ७२ हजार हेक्टरमा वृक्षारोपण हुने देखिन्छ ( प्रतिहेक्टर १६०० विरुवाको दरले ) । तर वन मन्त्रालयले उक्त अवधिमा मुलुकभर ५ हजार ६ सय ६१ हेक्टर सरकारी र ९७ हेक्टर निजी जमिनमा ११ करोड ७४ लाख ११ हजारवटा बिरुवा रोपेको छ र यस कार्यमा सरकारले १ अर्ब ६५ करोड १५ लाख ९ हजार खर्च गरेको छ । पछिल्ला ५ आर्थिक वर्षमा सरकारी निकायले वृक्षारोपण प्रयोजनका लागि वार्षिक २ करोड भन्दा बढी विरुवा उत्पादन खरिद र वितरण गरेको पाइन्छ । सामुदायिक वन र निजि नर्सरीहरुले त्यसको आधा परिमाणमा विरुवा उत्पादन गरेको मान्ने हो भने नेपालमा वार्षिक ३ करोड भन्दा बढी विरुवाहरु वृक्षारोपण प्रयोजनका लागि उत्पादन हुने गरेको अनुमान गर्न सकिन्छ । यी विरुवाले वार्षिक १५ हजार हेक्टर भन्दा बढी जमिनमा वृक्षारोपण भएको हुनुपर्छ. तर नेपालमा वार्षिक कति क्षेत्रमा वृक्षारोपण भयो? कति विरुवा हुर्किए? रोपेका विरुवाहरुको अवस्था के छ भन्ने बारेमा कुनै निकायसंग पनि वास्तविक तथ्यांकहरु छैनन् ।

सामान्य दृष्टिले वृक्षारोपणलाई विरुवा रोप्ने कामको रुपमा हेरिएपनि यो पारिस्थितिक प्रणालीको निर्माण गर्ने र सामाजिक आवस्यकताहरुको परिपूर्ति गर्ने काम हो । विग्रदै गएको पारिस्थितिक प्रणालीको पुनर्भरण यसको प्राथमिकतामा पार्नुपर्छ । त्यसैले वृक्षारोपण गर्दा निकटतम पारिस्थितिक प्रणाली भित्र रहेका सास्कृतिक र जैविक विविधतासंगको तादाम्यतालाई ख्याल गर्दै त्यसै अनुसारका विरुवाहरु रोप्नु पर्छ । कहाँ विरुवा रोप्ने? कस्ता विरुवा रोप्ने? विरुवा किन रोप्ने ? र कसले रोप्ने तथा हुर्काउने जस्ता कुराहरुलाई निश्चित दर्शनले डोऱ्याउने गर्छ । यो नै वृक्षारोपणको

दर्शन हो । यस लेखमा यहि दर्शनको विवेचना गर्ने प्रयास गरिएको छ ।

**पारिस्थितिक पद्धतिको पुनर्भरण**

वृक्षारोपणको यो दर्शन अहिले विस्वब्यापी बनेको छ । रुख नासिएको वन क्षेत्र, रुख विरुवा नभएको अन्य क्षेत्रमा विरुवा हुर्काएर हराभरा बनाउने, पारिस्थितिक प्रणालिको संरक्षण गर्ने, पानीका श्रोत तथा जमिनको संरक्षण गर्ने उद्धेस्यले राज्यले वृक्षारोपणलाई आफ्ना कार्यक्रममा पार्ने गरेको छ । सामुदायिक वन समुहहरुले पनि यहि दर्शनले वृक्षारोपण गरेका हुन्छन् ।

**क्षति न्यूनीकरणको दर्शन**

रामशाहको चौधौ थितिले भन्छ “ पध्यारामा वन पालन रूष न भया देषि जैले षोज्यो तैले पनि रहदैन सुकी जान्छ वन ढेरै फाडिया पैरो पनी जान्छ ढेरै पैरो गया उपधाहा चल्छ उपधाहले षेत पनि लैजान्छ वन न भया गृहस्तिको कौनै काम पनि चल्दैन “ यसले रुख हुर्काउनुको दर्शन स्पष्ट पार्छ । प्राकृतिक प्रकोप रोक्न बोटबिरुवाले मुख्य भूमिका खेल्छन् । बाढी पहिरो नियन्त्रण गर्न, वन डढेलोलाई नियन्त्रण गर्न, रुख रोप्ने पुरानै चलन हो । रुख विरुवा नभए प्रकोप बढ्छ भन्ने चेत हाम्रा पुर्खामा भएकोले खानेपानीका श्रोतको नजिक, नदि किनार, वस्ती छेउछाउ विभिन्न किसिमका रुखहरु रोप्ने गर्दथे । अहिले वन्यजन्तुलाई वस्तीमा पस्न नदिन जैविक छेकवारको रुपमा बाँस रोप्ने, वन्यजन्तुलाई वनमा नै अड्याउन वन्य फलफुल रोप्ने गरेको समेत पाइन्छ ।

**आवस्यकताको सिद्धान्त**

जबसम्म घना वन थियो, वनमा आवस्यकता अनुसारका रुखहरु थिए, तबसम्म वनमा वृक्षारोपणको अभ्यास भएकै थिएन । वन हराउदै जाँदा मानिसका वन पैदावार सम्बन्धि आवस्यकताहरु पुरा गर्न कठिन भएपछी मानिसहरुले आवस्यकता अनुसार खाली जग्गामा वृक्षारोपण गरि रुख हुर्काउने कार्य सुरु गरेका छन् । निजि वन, नदि उकास जग्गाका वन, कृषि वन यस दर्शन अनुसार अघि बढेका छन्

**सौन्दर्यचेत**

मानव सभ्यताको विकासक्रम संगै सौन्दर्यचेत पनि विकसित भएको हो । आफ्नो वासस्थान वरिपरी, आफ्नो नगर भित्र थरिथरिका रुख विरुवाहरु लगाएर आफ्नो थलोलाई सुन्दर बनाउने गरेको इतिहास र पुरातत्व अध्ययन गर्दा भेटिन्छ । शासक र सम्भ्रान्त वर्गले विभिन्न ठाउँबाट बोट विरुवा ल्याएर दरबार र नगर सुन्दर बनाउने गर्दथे । यो परम्परा अहिलेपनि चलेको छ । नेपालमा भिमसेन थापा र जंग बहादुरले विदेशबाट विरुवा ल्याएर नेपालमा रोपेको पाइन्छ । राणा शासकहरुले काठामाण्डौका सडक किनारमा विदेशी विरुवा रोपेका थिए । अहिले शहर सौन्दर्यिकरणको नाममा सडक किनारमा आयातित विरुवाहरु रोप्ने प्रचलन बढेको छ । यसले हरियालिको स्थानीय मौलिकता गुम्दै गएको मात्र छैन, रुखप्रतिको स्थानीय आत्मियता पनि गुम्दै गएको छ । आयातित विरुवाहरु विस्तार हुदै जाँदा रैथाने विरुवाहरु नासिने क्रम बढेको छ ।

**सस्कृतिको आधार**

विस्वका हरेक सस्कृतिहरुको आधार जल र जंगल हुन् । अहिलेपनि मानिसका सास्कृतिक कार्य गर्नको लागि विभिन्न किसिमका रुखहरु नभई हुदैन । जन्मदेखि मृत्युसम्मका गतिविधिहरु गर्नको लागि चाहिने रुखहरु सामुदायिक वृक्षारोपणका प्राथमिकतामा पर्ने गर्छन् । हिन्दु समुदाय भएका स्थलमा जताततै बर, पिपल, समी, निम, बेलका रुखहरु भेटिनु, बौद्धमार्गिहरुको थलोमा पिपल चेपांग वस्तीमा चिउरी, थकाली वस्तीमा धुपिसल्लो भेटिनु यसैका उदाहरण हुन् ।

**धार्मिक कारण**

ऋग्वेदमा भनिएको छ “ यदि तिमि हजारौं वर्ष जीवनको फलहरु र खुशीको आनन्द लिन चाहन्छौ भने रुख रोप ।” ऋग्वेदको धेरै ठाउँमा नदि किनाराको संरक्षण र वृक्षारोपणको आवस्यकता उल्लेख गर्दै रुख र नदि किनारा विनाश गर्दा मानिसहरुले अकल्पनीय क्षति बेहोर्नुपर्ने उल्लेख गरेको पाइन्छ । जसले जीवनमा एकएकवटा बर पिपल र नीम, दुई

दुईवटा अनार र सुन्तला, पाँचवटा आँप र दशवटा फूलका विरुवाहरु रोपेमा कहिल्यै नर्क जानु नपर्ने कुरा बराह पुराण छन् । हिन्दुहरुले पिपललाई भगवानको रुपमा पुजा गर्ने भएकोले हिन्दु समाजमा बर पिपल र समिका चौतारीहरु जतातते पाइन्छन् । बुद्धका अधिकांश महत्वपूर्ण समय रुखमुनी र वनमा नै वितेकोले बौद्ध समाजमा रुखको उच्च स्थान रहेको पाइन्छ । रुख विरुवा हुर्कने समयमा वन प्रवेश गर्न नहुने ( वर्षावासको नियम ) , रुख रोप्दा स्वर्गको बाटो खुल्ने ( वनारोपा सुत्त) जस्ता कुराहरु बौद्ध दर्शनमा छन् । यिनै कारण बौद्धमार्गिहरुले वृक्षारोपण र संरक्षणलाई धार्मिक कार्यको रुपमा अवलम्बन गर्दै आएका छन् ।

**सामाजिक लहर**

पछिल्लो समयमा सामाजिक सस्थाका कार्यक्रममा वृक्षारोपण नछुट्ने कार्यक्रम बनेको छ । कुनै दिवस, उत्सव पारेर कुनै ठाउमा गएर विरुवा रोप्ने, फोटो खिचाउने, समाचार बनाउन लगाउने र रोपेका विरुवाको संरक्षणको बारेमा चासो नदिने प्रवृति बढ्दो छ । यहि कारणले गर्दा एउटै क्षेत्रमा हरेक वर्ष विभिन्न सस्थाहरुले वृक्षारोपण गर्न पाएको लज्जास्पद दृश्य हेर्ने अवसर मिलिरहेको छ । यस्ता गतिविधिले गर्दा वृक्षारोपण कार्यक्रम मनोरन्जनको विषय बनेको छ । अपवाद बाहेक सामाजिक सेवाको नाममा गरिने यस्ता वृक्षारोपणले जैविक विविधताको पुनर्स्थापनामा योगदान दिएको देखिदैन । अचेल जन्मदिन र त्यस्तै अन्य अवसरमा विरुवा रोपेर फोटो खिचाउने चलन छ । यसले राम्रै सस्कृति निर्माण गर्ने भएपनि विरुवाको सुरक्षाको ध्यान नदिदा यो काम पनि प्रचारमा सिमित हुने डर बढेको छ ।

**प्रचारमुखी**

आर्थिक वर्ष २०७६/७७ लाई वृक्षारोपण वर्षको रुपमा मनाउने र त्यो वर्ष ५ करोड विरुवा रोपिने नेपाल सरकारले घोषणा गरेको थियो । प्रधानमन्त्रीले त्यसको भव्य उद्घाटन समेत गरेका थिए । तर त्यो वर्ष सरकारी निकायले २ करोड ३४ लाख विरुवा उत्पादन, खरिद र वितरण गरेको सरकारी तथ्यांकले देखाउछ । वृक्षारोपण वर्षमा देशभर १२ हजार ४४० हेक्टर जमिनमा वनजन्य, जडिबुटी र फलफुल गरि ३ करोड ३३ लाख २३ हजार ४८१ विरुवा रोपिएको तथ्यांक भएपनि ति विरुवा कहाँ रोपिए ? र विरुवाको अवस्था कस्तो छ भन्ने कुरामा सरकार स्वयम् जानकार छैन । वन दशक २०७१-८० को सुरुवाती दिनहरुमा यस्तै भव्य वृक्षारोपण कार्यक्रम हुने गरेका थिए. स्थानीय, प्रदेश र संघीय सत्तामा बसेका व्यक्तिले लावालस्कर सहित यस्ता कार्यक्रम आयोजना गर्ने र वन कर्मचारीले पनि उनीहरुलाई खुशी बनाएर बजेट सक्ने कुरामा ध्यान दिने हुदा यस्ता भव्य कार्यक्रमले वृक्षारोपण कार्यक्रमको धज्जी उदाएका छन् ।

**व्यक्तिगत स्वार्थ**

वृक्षारोपण गर्ने निकायका जिम्मेवार व्यक्तिको लागि वृक्षारोपणले लाभ समेत दिने गरेको छ । विरुवा खारिद, ढुवानी र वृक्षारोपण कार्यक्रमको व्यवस्थापनमा आर्थिक चलखेल हुने र नक्कली बिल भौचर तयार गरि लाभ लिने प्रवृति रहेको भनि अखियारका पछिल्ला प्रतिवेदनमा किटान नै गरिएको छ । वन विभाग मातहतका कार्यालयहरुले स्थानीय विरुवाहरु उत्पादन गर्न सक्ने क्षमता हुदाहुदैपनि निजि नर्सरी र विदेशबाट महंगोमा विरुवाहरु ल्याएर वितरण गर्ने गरेको देखिन्छ । पछिल्लो दशकमा सरकारले वार्षिक रु.१७ करोड सम्म विरुवा खरिदमा र त्यसको एक तिहाई सम्म विरुवा रोप्न खर्च गरेको देखिन्छ । स्थानीय सरकार, उद्यानहरुले विदेशी विरुवा किन्नमै रुची देखाउने गरेका छन् । यस्ता धेरै व्यक्ति र निकायको लागि वृक्षारोपण अतिरिक्त आम्दानि गर्ने बाटो बनेको छ ।

**कानूनी व्यवस्थाहरु**

केहि राष्ट्रिय र अन्तर्राष्ट्रिय कानूनले गर्दा वृक्षारोपणको बाध्यात्मक अवस्था पनि छ । कतिपट स्थानीय टहहरुले गर निर्माण गर्दा विरुवा रोप्नुपर्ने नीतिगत व्यवस्था गरेका छन् । सडक निर्माण गरेपछि सडक निनारमा

वृक्षारोपण गर्नुपर्ने, हरित विद्यालय निर्देशिका अनुसार विद्यालय परिसरमा वृक्षारोपण गर्नुपर्ने, विकास आयोजनाले वन क्षेत्र प्रयोग गरि एउटा रुख मासे बापत ५ देखि २५ विरुवा रोप्नुपर्ने व्यवस्थाले वृक्षारोपणको परिमाणात्मक वृद्धिमा सघाउ पुगेको छ । तर कानूनी बाध्यताले गरिएका वृक्षारोपणले प्रतिफल दिन भने सकेका छैनन् ।

**अन्तर्राष्ट्रिय स्वार्थ**

पछिल्ला वर्षहरुमा वृक्षारोपणमा अन्तर्राष्ट्रिय स्वार्थ बढ्दै गएको छ । खासगरी हरितगृह ग्याँसहरू उत्सर्जन गरेर बदनामी कमाईरहेका विकसित देशहरुले कार्बन व्यापारको लोभ देखाएर नेपालजस्ता गरिब देशहरुमा वृक्षारोपणमा सघाइरहेका छन् । क्योटो प्रोटोकल जस्ता जलवायु परिवर्तन सम्बन्धि अभिसन्धिले धनि देशहरुलाई गरिब देशको वृक्षारोपणमा लगानी गर्नैपर्ने बाध्यता छन् । त्यसैगरी सिमा क्षेत्रमा रहेका संरक्षण क्षेत्रहरुलाई जोगाउनको लागि अर्को देशमा वृक्षारोपण गर्ने, वन हुर्काउने कामलाई सहयोग गरेको पाइन्छ । यसको राम्रो उदाहरण नेपाल भारत सिमा वारपारका संरक्षण क्षेत्र र जैविक करिडोरलाई लिन सकिन्छ ।

**कुटनैतिक अभ्यास**

अन्तर्राष्ट्रिय भ्रमणमा गएकाले भ्रमणको सम्झनालाई दिगो बनाउन विरुवा लगेर रोप्ने पुरानो कुटनैतिक प्रचलन रहेको छ । पाकिस्तानले विदेशी कुटनीतिक पाहुनाहरुले रोपेका विरुवाहरुको सुन्दर बगैचा नै बनाएको छ । नेपालको लुम्बिनी र त्रिभुवन पार्कमा यस्ता अभ्यासहरू भएको पाइन्छ । त्यसैगरी आपसी सम्बन्ध राम्रो बनाउनको लागि उपहार स्वरूप एउटा देशले अर्को देशलाई विरुवाहरु उपहार दिने चलन पनि छ । यस्तो चलनले विदेशी विरुवाहरुको विस्तारमा सघाउ पुगेको देखिन्छ ।

र अन्तमा,

नेपालमा हरेक वर्ष सरकारी निकाय र संघसस्थाहरुले करोडौ खर्चेर २/३ करोड विरुवा रोपिरहेका छन् । पछिल्ला ३ दशकमा मात्र वनक्षेत्र, सार्वजनिक जमिन, निजि जमिन र सडक किनारमा गरिएका यस्ता वृक्षारोपणमा रोपिएका रुखहरु जोगिएको भए अहिलेसम्म नेपालको घना वनक्षेत्र बाहिर त्यो भन्दा ठुलो वन तयार भैसक्नुपर्थ्यो । तर अहिलेपनि वन क्षेत्रमा रुख विरुवाको संख्या घट्दै गएको, वस्तीहरुमा हरियाली घटिरहेको अनि नेपालका रैथाने वनस्पतिहरु हराउदै गएको जस्ता दृष्यहरु बढिरहेका छन् । हाम्रो वृक्षारोपणको दर्शन स्पष्ट नहुदा वृक्षारोपण कार्यक्रम प्रभावकारी हुन सकिरहेको छैन । के का लागि? कहाँ? कस्तो किसिमको वृक्षारोपण गर्ने? त्यसबाट कसले कसरि लाभ प्राप्त गर्ने भन्ने स्पष्ट नगरी रमाइलोको लागि अनि काम देखाउनको लागि गरिने वृक्षारोपणले समय र पैसाको दुरुपयोग मात्र हुदैन, पारिस्थितिक प्रणाली र सामाजिक जीवनमा समेत नकारात्मक असर परिरहनेछ ।

yrkandel@gmail.com

# The Philosophy of Tree Plantation

Yubaraj Kandel

*Summary*

Tree plantation, the act of planting trees in vacant spaces, is a crucial practice that contributes to the enhancement of our ecological system. In Nepal, tree plantation activities take place from the last week of June to Falgun. Various social organizations engage in planting trees on specific days, festivals, or special occasions. Moreover, it has become a common practice to plant trees during personal celebrations as well. The tradition of tree plantation in Nepal dates back to 2002 BS when it was initiated as a formal program. While tree planting may seem like a simple task of putting plants into the ground, it serves a much greater purpose of establishing and maintaining a healthy ecological balance and meeting social needs. It is essential to prioritize the restoration of deteriorating ecosystems by planting trees that are suitable for the cultural and biological diversity of the surrounding environment. The philosophy of plantation guides decisions on where to plant, what species to plant, why to plant, and who should be involved in the process. Tree planting is not only about replenishing the ecosystem and minimizing damage but also about promoting aesthetic, cultural, and religious values. Unfortunately, in recent times, tree plantation efforts have been driven by personal interests, legal obligations, and the desire for media attention. Government agencies and organizations in Nepal are investing significant resources in planting millions of saplings each year.

However, without a clear philosophy guiding these efforts, the effectiveness of tree plantation programs is compromised. It is crucial to establish a clear understanding of the purpose and benefits of tree plantation. Planting trees without a strategic plan or consideration of the long-term impact can result in wasted resources and negative consequences for both the environment and society. By adopting a well-defined philosophy of tree plantation, we can ensure that our efforts contribute meaningfully to the preservation and enhancement of our natural world.

# नेपालमा कृषि वनको आवश्यकता

The Importance of Agroforestry in Nepal

युवराज कंडेल

*नेपालमा निजि वनको रुपमा कृषि वनलाई प्रवर्धन गर्ने नीतिगत व्यवस्था भएपनि व्यवहारिक रुपमा हेर्दा यो व्यवस्था अपर्याप्त र पक्षपातपूर्ण भएको देखिन्छ । धेरै जनताले जग्गा छुट्टाएर नै निजि वन बनाउने हैसियत राख्दैनन् तर उनीहरुले आफ्नो खेतवारीमा २/४ दर्जन रुख हुर्काएर आवस्यकता पुरा गर्न सक्छन । गाउँका सबै मानिसले यस्तो कार्य गर्दा खेत , कुलो बाटो, खोला छेउछाउ जोडिएर वनकै रुप लिएको हुन्छ । यसरि हुर्काएको वनलाई सरकारले वन नै मान्दैन र यहाँको वन पैदावार विक्री वितरण गर्न समेत निकै संघर्ष गर्नु पर्दछ ।*

नेपालमा वन पैदावार माथिको निर्भरता अत्यधिक छ । कृषि, पशुपालन, घर तथा फर्निचर निर्माण , जडिबुटी उर्जाको श्रोतको रूपमा वन पैदावारको अत्यधिक प्रयोग हुदै आएको छ । राष्ट्रिय जनगणना २०६८का अनुसार देशका ६४ प्रतिशत घर परिवारले खाना पकाउनको लागि दाउराको प्रयोग गर्दछन । अझ ग्रामिण क्षेत्रमा त दाउरा बालेरै खाना पकाउने परिवारको संख्या ७३.१३ प्रतिशत रहेको देखिन्छ । धेरै घरेलु उद्योग र होटेल व्यवसायले पनि इन्धनको श्रोतको रूपमा दाउरा नै प्रयोग गरेको पाइन्छ । जल तथा शक्ति आयोगका अनुसार हरेक वर्ष नेपालमा करिब ९० लाख टन तेल शक्ति बराबरको दाउरा (१ टन तेल शक्ति बराबर १.४५४२८८ टन कोइला शक्ति ) खपत भएको देखिन्छ । नेपालमा वि.सं. २०६६ यता वार्षिक औषत ५२ लाख क्यू फिट दाउरा नेपालका वन जंगलबाट आपूर्ति हुने गरेको वन मन्त्रालयको तथ्यांक छ । नेपालका वन जंगलबाट गुणस्तरीय काठ उपलब्ध हुन् नसकेकोले ठुलो परिमाणमा पूर्वी एशियाली देशहरुबाट समेत काठ ल्याउने गरिएको छ । काठ दाउराको ठुलो हिस्सा सरकारी वन र सामुदायिक वनबाट आपूर्ति हुदै आएको छ ।

निजि खेतबारीको रुख विरुवाबाट घाँस दाउरा आपूर्ति हुदै आएको भएपनि अधिकांश काठ, दाउरा र स्याउला घाँसको लागि सरकारी र सामुदायिक वनमा भर पर्नु पर्ने अवस्था रहेको छ । जसले गर्दा वन पैदावारको लागि सरकारी स्वामित्वको वन नै दोहन गर्नुपर्ने बाध्यता देखिएको छ । वन पैदावारको लागि वर्तमान अवस्थामा भैरहेको वन दोहनलाई घटाउनको लागि कृषि वन भरपर्दो विकल्प देखिएको छ ।

नेपालमा कृषिको परम्परागत अभ्यासहरु धेरै भेरहेका भएपनि कृषि वन सम्बन्धि छुट्टै नीतिगत र कानूनि व्यवस्था नगरी नीजि वनको रुपमा कृषि वन रहन सक्ने व्यवस्था भने छ । वन ऐन २०४९ले प्रचलित कानून बमोजिम कुनै व्यक्तिको हक पुग्ने निजी जग्गामा लगाई हुर्काएको वा संरक्षण गरिएको वनलाइ निजि वनको रुपमा उल्लेख गरेको छ । वन पैदावार उत्पादन, विक्री र उपभोग गर्ने उद्देश्यले आफ्नो जग्गामा कसैले व्यक्तिगत हक पुग्ने खेत, पाखोबारी, डिल जस्ता ठाउमा विरुवा हुर्काएर वन बनाएको छ भने त्यसलाई नै निजि वन भनिन्छ । व्यक्तिगत उपभोगको लागि थोरै जग्गा, खोलाको किनारा, खरबारी, कुलोको डिन, खेत छेउछाउ रुखबिरुवाहरु लगाई वनको रुपमा विकास वनलाई नीजि वन भनिएपनि कृषि वनको प्रकृति केहि फरक हुन्छ । कृषि र वनका कार्यको संयुक्त प्रयोग वा एकीकृत अभ्यासलाई कृषि वन भनिन्छ । कृषिबाली र पशुपालन कार्यलाई वन वा रूख प्रजाति सँगै हुर्काउने वा व्यवस्थापन गर्ने कार्यलाई कृषि वन प्रणाली भनिन्छ । कृषिवन प्रणालीमा रूखबिरुवा वा

काठजन्य उत्पादनसँग अन्य कृषि तथा पशुजन्य उत्पादनको अन्तरक्रिया हुने गर्दछ । वनक्षेत्रमा कृषि वन प्रणालीको अवलम्बन मुख्यतया वृक्षारोपण गरिएका बिरुवा हुर्काउन वा क्षयीकरण भएको वनक्षेत्रको पुनरुत्थान गर्ने उद्देश्यले गरिन्छ । कृषि वन कार्यमा रूखबिरुवाको तल जमिनमा कृषिबाली उत्पादन र रूख-बिरुवा संरक्षण कार्य सँगसँगै गरिन्छ । कृषि वन प्रणाली अवलम्बन गर्दा कृषि उत्पादनलाई प्रमुख तथा रूखबिरुवालाई सहायक बालीको रूपमा लिइएको हुन्छ ।

पर्यावरणीय , आर्थिक र सामाजिक दृष्टिले नेपालमा कृषि वन अत्यावस्यक देखिन्छ । अहिले तराईमा वन जंगल महेन्द्र राजमार्ग छेउछाउको क्षेत्रमा मात्र सिमित भएको छ । दक्षिणी क्षेत्रमा वन जंगल नभएको कारणले सो क्षेत्रका बासिन्दाहरु अत्यावस्यकीय वन पैदावारको उपभोग गर्नबाट बन्चित भएका छन् । उत्तरी क्षेत्रमा पनि बस्तीहरु घना भएको र वन पैदावारको माग निरन्तर बढिरहेकोले सिमित वनमा अत्यधिक चाप परिरहेको छ । अचेल तराइमा खेति नगरिएको प्रसस्त जग्गाजमिन छ । यस्तो जग्गामा कृषिवन विकास गर्न सकेमा वन पैदावारको सहज उपलब्धता हुने मात्र नभई जमिनको मरुभूमिकरण रोक्न, भूमिगत जल संचितिलाई बढाउन र नदि कटानलाई रोक्न ठुलो मद्दत पुग्ने देखिन्छ । कृषि वनले माटोको उर्वराशक्ती बढाउने , माटोको चिस्यान कायम राख्ने र लहरेबालीको विस्तारमा सहयोग गर्ने भएकोले किसानहरुले प्रत्यक्ष लाभ प्राप्त गर्न सक्छन् ।

अहिले पहाडी क्षेत्रबाट बसाइ सरेर उपत्यका र तराई क्षेत्रमा जाने प्रवृति निकै बढेको छ । मानिसहरु बस्न छोडेपछि पहिले खेति गरिने पाखोबारीमा बेकामे झारहरू भरिएका छन् । काठदाउरा, फलफुल, जडिबुटिको लागि उपयुक्त मानिने पहाडी क्षेत्रका भीरपाखामा झारपात मात्र भरिदा वातावरणिय अवसरहरु खेर त गैरहेका छन् नै जलाधार क्षेत्रको संरक्षण, पहिरो नियन्त्रणमा समेत समस्या उत्पन्न भएको छ । अहिले बाँझो रहेका पहाडी भीरपाखामा ठाउँ सुहाउदो रुखविरुवा लगाई त्यसको विचविचमा अदुवा, बेसार, पिडालु, तरुल र जडिबुटी हुर्काउन सकेमा पहाडी क्षेत्रलाई हराभरा, सुन्दर हुनुका साथै वन पैदावारको आपूर्तिमा सहजता आउने र जीविकोपार्जनमा सघाउ पुग्ने देखिन्छ ।

नेपालमा निजि वनको रुपमा कृषि वनलाई प्रवर्धन गर्ने नीतिगत व्यवस्था भएपनि व्यवहारिक रुपमा हेर्दा यो व्यवस्था अपर्याप्त र पक्षपातपूर्ण भएको देखिन्छ । धेरै जनताले जग्गा छुट्टाएर नै निजि वन बनाउने हैसियत राख्दैनन् तर उनीहरुले आफ्नो खेतवारीमा २/४ दर्जन रुख हुर्काएर आवस्यकता पुरा गर्न सक्छन । गाउँका सबै मानिसले यस्तो कार्य गर्दा खेत , कुलो बाटो, खोला छेउछाउ जोडिएर वनकै रुप लिएको हुन्छ । यसरि हुर्काएको वनलाई सरकारले वन नै मान्दैन र यहाँको वन पैदावार विक्री वितरण गर्न समेत निकै संघर्ष गर्नु पर्दछ । आफ्नो काठ दाउराको दैनिक आवस्यकता पुरा गर्ने कृषि वन र उद्यममुखी वन गरि २ किसिमले निजि वन बनाउन सकिने भएपनि सरकारी निकायको ध्यान व्यवसायिक निजि वनमा मात्र केन्द्रित भएको देखिन्छ । कृषि र वनसंग सम्बनिधत निकायहरुले अहिलेसम्म किसानहरुलाई कृषिवनको बारेमा बुझाउने र प्राविधिक सहयोग गर्ने काममा पछि परेका छन् । जसको कारणले किसानहरु कृषिवन तर्फ आकर्षित हुन सकेका छेनन् । अहिलेको मुख्य आवस्यकता भनेको कृषि उत्पादन वृद्धि गर्ने, घरायसी प्रयोजनको लागि वन पैदावारको आपूर्ति सहज बनाउने र वन पैदावारको लागि भैरहेको वन दोहन घटाउने हो । यो कार्यको लागि व्यवसायिक निजि वन भन्दा पनि कृषि निजि वन विकास आवस्यक हुन्छ । खासगरी ग्रामिण क्षेत्रका प्रत्येक परिवारलाई आफ्नो खेर गैरहेको जग्गा तथा खेतबारकिो विचमा केहि बोट विरुवा हुर्काउन प्रोत्साहन गर्ने, कृषि वन बनाउन चाहनेलाई आर्थिक र प्राविधिक सहयोग गर्ने र उनीहरुले हुर्काएका वन पैदावारको विक्री वितरणलाई सरलीकृत गरिदिने हो भने प्रत्येक वस्ती र खेतबारीभित्र वनहरू देखा पर्नेछन । ग्रामिण भेगका खेत, बारी र डिलमा रुखहरु हुर्काउन सकेमा जिविकापार्जनका अवसरहरु बृद्धि हुनुको साथै वनमाथिको निर्भरता कम गर्न, भू संरक्षण, जलाधार संरक्षण गर्न समेत फाइदा पुग्नेछ ।

# The Importance of Agroforestry in Nepal

Yubaraj Kandel

*Summary*

A significant portion of firewood in Nepal is currently sourced from government forests and community forests. While some grass and firewood are produced on private farms, the majority of the population still relies on government and community forests for these resources. Unfortunately, government-owned forests are often overexploited for forest production, particularly during Lent. Agroforestry has emerged as a sustainable solution to reduce the excessive exploitation of forests for production purposes. Agroforestry involves the combined use of agriculture and forestry practices. This integrated approach entails cultivating agricultural crops alongside tree planting and protection activities. In this system, agricultural production serves as the primary crop, with tree plants acting as secondary crops.The Terai region of Nepal boasts vast expanses of uncultivated land. By promoting agroforestry on these lands, we can not only enhance the availability of forest products but also combat land desertification, increase groundwater storage, and prevent river erosion. Farmers stand to benefit directly from agroforestry through improved soil fertility, enhanced soil moisture retention, and expanded rice crop cultivation. Imagine transforming the currently neglected hilly Bhirpakha region into a thriving hub for growing ginger, turmeric, yam, and herbs. This initiative would not only beautify the area but also contribute to the sustainable supply of forest products and support local livelihoods. By encouraging rural families to cultivate plants on their unused land, providing support for agroforestry initiatives, and streamlining the sale and distribution of agroforestry products, we can foster the growth of forests in every settlement. This holistic approach will create new livelihood opportunities, reduce reliance on forests, safeguard land resources, and protect water bodies.

# सडक हरीयालीमा देखिएको उदासीनता

## Attention of Stakeholders on Road Greenery

युवराज कंडेल

*शहरी क्षेत्रमा हरियाली कायम गर्ने मुख्य उपाय नै सडक हरियाली हो । सडक किनारमा हुर्केका बोट विरुवाले सडक किनारलाई सुन्दर मात्र बनाउदैनन, सवारीको कारणले हुने प्रदुषण नियन्त्रणमा समेत महत्वपूर्ण भूमिका खेलेका हुन्छन । सडक किनाराका विरुवाले मोटरगाडीबाट उत्सर्जित धुवा, धुलो र चर्को आवाजलाई रोकेर वरपरको वातावरणमा फैलिन दिदैनन, जसले गर्दा छेउछाउका वस्तीहरु स्वच्छ र स्वस्थ रहन पाउछन । सडक छेउछाउका रुखहरुले पैदल यात्रीलाई शितलता प्रदान गर्नुको साथै सडक किनारलाई भत्कन नदिई सडकको संरक्षण गर्दछ । शहरी क्षेत्रहरुमा चराचुरुंगीको बासस्थान सडक छेउछाउका रुख विरुवाहरु नै हुन् । सडक हरियालीको महत्व बुझ्रेर नै परापुर्व कालदेखि हाम्रा पुर्खाहरुले बाटो किनारमा रुखहरु रोप्ने, वरपिपल चौपारी बनाउने परम्परा चलाएका हुन् । । पुर्खाहरुले घर अगाडी बाटो किनारमा वर पिपल चौपारी बनाएको भएपनि नयाँ पुस्ताले घर बनाउदा घरको सुन्दरता ओझेलमा पर्ने ठानेर रुख विरुवा काट्ने र चौपारी भत्काउने कामलाई तिब्रता दिएकोले शहर र नगरोन्मुख क्षेत्रका बाटो किनाराका रुख विरुवाहरु नासिएका छन् ।*

कुनै ठाउलाई विकसित र सुबिधा सम्पन्न बनाउन सडक यातायातको मुख्य भूमिका रहन्छ । नेपालका प्रथम प्रधानमन्त्री भिमसेन थापाले नेपालको तराई जोड्ने हुलाकी मार्गको आधार तयार गरेको भएपनि नेपालमा राजमार्ग निर्माण हुन् त्रिभुवन राजपथ लाई नै कुर्नु परेको थियो । नेपालमा पक्कि सडकको विस्तृत निर्माण कार्य भने वि.सं. २०१८ सालमा महेन्द्र राजमार्गको शिलान्यास पछि मात्र सुरु भएको हो । अहिले नेपालका केहि हिमाली जिल्ला बाहेक सबै जिल्लाहरु राष्ट्रिय र स्थानीय सडक संजालले जोडिएका छन् । वि.सं. २०७२ फाल्गुणसम्म सडक विभाग अन्तर्गत  देशमा २७ हजार ९९० किमी सडक तयार भएको छ, जस मध्ये ११८९० किमी कालोपत्रे, ६४१९ खण्डास्मिथ र ९६८१ किमी कच्ची सडक रहेको छ । त्यसैगति स्थानीय निकाय, स्थानीय कार्यक्रम र जनसहभागितामा स्थानीय सडक निर्माण कार्य नेपालमा तिब्र गतिमा भैरहेको छ । अहिलेसम्म स्थानीय निकाय अन्तर्गत ३९ हजार ५१ कच्ची सडक, १२ हजार ५६१ किमी ग्राभेल सडक र १७६९ किमी कालोपत्रे सडक निर्माण भएको छ ।

हामीहरुमध्ये धेरैजनाले सडक भनेको गाडी गुड्ने ठाँउ मात्र हो भनेर बुझ्ने गरेका छौ । गाडी गुड्नको लागि फराकिलो र चिल्लो बाटोको कल्पनामा विकासप्रेमिहरु भुलिरहेका हुन्छन । सडक मानवीय सभ्यता, सस्कृतिको चिनारी र पर्यावरणीय सन्तुलन चक्रको संगम स्थल पनि हो । भनिन्छ, कुनै ठाउको समाज र सरकार कस्तो छ भन्ने जान्ने चाहना छ भने सडक र सडक किनारा हेरे मात्र पुग्छ रे । सडकमा दिनहुँ हजारौ मोटर गाडी कुद्ने , हजारौ मानिसहरु गाडीमा वा पैदल ओहोरदोहोर गर्ने भएकोले  सडकको भौतिक अवस्थाका साथै स्वच्छता र हरियालीलाई पनि सडकको अपरिहार्य अंग मानिन्छ ।

खासगरी शहरी क्षेत्रमा हरियाली कायम गर्ने मुख्य उपाय नै सडक हरियाली हो । सडक किनारमा हुर्केका बोट विरुवाले सडक किनारलाई सुन्दर मात्र बनाउदैनन, सवारीको कारणले हुने प्रदुषण नियन्त्रणमा समेत महत्वपूर्ण भूमिका खेलेका हुन्छन । सडक

किनाराका विरुवाले मोटरगाडीबाट उत्सर्जित धुवा, धुलो र चर्को आवाजलाई रोकेर वरपरको वातावरणमा फैलिन दिदैनन, जसले गर्दा छेउछाउका वस्तीहरु स्वच्छ र स्वस्थ रहन पाउछन । सडक छेउछाउका रुखहरुले पैदल यात्रीलाई शितलता प्रदान गर्नुको साथै सडक किनारलाई भत्कन नदिई सडकको संरक्षण गर्दछ । शहरी क्षेत्रहरुमा चराचुरुंगीको बासस्थान सडक छेउछाउका रुख विरुवाहरु नै हुन् । सडक हरियालीको महत्व बुझेर नै परापुर्व कालदेखि हाम्रा पुर्खाहरुले बाटो किनारमा रुखहरु रोप्ने, वरपिपल चौपारी बनाउने परम्परा चलाएका हुन् ।

शहरीकरण र विकासको सबैभन्दा नराम्रो असर अहिले सडक हरियालीमा देखिएको छ । बाटो ⁄गल्लिमाथि बाट नै विद्युतीकरण गरिएकोले सडक किनारका रुखहरु धमाधम काटिने क्रम जताततै बढिरहेको छ । पुर्खाहरुले घर अगाडी बाटो किनारमा वर पिपल चौपारी बनाएको भएपनि नयाँ पुस्ताले घर बनाउदा घरको सुन्दरता ओझेलमा पर्ने ठानेर रुख विरुवा काट्ने र चौपारी भत्काउने कामलाई तिब्रता दिएकोले शहर र नगरोन्मुख क्षेत्रका बाटो किनाराका रुख विरुवाहरु ठुटे भएका छन, वर पिपल चौपारिहरु भत्काइएका छन । पछिल्लो समयमा सडक निर्माण र विस्तार कार्य तिब्र भएको छ । खासगरी मुख्य राजमार्ग विस्तारको चपेटामा परेर रुखहरु नासिएका छन् । रुपन्देहीकै कुरा गर्दा सुनौली-बुटवल ६ लेन सडक बनाउने क्रममा सडक किनाराका निजि र सार्वजनिक गरि ४ हजार भन्दा धेरै रुखहरु काटिएका छन् र यो क्रममा सय भन्दा धेरै चौपारिहरु भत्काइएका छन । यो व्यापारिक मार्गलाई हरियालीयुक्त सडक बनाउने नक्शा रहेको भएपनि पहिलेको जस्तो सडक हरियाली यो क्षेत्रमा कदापि फर्कन सक्ने छैन ।

अहिले बुटवलको राजमार्ग चौराहा देखि दक्षिण जानकी नगर सम्म र भैरहवा क्षेत्रमा निर्माण भएको ६ लेख सडकको ग्रीनबेल्ट र डिभाइडरमा स्टोनिया, कपुर, निम, स्वामी जस्ता विभिन्न प्रजातीका करिव ३ हजार ४ सय विरुवा लगाइएको छ । निर्माण कार्य चलिरहेको बाँकी सडक खण्डमा अब ९ हजार ६ सय विरुवा लगाइने बताइएको छ । बुटवल देखि बेलहिया सम्मको सडक किनारमा ग्रिनरी बेल्ट बनाउन बिरुवा र तारजालीको लागि मात्र झन्डै १ करोड ८५ लाख खर्च हुने बताइएको छ । नक्शामा हेर्दा ६ लेन सडकलाई हरियालीयुक्त बनाउने काम राम्रै भएको देखिएपनि भैरहेका कामहरु हेर्दा यो सडक हरियालीयुक्त हुने शंका देखिन्छ । पहिलो कुरा त अहिले सडक किनारमा लगाईएका विरुवाहरु सडक पर्यावरण रक्षा गर्न सक्ने खालका छैनन । अर्को कुरा डिभाइडरहरु विरुवा हुर्कनको लागि उपयुक्त छैनन् । अझ उदेक लाग्दो कुरा के छ भने विचको ४ लेनलाई छुट्टाउने डिभाइडरको भूँई सिमेन्टेड ढलान गरि त्यसमा ९ ईन्च जति गिट्टी, बालुवा, माटो राखिएको छ र यसैमा अहिले वृक्षारोपण गरिएको छ । दुबो जस्ता सामान्य घाँस हुर्कनको लागि पनि उपयुक्त नभएको ठाउमा विरुवाहरुले कहाँबाट पानी र पोषण प्राप्त गरि हुर्कन सक्छन? यो कुरा सडक बनाउने र वृक्षारोपण गर्नेहरुले किन नबुझेका होलान?

बाटो किनारमा हरियाली हुनुपर्ने कुरालाई आधुनिक राज्यको अवधारणा आउनु अघि नै राज्यस्तरबाट पनि महत्व दिएको पाइन्छ । न्यायप्रेमी राजा भनेर चिनिने राजा राम शाहले साढे चार सय वर्ष पहिले नै ***"बाटाका रुख राषनु भन्या हुकुम भयो क्या अर्थले भन्या दुषी गरिब काज काम गरि थाकि औन्या बोझा बोकी हिडन्या अरु जो कोहि बाटामा हिडन्या मानिस पनि गर्मि हुन्छ भनि छाहारी बस्न खोज्छं भंना निमित्त बाटाका रुष पाल्नु बाटाका रुष जो काटतछ ५ रुपिया दण्ड गरिलिनु भन्या मर्जी भै थिति बाधी बक्सनु भयो "( रामशाहको तेह्रौ थिति )*** । राणाकालमा राना प्रधानमन्त्रीहरुले युरोपका शहरका सडकहरुको देखासिकी गर्दै काठमान्डौका सडकहरुमा विदेशबाट ल्याएका विरुवाहरु रोपेका थिए, जुन कार्यलाई पंचायातिकलामा पनि निरन्तरता दिइएको थियो । नेपालमा आधुनिक सडक निर्माण सुरु भए संगै सडक हरियालीलाई महत्व दिएको देखिन्छ । सार्वजनिक सडक ऐन २०३१ को दफा १६ मा सडक विभागले सार्वजनिक

सडकको दायाबाया रुख लगाउनु पर्ने र ति रुखहरुको रेखदेख र संरक्षण गर्ने कर्तव्य सम्बन्धित गाविस, नगरपालिकाको हुने व्यवस्था गरिएको छ । सडक किनारका रुखहरु कसैले काटेमा वा नासेमा दुई हजार रुपियाँ सम्म जरिवाना गरिने व्यवस्था यो ऐनको दफा ३०(२)मा उल्लेख गरिएको छ । त्यसैगरी स्थानीय स्वायत्त शासन ऐन २०५५ को दफा २५ का साथै दफा ९३ र दफा ९६मा सडकलाई हरियालीपूर्ण र स्वच्छ राख्ने काम स्थानीय निकाय ( गाविस र नगरपालिका) को हुने उल्लेख गरिएको छ । सडक किनारामा हरियाली बनाउने काम स्थानीय निकायहरुको हुने कानूनी व्यवस्था भएपनि यी निकायहरुले सडक हरियालीलाई प्राथमिकतामा राखेका छैनन । सडक किनारा र चोकका रुख र चौपारिहरु मासेर निजि र सार्वजनिक निर्माण कार्यहरु गर्दा पनि गाविस र नगरपालिकाले आँखा चिम्लेर सहमति प्रदान गरिरहेका छन्, यस्ता कार्यहरु रोक्न प्रयास गरेका छैनन् । मानिसहरुमा जतिसुकै वातावरणिय सचेतना बढेको भएपनि उनीहरु आफ्नो घर छेउछाउ सडक किनारमा रुख विरुवा हुर्काउन इच्छुक बन्न सकेका छैनन । फोहरमैला व्यवस्थापन ऐन २०६८ को दफा ३८ ले सडकमा फोहर फाल्न नपाइने व्यवस्था गरेपनि मानिसहरुले सडक किनारामा रुख रोपेकै ठाँउमा फोहर फ्याक्ने र फोहर जलाउने कामहरु गरेर विरुवा हुर्कन बाटै रोकिरहेका छन् । शहरका केहि भित्रि बाटो किनारमा हरियाली बनाउने अभियान चलाएर वृक्षारोपण गर्ने काम नभएको होइन , तर नियमित गोडमेल र मलखादको कमि , मानवीय र सवारी साधनले पुऱ्याएको बाधाका साथै छाडा पशु चौपायाहरुको कारणले सडक किनारका विरुवाहरु रुख बन्न नपाइ हराईरहेका छन् ।

सडक किनाराको हरियाली सडक र वस्तीहरुलाई सुन्दर र स्वस्थ बनाउने उपाय हो । हरियालीले यात्रुहरुलाई शितलता प्रदान गर्नुका साथै शहरी क्षेत्रमा चराचुरुङ्गीहरुलाई आश्रय प्रदान गर्दछ । शहरीकरण तिब्र भैरहेको अवस्थामा शहरहरुलाई हराभरा बनाउनको लागि सडक किनारामा रुख विरुवाहरु हुर्काउनु एक मात्र उत्तम उपाय हो । सडक ऐन अनुसार सडक किनारा हरियालियुक्त बनाउने दायित्व सरकारको भएपनि सडकका उपभोक्ता र सडक किनारका बासिन्दाहरु हामीहरु नै भएकोले सडक किनारलाई हराभरा बनाउने कर्तव्य हामी नागरिकको नै हो । सडक छेउका प्रत्येक घरले सडक किनारमा एउटा विरुवामात्र हुर्काउने हो भने पनि सम्पूर्ण सडकहरु हरियालीपूर्ण हुन् सक्छन । स्थानीय निकायले वस्ती विकासको स्वीकृति दिदा सडक हरियालीलाई अनिवार्य गराउने, पुराना चौतारी र सडक किनाराका रुखहरुको संरक्षणलाई प्रोत्साहन गर्ने कार्यक्रम संचालन गर्नुको साथै सडक हरियाली प्रतिकुल कार्य गर्नेहरुलाई कारवाही गर्ने हो भने सडक किनारा मात्र नभई वस्ती र शहरहरु स्वच्छ र सुन्दर हुन सक्नेछन ।

yrkandel@gmail.com

# Attention of Stakeholders on Road Greening.

Yubaraj Kandel

*Summary*

To gain insight into the societal and governmental values of a location, one need only observe the condition of its streets and roadsides. Cleanliness and greenery are essential components of well-maintained roads, with street greening serving as a primary method for achieving this in urban areas. Not only do plants along the roadside enhance the visual appeal of the area, but they also play a crucial role in mitigating pollution generated by vehicles. Trees lining the road provide shade for pedestrians and prevent erosion, while also serving as habitats for birds in urban environments. The tradition of planting trees along roadsides and creating roundabouts dates back to ancient times, underscoring the significance of road greening in our heritage. However, the detrimental impacts of urbanization and development have posed challenges to this practice. Despite legal provisions assigning responsibility for roadside greening to local authorities, this task has not been given the priority it deserves. Municipalities have failed to intervene when trees are cut down for construction projects, further exacerbating the decline of green spaces along roads. To address this issue, it is imperative for local bodies to enforce regulations mandating street greening as part of any development plans, particularly in areas with existing neighborhoods and roadside trees. Those who disregard these guidelines should face consequences to ensure compliance and preserve the beauty of our streets and cities. By fostering a culture of environmental stewardship, we can transform our urban landscapes into clean and vibrant spaces. Individual action is also crucial in promoting road greening. While the government bears responsibility for maintaining greenery along roads, residents living in proximity to these areas must also contribute to this effort. If each household plants just one tree or plant along the roadside, the collective impact can significantly enhance the overall greenery of our roads. The practice of street greening is not only a reflection of our values as a society but also a practical solution to combatting environmental degradation in urban areas.

# शहरी वन किन र कसरी ?

## Needs and Measures of Development of Urban Forests

युवराज कंडेल

*अहिले शहरहरु कुरूप, प्रदुषित र अस्वस्थ देखिनुको एउटा प्रमुख कारण शहरमा बोटविरुवा कम हुनु हो । शहरहरु कंक्रिटको जंगल बनिरहदा शहरी सुन्दरता र दैनिक जीवनमा समेत नकारात्मक असर परिरहेको छ । शहरलाई मानव बसोबासयोग्य बनाउने र शहरलाई जीवन दिनको लागि शहरमा हरियाली फर्काउनु आवस्यक भैसकेको छ । नयाँ शहरहरुमा अझै खालि स्थानहरु भएको शहरी वन विकास निर्देशिशका अनुसार शहरी वन बनाउन सकिन्छ । पुराना शहरहरुमा शहरी वन बनाउन सम्भव नभएपनि सडक किनारा, व्यक्तिगत आवास क्षेत्र र सावजनिक स्थलहरुमा रुखहरु हुर्काएर शहरमा हरियाली ल्याउन सकिन्छ ।*

आवस्यक भौतिक पुर्वाधारहरु नभएपनि बाक्ला वस्तीहरुलाई नगरपालिका घोषणा गर्ने लहर पछिल्ला समयमा चलेकोले नेपालमा शहरी क्षेत्रको संख्या ह्वात्तै बढेको छ ।राष्ट्रिय जनगणना २०७८ अनुसार नेपालमा २९३ वटा नगरपालिकाहरुमा देशको ६३.१९ प्रतिशत जनसंख्या बसोबास गरेको छ । जनसंख्याकै कुरा गर्दा अहिले नेपालको नगरपालिकामा बस्ने जनसंख्या एशियाको शहरी जनसंख्या (४६%) भन्दा धेरै अर्थात चीनको शहरी जनसंख्या (६३.५६%) कै हाराहारीमा पुगेको छ । भौतिक श्रोतसाधन नभएको क्षेत्रलाई नगरपालिकाहरू घोषणा गर्ने र योजनाविहिन ढंगले वस्तीहरु निर्माण हुदै शहर बन्ने काम नेपालमा भैरहेकोले नेपालका शहरहरु अव्यवस्थित कंक्रिटको जंगलमा परिणत भैरहेका छन् ।

नेपालका साना(ठूला कुनैपनि शहरहरु योजनावद्ध नगर हैनन् । घरहरु भरिदै जाँदा वस्तीहरु बाक्लिएर बनेका क्षेत्रहरु नै अहिलेका शहरहरु भएकोले नेपालमा शहरीकरण निकै अव्यवस्थित किसिमको छ । अव्यवस्थित शहरिकरणको चपेटामा परेर खेतीयोग्य जमिन मात्र विनाश भएको छैन, शहर भित्रका खुल्ला ठाउँ, खोला, नदि तालतलैया र नहर/कुलोका डिलहरु समेत हराएका छन् । खुला ठाउँ नराखी घर बनाउने र सार्वजनिक जमिनहरु मास्ने प्रवृति शहरमा बढ्दै गएकोले शहरमा बोटविरुवाहरुको संख्या निरन्तर घटिरहेको मात्र छैन सडक निर्माण र विद्युतिकरणले गर्दा शहरको हरियाली लोप भैरहेको छ । शहरहरुमा रुख विरुवाहरु मासिदै जादा शहरी सुन्दरतामा ह्रास आएको मात्र छैन पर्यावरणीय असन्तुलन समेत सिर्जना भएको देखिन्छ । शहरी वायु प्रदुषणमा वृद्धि, भूमिगत जल संचितिमा कमि , शहरी पशुपालकलाई घाँसको अभाव जस्ता समस्याहरु प्रत्यक्ष रुपमा देखिएका

छन् । शहरमा पुराना रुखहरु मासिने र नयाँ रुखहरु हुर्काउन कसैले चासो नदिदा चरा चुरुङ्गीहरुको वासस्थान विनाश हुदै जादा शहरमा चराहरुको चिरविर सुनिन छोडेको छ । शहरमा शितलता र सुन्दरता प्रदान गरिरहेका चौपारिहरु नाशिदै जादा धार्मिक र सास्कृतिक परम्परा जोगाउन समस्या भैरहेको छ । शहरमा रुख विरुवाहरु हराउदै जादा वन पैदावारको लागि शहर छेउछाउका वनहरुमा अत्यधिक चाप बढेको छ । देशको शहरीकरण प्रक्रियामा यस्ता समस्याहरु देखिएकोले शहरहरु अस्वस्थ र कुरूप बन्दै गएका छन् ।

अहिले विस्वभरी  शहरहरुमा देखिएको हरियाली अभाव हटाउन र शहरहरुलाई सुन्दर, स्वच्छ र जीवित राख्नको लागि शहरी वन विकासलाई मुख्य उपाय मान्ने गरिन्छ । विस्वमा १५ औं शताब्दीतिरै ग्रीक, इजिप्ट, चीन, पर्सिया, रोम जस्ता ठाउँका शहरमा राजा-महाराजाले शहरी बगैंचा निर्माण गरिसकेका थिए । नेपालमा राणाहरुले विदेशको सिको गर्दै काठमाण्डौ उपत्यकाका केहि सडक छेउछाउ रुख रोप्नुका साथै विभिन्न ठाउँबाट विरुवा संकलन गर्न लगाएर आफ्नो दरवारमा बगैचाहरु बनाएको ईतिहास पाइन्छ । राणा प्रधानमन्त्री जंग बहादुरले बाटो छेउछाउका रुख काट्नेलाई ४ रुपैया जरिवाना गर्ने कानूनी व्यवस्था समेत गरेका थिए ( मुलुकि ऐ्न, रुख काट्न्याको महल नं.२ ) उपत्यकालाई हराभरा बनाउने केहि योजनाहरु ल्याइएपनि शहरी हरियालीलाई संरक्षण र प्रवर्द्धन गर्ने कार्यक्रमहरु लामो समय सम्म आएको पाइदैन । नगरपालिकाहरुको फैलावटसंगै नेपालका विभिन्न भूभागमा रहेका नगरपालिकाहरुले सडक छेउछाउ वृक्षारोपण गर्न सुरु गरेपनि शहरी हरियाली संरक्षण र उपयोगमा चासो दिएको देखिदैन ।

शहरी वन विकासलाई नीतिगत रुपमै व्यवस्थीत ढंगले संचालन गर्नको लागी वन तथा भू-संरक्षण मन्त्रालयले चैत्र २०७२ मा शहरी वन विकास कार्यविधि निर्देशिका, २०७२को मस्यौदा तयार गरेको थियो । यो निर्देशिकाले शहरी वनलाई निजी शहरी वन , सामुहिक शहरी वन , संस्थागत शहरी वन , स्थानिय निकायद्वारा व्यवस्थित शहरी वन गरी चार किसिमबाट बर्गीकरण गरेको थियो । यो निर्देशका अनुसार शहरी वन लगाउन शहरी क्षेत्र भित्र वा आसपासमा रहेको व्यक्ति वा सरकारी तथा गैरसरकारी कम्पनी वा संघ संस्थाको हकभोग भएको खाली जग्गा, सार्वजनिक खुला चौर, पर्ती जग्गा, नदी, खोलानालाको किनार, सडक किनारा, पोखरी तथा ताल तलैयाको किनारा, सांस्कृतिक तथा धार्मिक क्षेत्र एवं खेल मैदान वरिपरि रहेको खाली जमीन उपयोग गर्न सकिने उल्लेख थियो ।

वन नीति २०७५ मा शहरी वन विकास र प्रवर्द्धनको लागि राज्यले सहयोग गर्ने कुरा उल्लेख छ । त्यसैगरी वन ऐन २०७६ को दफा ३८ तथा लुम्बिनी प्रदेशको वन ऐन २०७८ को दफा ७३ मा स्थानीय तहले आफ्नो क्षेत्र भित्रको शहरी क्षेत्र तथा वस्तिभित्र रहेका सार्वजनिक सडक तथा पार्क जस्ता स्थानहरुमा आफैले वा कुनै संघ सस्था वा निजि क्षेत्रसंगको साझेदारीमा सहरी वनको विकास तथा व्यवस्थापन गर्न सकिने व्यवस्था गरिएको छ । स्थानीय सरकार संचालन ऐन २०७४ को दफा ११

उपदफा २ मा स्थानीय क्षेत्रको हरियाली प्रवर्द्धन गर्ने अधिकार र जिम्मेवारी पालिकालाई प्रदान गरिएको छ । यी बाहेक संघीय सरकार र प्रदेश सरकारका नीति कार्यक्रम र वार्षिक बजेट बक्तव्यमा समेत शहरी हरियाली प्रवर्द्धन, सार्वजनिक जग्गामा वृक्षारोपण, सहर सौन्दर्यिकरण, सडक हरियाली लगायतका शिर्षकमा शहरी वनलाई प्रवर्द्धन गर्ने कार्यक्रमहरु आइरहेका छन् । हरीयाली कम भएका पालिकामा हरीयाली प्रवर्द्धन गर्नको लागी नेपाल सरकारले शहरी वन विकास कार्यक्रम सन्चालन कार्यविधि २०७७ ल्याएको छ । यो कार्यविधिले पालिकाहरुले नेपाल सरकारसंगको साझेदारीमा शहरी वन विकास गर्न चाहेमा नेपाल सरकारले आर्थिक तथा प्राविधिक सहयोग उपलब्ध गराउने व्यवस्था गरेको छ ।

अहिले धेरै शहरी क्षेत्रमा सडक किनारामा विरुवा हुर्काउने लहर चलेको भएपनि कुन ठाउमा कस्तो रुख लगाउने भन्ने कुरामा ध्यान दिएको पाइदैन । वन मन्त्रालयले हावापानी र भौगोलिक वनावटको आधारमा पहाडी शहरको लागि ८२ प्रजाति र तराईका लागि ५० प्रजातिका वनस्पतिहरु शहरी वनको लागि उपयुक्त हुने सिफारिस गरेको छ । शहरमा रुख हुर्काउदा शहरी सुन्दरता र वातावरणिय स्वच्छताको रक्षा हुने र मानवीय आवस्यकता समेत परिपुर्तिमा सहयोग हुने खालका रुखहरुलाई प्राथमिकता दिनु आवस्यक छ । सडक किनारमा शोभा र शितलता दिने विरुवाहरु तथा चौर, पार्क , विद्यालय परिसर र अन्य सार्वजनिक स्थलमा फलफुल र लामो समय सम्म टिक्ने सदावहार वनस्पतिहरु रोप्नु उचित मानिन्छ । शहर भित्र रहेका कुलो, नहरको डिल तथा नदि किनारमा काष्ठ प्रजातिका रुखहरु हुर्काउन सकेमा दिर्घकालिन हरियाली कायम हुनुको साथै घासपात र काठ दाउराको आपूर्तिलाई सहज बनाउन सकिन्छ । वनकै रुप दिनको लागि रुख रोप्ने स्थानको अभाव भएकाहरुले घरको छतमा गमलाका विरुवाहरु रोपेमा पनि शहरलाई हरियालीयुक्त बनाउन मद्दत पुग्छ ।

हरियाली मानव जीवनको आधार हो । अहिले शहरहरु कुरूप, प्रदुषित र अस्वस्थ देखिनुको एउटा प्रमुख कारण शहरमा बोटविरुवा कम हुनु हो । शहरहरु कंक्रिटको जंगल बनिरहदा शहरी सुन्दरता र दैनिक जीवनमा समेत नकारात्मक असर परिरहेको छ । शहरलाई मानव बसोबासयोग्य बनाउने र शहरलाई जीवन दिनको लागि शहरमा हरियाली फर्काउनु आवस्यक भैसकेको छ । नयाँ शहरहरुमा अझै खालि स्थानहरु भएको शहरी वन विकास निर्देशिका अनुसार शहरी वन बनाउन सकिन्छ । पुराना शहरहरुमा शहरी वन बनाउन सम्भव नभएपनि सडक किनारा, व्यक्तिगत आवास क्षेत्र र सावजनिक स्थलहरुमा रुखहरु हुर्काएर शहरमा हरियाली ल्याउन सकिन्छ । शहरी पूर्वाधार निर्माण गर्दा अनिवार्य रुपमा हरित पेटी (ग्रिन बेल्ट) राख्नु पर्ने र घर निर्माण गर्दा घर अगाडी केहि जमिन खुला छोडेर कम्तिमा दुईवटा विरुवा रोप्नु पर्ने व्यवस्था गर्ने र अहिले भैरहेका चौपारी र पुराना रुख विरुवाहरु जोगाउने कार्य गर्ने हो भने सबै शहरहरुलाई स्वच्छ र हराभरा राख्न सकिनेछ ।

*बुटवल टुडे, २०८० श्रावण ८*

yrkandel@gmail.com

# Needs and measures of development of urban forests

Yubaraj Kandel

***Summary***

Urban forests play a crucial role in the development of cities, providing numerous benefits to the environment and the well-being of its residents. The rapid urbanization in Nepal has led to the transformation of cities into chaotic concrete landscapes, devoid of greenery and open spaces. This unplanned urbanization has resulted in the loss of arable land, rivers, and canals, further exacerbating the environmental degradation.The decline in green spaces within cities not only diminishes the aesthetic appeal of urban areas but also contributes to ecological imbalances. The lack of trees and vegetation in cities leads to increased pollution, poor air quality, and an overall unhealthy living environment. To address these issues and enhance the quality of life in urban areas, it is imperative to prioritize the development of urban forests. Creating urban forests in new cities, following established guidelines, can help mitigate the adverse effects of rapid urbanization. Additionally, efforts can be made to introduce greenery in existing cities by planting trees along roadsides, in residential areas, and public spaces. Incorporating green belts in urban infrastructure projects and preserving existing trees and shrubs are essential steps towards maintaining a clean and green environment in all cities. By promoting the growth of urban forests and prioritizing green spaces in urban planning, cities can not only improve their aesthetic appeal but also enhance the overall well-being of their residents. It is crucial for policymakers, urban planners, and residents alike to recognize the importance of urban forests in sustainable urban development and take proactive measures to ensure the preservation and growth of green spaces in cities.

# सुस्त कबुलियत वन

## Leasehold Forest at Slow Pace

युवराज कंडेल

*वनसँग नजिकको साइनो रहेका स्थानीय विपन्न समुदायलाई वन संरक्षणमा मात्र लगाउदा उनीहरुको जीविकोपार्जनमा सघाउ पुग्दैन । विपन्न वर्गलाई वनको केहि हिस्सा सुम्पेर वनको हैसियत सुधार्दै वन भित्र जडिबुटी खेति, गैह्रकाष्ठ वन पैदावारको उत्पादन, फलफुल खेति, वनबाली, तरकारी, घाँस उत्पादन गर्न र विक्री गर्न लगाउने, कबुलियत वनभित्र वन्यजन्तु पालन र पर्यापर्यटन जस्ता कामहरु गर्न लगाउने हो भने वन संरक्षण त हुनेछ नै स्थानिय वासिन्दाको आयआर्जनमा सहयोग समेत पुग्नेछ ।*

नेपाल सरकारले वन व्यवस्थापनको क्रममा राष्ट्रिय वनको कुनै भाग व्यक्ति वा संघ संस्थालाई वन पैदावार उत्पादन गरी बिक्री गर्ने, औद्योगिक कच्चा पदार्थ उत्पादन गर्ने, बनको संरक्षण र विकास हुने गरी पर्यटन व्यवसाय सञ्चालन गर्ने, कृषि वन कार्य सञ्चालन गर्ने तथा कीटपतङ्ग वा वन्य जन्तुको फर्म सञ्चालन गर्ने प्रयोजनको लागि खास अवधिको निमित्त तोकिएको दस्तुर लिएर हस्तान्तरण गरिएको वन नै कबुलियती वन हो । वन स्रोतको दीगो एवं बुद्धिमत्तापूर्ण उपयोगबाट निरपेक्ष गरिबीको रेखामुनि रहेका जनताको जीवनस्तरमा गुणात्मक सुधार ल्याउने, वन पैदावारजन्य कच्चा पदार्थहरुको प्राप्तिलाई सुनिश्चित तुल्याएर औद्योगिक विकासलाई अग्रगति प्रदान गर्ने र पर्या-पर्यटन लाई प्रवर्द्धन गर्नेजस्ता अवधारणाहरुका साथ कबुलियती वन व्यवस्थापन सम्बन्धी कार्यक्रम विगत तीन दशक देखि सञ्चालनमा आएको छ ।

जग्गा जमिन नभएका विपन्न समुदायको लागि वनजंगल जीविकोपार्जनको मुख्य आधार हो । शदियौदेखि वनजंगलको निर्वाध उपयोग गर्दै आएका विपन्न समुदायका मानिसहरु सरकारले निजि वन राष्ट्रियकरण गरेपछि र विभिन्न वनक्षेत्रलाई सरक्षित क्षेत्रको रुपमा विकास गर्दै लागेपछि वनको उपयोग गर्नबाट वन्चित रहदै आएका थिए । सरकारले सपूर्ण वनलाई संरक्षण गर्न र विग्रदै गएका वनको हैसियत सुधारगर्न नसकेको अवस्थामा विपन्न समुदायलाई विग्रेको वनको केहि हिस्सा संरक्षण र उपयोग गर्न दिएर विपन्नवर्गलाई जीवनयापनमा सघाउनुको साथै वनको हैसियत समेत वृद्धि गर्ने उद्धेस्यले नेपालमा कबुलियत वनको सुरुवात गरेको देखिन्छ । विगतमा वन ऐन २०१८ को आधारमा कबुलियत वन नियमावली २०३५ ल्याइएको थियो, जसलाई २०४६ सालमा संसोधन गरि सरकारले कबुलियत वन सम्बन्धि आयोजना तयार गरि आयोजनाको आधारमा व्यक्तिलाई बढीमा ५० वर्ष र संघसस्थालाई बढीमा ९९ वर्षका लागि कबुलियत वन सुम्पन सकिने व्यवस्था गरेको थियो । वन व्यवस्थापनमा आमूल परिवर्तन ल्याउने वन विकास गुरुयोजना, २०४६ मा राष्ट्रिय वनको कुनै भागलाई कबुलियती वनको रूपमा निजी क्षेत्रलाई उपलब्ध गराई व्यवस्थापन र विकास गरिने कुरा उल्लिखित थियो । उक्त गुरुयोजनामा कबुलियती वनलाई वन क्षेत्रका छ वटा मुख्य कार्यक्रममध्ये दोस्रो

प्राथमिकता प्राप्त राष्ट्रिय तथा कबुलियती वन कार्यक्रमअन्तर्गत राखिएको थियो । पुरानो वन ऐन खारेज भएर नया वन ऐन बनेपछि कबुलियत वन सम्बन्धि व्यवस्थालाई अझ सरल बनाइएको थियो.। राष्ट्रिय वनको कुनै भाग कबुलियती वनको रूपमा प्रदान गर्ने सम्बन्धमा बन ऐन, २०४९ को परिच्छेद ६ तथा वन नियमावली, २०५१ को परिच्छेद ५ मा उल्लेख छन् । यसै गरी दीर्घकालीन कृषि योजना, २०५१ मा उल्लिखित वन क्षेत्रका मुख्य चारवटा क्रियाकलापमध्ये निजी तथा कबुलियती वन एउटै कार्यक्रमअन्तर्गत राखी वनक्षेत्रको विकासमा निजी क्षेत्रको भूमिकालाई महत्व दिइएको छ । दीर्घकालीन कृषि योजनाले लिएको लक्ष्यहरु, खास गरी कृषिजन्य उत्पादनको वृद्धि र पशु विकासमा गरिबीको रेखामुनि रहेका समूहहरुको लागि सञ्चालित कबुलियती वन कार्यक्रमले निकै योगदान लक्ष्य सो योजनाले राखेको थियो । कबुलियत बन हस्तान्तरण प्रक्रियालाई सहज बनाउन २०५९ सालमा कबुलियत वन नीति र २०६६ सालमा कबुलियत वन विकास कार्यक्रम संचालन मार्गदर्शन २०६६ ल्याइएको थियो । यी बाहेक वन नीति २०७१ र सामुदायिक वन विकास मार्गदर्शन २०७१ ले समेत वनको उत्पादकत्व वृद्धि गर्न, विपन्न वर्गलाई जिविकोर्जनमा सघाउन कबुलियत वनलाई प्राथमिकता दिएको छ ।

वन ऐन २०४९ ले सुरुमा वन पैदावारमा आधारित उद्योगहरुलाई आवश्यक पर्ने कच्चा पदार्थ उत्पादन गर्न, वृक्षारोपण गरी वन पैदावारको उत्पादनमा अभिवृद्धि गरी विक्री वितरण गर्न वा उपयोग गर्न, वनको संरक्षण र विकास हुने गरी पर्यटन व्यवसाय सञ्चालन गर्न, वनको संरक्षण र विकास हुने गरी कृषि वन बाली कार्यसञ्चालन गर्न, वनको संरक्षण र विकास हुने गरी कीट, पतङ्ग तथा वन्यजन्तुको फार्म सञ्चालन गर्नको लागि राष्ट्रिय वनको कुनै भाग कबुलियती वनको रूपमा प्रदान गर्न सक्ने व्यवस्था गरिएको मा वन ( दोस्रो संसोधन ) ऐन २०७३ ले गरिबीको रेखामुनि रहेका जनताको गरिबी न्यूनीकरण गर्न वनको संरक्षण र विकास हुने गरी तोकिए बमोजिम आय आर्जन हुने कार्यक्रम सञ्चालन गर्न कबुलियत वन प्रदान गर्ने व्यवस्था थप गरेको छ ।

बढीमा ४० वर्ष अवधिका लागि २० प्रतिशतभन्दा कम घनत्व भएका वनक्षेत्र पायक पर्ने सापेक्ष गरीब ५ देखि १५ परिवारको सानोसानो समूहलाई हस्तान्तरण गरी त्यहाँ वनविकास, घाँसविकास र पशुपालन गराई गरिबी र जनजीविकाका जोखिम न्यूनीकरण गर्ने उद्देश्य राखेर नेपाल सरकारले सञ्चालन गरेको कार्यक्रम नै कबुलियती वन विकास कार्यक्रम हो । वन ऐनमा पछि समावेश गरिएको भएपनि यो कार्यक्रम आर्थिक वर्ष २०५२/५३ मा कृषि विकासका लागि अन्तर्राष्ट्रिय कोष (आइफाड) को ऋण र अनुदानमा पहाडी कबुलियती वन तथा चरण विकास आयोजनाको नामबाट सुरु भएको थियो । आव २०६२/६३ बाट पुनः आइफाडकै ऋण र अनुदान, नेपाल सरकारको पुँजी र लाभान्वित गरीबको लगानीबाट कबुलियती वन तथा पशु विकास कार्यक्रमको नामबाट आठ वर्ष सञ्चालित भयो । आव २०६९/७० पछि पुनः नेपाल सरकारकै सहयोगबाट यो कार्यक्रम सञ्चालन भइरहेको छ ।

नेपालमा सामुदायिक वन कार्यक्रम र कबुलियत वन कार्यक्रम संगसंगै जसो शुवात भएपनि विपन्नामुखी कबुलियत वन कार्यक्रम निकै सुस्त भएको देखिन्छ । वि.स. २०६८ सालमा ६६८२ वटा समुहलाई ३८६४८.५५ हे.कबुलियत वन हस्तान्तरण गरिएकोमा आ.ब. २०७४/७५ को अन्त्यसम्ममा ७ हजार ४८४ वटा समुहलाई ४३ हजार ३१७ हेक्टर वन हस्तान्तरण गरिईको र यसमा ७१ हजार ७५३ घरधुरी मात्र संलग्न भएको वन मन्त्रालयको तथ्यांकले देखाउछ । नवौं पंचावार्शीय योजनादेखि हालसम्म लगातार कबुलियती वनलाई विपन्न समुदायको उत्थानको आधार

बनाउने नीति र कार्यक्रमहरु बनाइरहेपनि कबुलियती वन विस्तारको गति सुस्त हुनुले यो कार्यक्रम प्रभावकारी हुन नसकेको प्रस्टै हुन्छ ।

| वनका किसिम | संख्या | क्षेत्रफल हे. | संलग्न घरधुरी |
|---|---|---|---|
| सामुदायिक वन | २२३६६ | २२३७६७०.५ | २९०७८७१ |
| साझेदारी वन | ३० | ७६०१२.३६ | ८६४०१५ |
| विपन्नमुखी कबुलियत वन | ७४८४ | ४३३१७ | ७१७५३ |
| श्रोत : वन विभाग, २०७५ | | | |

पुनरुत्थान हुन नसकेका वन, बगर र अतिक्रमण हटाई फिर्ता गरिएका वन लगायत सबै किसिमका वनहरुको केहि हिस्सा विपन्न समुदायलाई उपयोग गर्न दिने नीतिगत व्यवस्था भएपनि लक्षित समुदायलाई त्यसको जानकारी नहुनु, वना कार्यालयले सहजीकरण नगर्नु र अन्य सरोकारबालाहरुले पनि वास्ता नगरेको कारणले विपन्नमुखी कबुलियत वन कार्यक्रमबाट अपेक्षित लाभ लिन सकिएको छैन । वनभित्र वनको हैसियत बिग्रन नदीई वन्यखेति गर्न सकिने र आम्दानी हासिल गर्न सकिने भएपनि विपन्न समुदाय त्यसतर्फ आकर्षित भएको देखिदैन । अहिले वस्ती नजिकका प्रायजसो वनहरू सामुदायिक वनको रुपमा व्यवस्थापन भैरहेका छन् । सामुदायिक वनभित्र पनि कबुलियत वन कार्यक्रम लागु गरि विपन्न वर्गको उत्थानमा सहयोग गर्न सकिने भएपनि सामुदायिक वन समूहहरुले विपन्न समुदायलाई त्यो अवसर प्रदान गरिरहेको देखिदैन । विपन्न समुदायलाई वनको कुनै भाग सुम्पदा पछि उनीहरुले नै अतिक्रमण गर्ने हुन कि भन्ने वन पदाधिकारीको डर, कबुलियत वनको स्वामित्व लिने लामो प्रक्रिया, वन पैदावारको बेचबिखनबाट हुने लाभमा भागीदारीमा अस्पस्टता जस्ता कारणले विपन्नमुखी कबुलियत वन विस्तारमा अवरोध सिर्जना भैरहेको छ र हस्तान्तरित कबुलियत वनहरू पनि घास काट्नमा मात्र सिमित भैरहेका छन् ।

वन संरक्षणमा सामुदायिक वनहरुले महत्वपूर्ण भूमिका खेलिरहेको भएपनि विपन्न वर्गको उत्थानमा यस्ता वनहरुको नगन्य भूमिका रहेको देखीन्छ । वनसँग नजिकको साइनो रहेका स्थानीय विपन्न समुदायलाई वन संरक्षणमा मात्र लगाउदा उनीहरुको जीविकोपार्जनमा सघाउ पुग्दैन । विपन्न वर्गलाई वनको केहि हिस्सा सुम्पेर वनको हैसियत सुधार्दै वन भित्र जडिबुटी खेति, गैह्रकाष्ठ वन पैदावारको उत्पादन, फलफुल खेति, वनबाली, तरकारी, घाँस उत्पादन गर्न र विक्री गर्न लगाउने, कबुलियत वनभित्र वन्यजन्तु पालन र पर्यापर्यटन जस्ता कामहरु गर्न लगाउने हो भने वन संरक्षण त हुनेछ नै स्थानिय वासिन्दाको आयआर्जनमा सहयोग समेत पुग्नेछ । सबै स्थानीय सरकार र प्रदेश सरकारले आयआर्जन  र वन संरक्षनलाई कबुलियत वन कार्यक्रमसंग जोड्न सकेमा समुदायले अन्य किसिमका वनहरू भन्दा छिटो र प्रत्यक्ष लाभ लिन सक्नेछन.।

# Leasehold forest at slow pace

Yubaraj Kandel

*Summary*

The Leasehold Forest Management Program has been operational for the past three decades, aiming to enhance the living standards of individuals below the poverty line through sustainable forest resource management, support industrial development by ensuring a steady supply of raw materials, and promote para-tourism. In Nepal, where the government struggles to protect and restore degraded forests, the Leasehold Forest initiative was introduced to elevate forest conditions and assist impoverished communities by allowing them to safeguard and utilize a portion of degraded forests. Despite policies permitting disadvantaged communities to utilize non-regenerable, cleared, or encroached forests, lack of awareness among target communities, inadequate support from forest offices, and indifference from stakeholders have hindered the expected benefits of the program. Forest farming offers income opportunities while preserving forest integrity, yet the impoverished communities show limited interest in this endeavor. Empowering underprivileged communities with forest ownership and engaging them in activities such as herb cultivation, non-timber forest product production, fruit cultivation, forest crop cultivation, vegetable farming, grass production, wildlife rearing, and tourism within the Kabuliyat forest can lead to forest conservation and income generation for local residents. By aligning income generation with forest conservation through the Leasehold Forest Program, local and state governments can expedite and enhance community benefits.

# कङ्क्रिटको जङ्गलमा हरित विद्यालयको कल्पना

Imagination of green School in a Concrete City

युवराज कंडेल

*शहरी क्षेत्रमा रहेका सामुदायिक विद्यालयहरुले समेत आफ्नो जग्गालाई व्यावसायिक प्रयोजनका लागि भाडामा लगाउने भएकोले खुला क्षेत्रको कमि छ । यस्तो अवस्थामा विद्यालय भित्र वृक्षारोपण गर्ने, बगैचा बनाउने, पुष्पखेति वा जडिबुटी खेति गर्ने, माछापालन गर्ने भन्ने कुरा सम्भव देखिदैन । सेवा क्षेत्रमा रहेका खालि, पर्ती जमिन स्थानीय सरकारको स्वामित्वमा रहने भएकोले सरकारको योजना र सहयोग विना ति क्षेत्रमा हरियाली प्रवर्धनका कार्यहरु गर्न सकिनेछैन । अधिकांश शहरी विद्यालयहरुमा यस निर्देशिकाले तोके बमोजिम बगैचा र हरित क्षेत्र निर्माण गर्न सकिदैन तर शोभाका विरुवाहरु बार्दली र छतमा हुर्काएर विद्यालयलाई सुन्दर बनाउन भने सकिन्छ ।*

अहिले वस्तीहरु कंक्रिटको जङ्गलमा परिणत भैरहेका छन् र वस्ती विचका विद्यालयहरु सुकेका रुख जस्ता भैरहेका छन् । विद्यार्थीहरुको शारीरिक, मानसिक र बौद्धिक विकासको लागि स्वस्थ, स्वच्छ र हराभरा वातावरण चाहिन्छ तर अहिले अधिकांश शहरी क्षेत्रका विद्यार्थीहरुले हरियाली हेर्न भ्रमण नै जानुपर्ने अवस्था भैरहेको छ । विद्यालय भित्र र सेरोफेरोमा हरियाली घट्दै जाँदा विद्यार्थीहरुले अधिकांश समय विताउने स्थान अस्वस्थकर त बनिरहेका छन् नै उनीहरुले प्रकृतिबाट सिक्ने अवसर पनि गुमाउदै गएका छन् । यस्तो अवस्थामा सुधार ल्याउदै विद्यालयलाई हरियालीपूर्ण बनाउन हरित विद्यालय कार्यक्रम अन्तर्गत सरकारले अग्रसरता देखाएको छ । शैक्षिक सस्था र त्यसको वरपरको क्षेत्रमा ब्यापक हरियाली विकास मार्फत पृथ्वीको बहन क्षमता अभिवृद्धि गर्न, वातावरण प्रदुषणबाट जैविक विविधतामा परेको असर न्यूनीकरण गर्दै पारिस्थितिक पद्धतिमा सन्तुलन कायम गर्न, स्वच्छ एवम हरित पृथ्वी भावी पुस्तालाई हस्तान्तरण गर्न, शिक्षाका माध्यमबाट विद्यार्थी तथा आम जनसमुदायमा वातावरणमैत्री व्यवहार विकास गर्न, दिगो विकासको लक्ष्य हासिल गर्नको लागि विद्यालय र शैक्षिक सस्थाको परिसर र सेवा क्षेत्रमा ब्यापक हरियाली प्रवर्द्धन गर्न हरित विद्यालय कार्यक्रम कार्यान्वयन निर्देशिका, २०७५ बनाइएको छ ।

प्रत्येक विद्यालयमा कम्तिमा पनि एउटा बगैचा निर्माण र विद्यालय सेवा क्षेत्रका सार्वजनिक स्वामित्वमा रहेका खाली जमिनमा वृक्षारोपण गरि हरियालीयुक्त बनाउनु एक विद्यालय एक बगैचा तथा बृहत हरित क्षेत्र कार्यक्रमको मुख्य लक्ष्य रहेको छ । यस कार्यक्रम अन्तर्गत सबै विद्यालयहरुले एक विद्यालय एक बगैचा तथा बृहत हरित क्षेत्र निर्माण कार्यक्रम अनिवार्य रुपमा संचालन गर्नुपर्नेछ । प्रत्येक विद्यालयले विद्यालय परिसरमा कम्तिमा एउटा बगैचा निर्माण गर्नुपर्नेछ । खालि जग्गा ज्यादै कम भएका विद्यालयहरुले गमला, कौसी,बोरा, पर्खाल, बरण्डा, छत लगायतका उपयुक्त स्थान र तरिका छनौट गरि बगैचा निर्माण गर्नुपर्नेछ । विद्यालयमा खालि जग्गा एक रोपनी भन्दा कम

भए फूलबारी, शोभाका विरुवा, औषधिजन्य विरुवा रोप्नु पर्नेछ । जग्गा धेरै हुने विद्यालयमा ठुला रुखहरु,तरकारी र फलफूलहरु लगाउने र मत्स्यपालन समेत गर्न सकिने निर्देशिकाले व्यवस्था गरेको छ । त्यसैगरी विद्यालयको सेवा क्षेत्रमा रहेका खालि तथा बाँझो जग्गामा हरियाली प्रवर्धन गर्ने, सडक किनारमा वृक्षारोपण गर्ने, वृहत सरसफाई र पानीका मुहान संरक्षण, ईको पुस्तकालय र संग्रहालयको स्थापना गर्ने जस्ता महत्वाकांक्षी कार्यक्रमहरु समेत यो निर्देशिकाले समेटेको छ । वर्तमान समयमा विद्यार्थीहरुलाई प्रकृतिसंगका सिकाइका अवसरहरु सिमित हुदै गैरहेका छन् । वनस्पति र बालबालिकाहरुको दुरी बढ्दै गैरहेको छ नै बालबालिकाहरु अस्वस्थकर वातावरणमा पठनपाठन गर्न बाध्य छन् । विद्यालयभित्र र विद्यार्थीहरु दिनहु हिडडुल गर्ने ठाउँ स्वच्छ, सुन्दर र हरियालिपूर्ण भएमा उनीहरुको अध्ययन, स्वास्थ्य र जीवनयापनमा समेत सकारात्मक प्रभाव पर्ने कुरामा दुई मत हुन सक्दैन । खासगरी शहरी क्षेत्रका विद्यालयहरुमा वातावरणिय कुरुपता बढिरहेको छ । यस्तो अवस्थामा विद्यालयको वातावरण सफा, शान्त, सुरक्षित, हरियालीयुक्त बनाइ हरेक विद्यालय आकर्षक र मनोरम स्थलको रुपमा विकास गर्नु अत्यावस्यक भैसकेको छ । यो आवस्यकतालाई पुरा गर्ने मात्र नभई विद्यालयलाई जीवित प्रयोगशालाको रुपमा विकास गर्ने, विद्यार्थीले सिकेको सैद्धान्तिक ज्ञानलाई व्यवहारमा रुपान्तरण गर्ने, परियोजनामुलक सिकाईका अवसर प्रदान गर्ने र विद्यालयलाई समुदायको लागी हरित सिकाइको केन्द्र बनाउने उद्धेश्य यस कार्यक्रमले राखेको छ ।

विद्यार्थी वा विद्यालयको एक्लो प्रयासले मात्र हरित विद्यालय बनाउन सम्भाव छैन, अझ विद्यालयको सेवा क्षेत्रमा समेत वृक्षारोपण गर्ने, हरियाली बनाउने र विद्यालयले फाइदा लिने काम त झन् विद्यालयको प्रयासले मात्र कदापि हुन सक्दैन । स्थानीय क्षेत्रमा रहेका सार्वजनिक क्षेत्रहरु स्थानीय सरकारको अधिकार क्षेत्र भित्र पर्ने, सडक किनारा सडक विभागको अधिकार क्षेत्र पर्ने र पानीका श्रोतहरु वनको क्षेत्र भित्र पर्ने तथा विद्यालयहरु शिक्षा मन्त्रालय, प्रदेशका सामाजिक विकास मन्त्रालय अन्तर्गत पर्ने भएकोले यी सबै निकायहरुको सहयोगले मात्र विद्यालय हरित क्षेत्र बन्न सक्छ । निर्देशिकाले यो कार्यक्रम सफल बनाउन केन्द्र, प्रदेश, जिल्ला, स्थानीय तह र ईकाईले के के गर्ने भन्ने पनि निर्धारण गरेको छ । जस अनुसार मन्त्रालयले निर्देशिका तयार गर्ने, प्रोत्साहन अनुदानको व्यवस्था गर्ने, शिक्षा विभागहरुले प्रशिक्षण दिने, प्रदेश शिक्षा विकास निर्देशनालयले समन्वय, सहजीकरण र अनुगमन गर्ने, स्थानीय तहले आवस्यक श्रोत विनियोजन, कार्यक्रम कार्यान्वयनको रेखदेख, समन्वय र सहजिकरण गर्ने गराउने, शिक्षा विकास तथा समन्वय इकाइले सम्पर्क शिक्षकलाई सहजीकरण, समन्वय र आपसी सहयोगको वातावरण सिर्जना गर्ने दायित्व तोकेको छ । यस कार्यक्रममा सबै भन्दा बढी भूमिका विद्यालयको नै रहनेछ । आवस्यक श्रोत सामग्री संकलनं र प्रयोग गर्ने, विद्यार्थी, शिक्षक, कर्मचारी र विद्यार्थीहरुलाई परिचालन गर्ने , विभिन्न सरकारी र गैर सरकारी सस्थाहरुसंग समन्वय र सहकार्य गर्ने, वृहत हरित क्षेत्र निर्माणका लागि वृक्षारोपण गर्ने, संरक्षण गर्ने, बारबन्धन गर्ने, विरुवा हुर्काउने लगायतका कामहरु गर्ने जिम्मा विद्यालयलाइ नै प्रदान गरिएको छ ।

पर्यावरणमैत्री विद्यालय, हरियालीयुक्त विद्यालय सेरोफेरो र वातावरण सचेत विद्यार्थी निर्माण गर्ने मूल लक्ष्य रहेको हरित विद्यालय कार्यक्रम असल नियतले ल्याईएको भएपनि यसको कार्यान्वयन पक्ष त्यति सजिलो भने छैन । यो कार्यक्रम ग्रामिण क्षेत्रको लागि भन्दा पनि शहरी क्षेत्रको लागी अत्यावस्यक छ । अहिले शहरी क्षेत्रका विद्यालयहरु ब्यापारिक दृष्टिकोणले बनाईएका भवनहरुमा संचालित छन् ।. केहि

अपवादलाई छोड्ने हो भने अधिकांश निजि विद्यालयहरुसंग खुला जामिन नै बाकी छैन । शहरी क्षेत्रमा रहेका सामुदायिक विद्यालयहरुले समेत आफ्नो जग्गालाई व्यावसायिक प्रयोजनका लागि भाडामा लगाउने भएकोले खुला क्षेत्रको कमि छ । यस्तो अवस्थामा विद्यालय भित्र वृक्षारोपण गर्ने, बगैचा बनाउने, पुष्पखेति वा जडिबुटी खेति गर्ने, माछापालन गर्ने भन्ने कुरा सम्भव देखिदैन । सेवा क्षेत्रमा रहेका खालि, पर्ती जमिन स्थानीय सरकारको स्वामित्वमा रहने भएकोले सरकारको योजना र सहयोग विना ति क्षेत्रमा हरियाली प्रवर्धनका कार्यहरु गर्न सकिनेछैन । अधिकांश शहरी विद्यालयहरुमा यस निर्देशिकाले तोके बमोजिम बगैचा र हरित क्षेत्र निर्माण गर्न सकिदैन तर शोभाका विरुवाहरु बार्दली र छतमा हुर्काएर विद्यालयलाई सुन्दर बनाउन भने सकिन्छ ।

ग्रामिण क्षेत्रमा विद्यालयहरु संग पर्याप्त खालि जमिन उपलब्ध छ र सबैजसो विद्यालयहरु हरियालीयुक्त समेत छन् । ग्रामिण क्षेत्रमा खेर गैरहेका खाली जग्गाहरूलाई भने विद्यार्थीहरुलाई व्यवहारिक र व्यवसायिक सिकाइको थलो बनाउन सकिन्छ । समुदाय , विद्यार्थी र शिक्षकहरु मिलेर विद्यालयको आफ्नो र विद्यालयको सेवा क्षेत्रमा रहेका खालि जग्गामा तरकारी र फलफुल र पुष्प खेति गर्ने, स्थानीय जडिबुतिहरु उत्पादन गर्ने, माछा पालन गर्ने , स्थानीय वानस्पतिक उद्यान बनाउने जस्ता कामहरु गरेमा विद्यार्थीहरुलाई व्यवहारिक सिकाइ हासिल हुन सक्छ नै विद्यालय र समुदायले आर्थिक लाभ समेत हासिल गर्न सक्नेछन् ।

विद्यालयका मुख्य सरोकारवालाहरु समुदाय र स्थानीय सरकार हुन . यिनीहरुको रचनात्मक सहभागिता विना विद्यालय र विद्यालयको सेवा क्षेत्रलाई हरियालीपूर्ण र स्वच्छ बनाउन सकिदैन तर हरित विद्यालय निर्देशिका ले कार्यक्रममा यी निकायहरुको भूमिकालाई नगन्य स्थान दिएको छ । शिक्षा मन्त्रालयको निर्देशिकाले भन्दा स्थानीय सरकारका सरसफाई र हरियाली प्रवर्द्धन सम्बन्धि कार्यक्रमहरुले हरित विद्यालय र सफा समाज निर्माण गर्न सक्ने भएकोले यो कार्यक्रमलाई स्थानीय सरकारकै नीति तथा कार्यक्रमहरुमा समेट्नु पर्छ । नयाँ विद्यालयको लागि स्वीकृती प्रदान गर्दा विद्यालयमा हरियाली क्षेत्र भएकै हुनुपर्ने व्यवस्था गर्ने र अहिले संचालित विद्यालयहरुमा हरित क्षेत्र विनास गरि भौतिक संरचना निर्माण गर्न रोक लगाउने तथा विद्यालय हरियालीलाई सिकाई र आयआर्जनसंग जोड्न सकियो भने विद्यालयहरु हरियालीपूर्ण बनाउन कठिन हुनेछैन ।

*बुटवल टुडे, ३० पुष, २०७५*

yrkandel@gmail.com

# Imagination of green School in a Concrete City

Yubaraj kandel

***Summary***

The transformation of slums into concrete jungles and the deterioration of greenery within schools and surrounding areas in Serofero are concerning trends that are impacting the health and educational opportunities of students. Recognizing the importance of creating a more sustainable and nature-friendly learning environment, the government has taken the initiative to implement the Green School Program.The Green School Program Implementation Directive, 2075, aims to enhance the greenery within school premises and service areas across educational institutions. Through initiatives such as the One School One Garden and Greater Green Area Program, the goal is to establish at least one garden in every school and increase greenery by planting trees on available land within the school service area. While the intentions behind the Green School Program are commendable, its implementation poses challenges, particularly in urban areas where space is limited. However, innovative solutions such as rooftop gardens and utilizing vacant land in rural areas for practical learning opportunities can help overcome these obstacles. The success of the Green School Program relies heavily on the active involvement of the community and local government as key stakeholders. Their collaboration is essential in creating green and clean school environments that foster environmental awareness among students. Incorporating programs promoting cleanliness and green initiatives into local government policies and programs, rather than solely relying on Ministry of Education guidelines, can further support the development of green schools and a sustainable society. By working together, we can create a healthier and more environmentally conscious educational system for future generations.

*Butwal Today, 14 january 2019*

yrkandel@gmail.com

# रहला त वन ?

## How Long Can Nepal's Forest Survive?

युवराज कंडेल

*वन संरक्षणमा समुदायको सहभागिताले सकारात्मक परिणाम दिएपनि पछिल्ला वर्षहरुमा यी समुहहरु व्यवसायिक वन्न खोज्दा वन मासेर भौतिक निर्माण र पार्क निर्माण गर्ने काम बढिरहेको छ, यो प्रवृति वन संरक्षणमा घातक हुने निश्चित छ। वन क्षेत्र सबै भन्दा ठुलो पर्यावरणीय सम्पत्ति हो । यो क्षेत्रलाई वर्तमान र भावी पुस्ताको लागि जोगाउनु जरुरि छ। अहिले अतिक्रमणमा परेर वन खुम्चीदैछ।* पातलिदै छ।

केहि दिन पहिले लुम्बिनी प्रदेशको जलवायु परिवर्तन नीति तर्जुमा गोष्ठिमा वन प्रशासनमा लामो अनुभाव बटुलेका प्रदेश वन सचिवले मन्तब्य राख्ने क्रममा भनेका कुराले धेरैलाई झस्कायो । जलवायु परिवर्तन न्यूनीकरण गर्न वनको विकासमा ध्यान दिनुपर्ने कुरा भैरहेको अवस्थामा वन सचिवले अहिलेकै अवस्था रहने हो भने वि.स. २१०० सम्ममा संरक्षण क्षेत्र बाहेक बाहिर निकै कम क्षेत्रमा मात्र वन रहने कुरा निकै मार्मिक ढंगले सुनाउदा हलमा केहीबेर सन्नाटा छायो । जनस्तरबाट वन क्षेत्र अतिक्रमण भैरहेको अवस्थामा राज्यस्तरबाट र सामाजिक सस्थाहरुले वनमा आँखा लगाएकोले उनको चिन्तालाई वेवास्ता गर्न सकिने अवस्था देखिदैन ।

वन स्रोत सर्वेक्षणका अनुसार नेपालमा वनले करिब ५९ लाख ६२ हजार हेक्टर भू-भागओगटेको छ जुन नेपालको कुल क्षेत्रफलको ४०.३६% हुन आउछ । बुट्यान क्षेत्र ६ लाख ४८ हजार हेक्टर (४.३८%) रहेको छ । यसरी नेपालको कुल क्षेत्रफल मध्ये वन तथा बुट्यान क्षेत्रले गरी जम्मा ४४.७४% भू-भाग ओगटेको छ । कुल वन क्षेत्रको ३७.८०% मध्यपहाडी भौगोलिक क्षेत्रमा, ३२.२५% उच्च पहाडी तथा उच्च हिमाली क्षेत्रमा, २३.०४% चुरे क्षेत्रमा र ६.९०% तराई क्षेत्रमा अवस्थित छ । जैविक विविधता एवम् पारिस्थितिकीय प्रणालीको संरक्षण र प्रकृतिमा आधारित पर्यटन प्रवर्द्धन गर्ने उद्देश्यलें १२ राष्ट्रिय निकुञ्ज, १ वन्यजन्तु आरक्ष, १ शिकार आरक्ष र ६ संरक्षण क्षेत्र समेत २० संरक्षित क्षेत्रहरू स्थापना गरी देशको ३४ हजार ४ सय २० वर्ग कि.मि. अर्थात् २३.४ प्रतिशत भू-भाग संरक्षित क्षेत्र प्रणाली अन्तर्गत व्यवस्थापन गरिएको छ । त्यसैगरी १० वन संरक्षण क्षेत्रमार्फत १ लाख ९० हजार ८ सय ९ हेक्टर वन क्षेत्र व्यवस्थापन गरिएको छ ।

अहिले नेपालमा वन क्षेत्र बढेको प्रतिवेदन सार्वजनिक भएपनि वन अतिक्रमणको कारणले वन क्षेत्र घटिरहेको सरकारकै तथ्यांकहरुले देखाउछन् । महालेखा परिक्षकको ५८ औं प्रतिवेदन अनुसार आ.ब.२०६७/७७ मा अतिक्रमण भएको ६६ हजार ४३४ हेक्टर गरि हालसम्म एक लाख ४ हजार ५४३ हेक्टर वन अतिक्रमणमा परेको छ । वन मन्त्रालयको ५वर्ष अघिको एक प्रतिवेदनले वि.सं. २०४८ देखि २०६७ सम्मको १९ वर्षे अवधिमा तराइमा ३२ हजार हेक्टर वन घटेकोा देखाएको थियो । यो अवधिमा तराईको वन वार्षिक ०.४४ प्रतिशतका दरले घटेको देखिन्छ । पछिल्लो नौ वर्ष (२०५८-२०६७ )मा मात्र तराईको वन १६ हजार ५०० हेक्टर घटेको थियो । तराइ र संगै जोडिएको चुरे क्षेत्रमा ब्यापक वन विनास भएको देखिन्छ । वि.सं. २०५२-२०६७को १५ वर्षे अवधिमा चुरेमा ३८ हजार ५१ हेक्टर वन

क्षेत्र घटेको छ । यो क्षेत्रमा वार्षिक ०.१८ प्रतिशतका दरले वन घटेको देखिन्छ । तराइ र चुरेमा मात्र नभई पहाडी क्षेत्रमा समेत ब्यापक रुपमा वन क्षेत्र घटिरहेको छ । खासगरी उपत्यका र भर्खर मोटरबाटो पुगेका वस्ती छेउछाउ वन अतिक्रमण बढिरहेको भएपनि पहाडमा वन क्षेत्र घट्ने दर चुरे र तराइमा भन्दा कम भएको देखिन्छ । वन मन्त्रालयका अनुसार अतिक्रमित वन क्षेत्र मध्ये करिव ६३ प्रतिशत खेतीपाती र बसोबासको लागि प्रयोग भैरहेको छ । चार वर्ष अघि सुकुम्बासी समस्या समाधान आयोगमा सुकुम्बासी र अब्यवस्थीत बसोबासी गरि करिव ७ लाख ९० हजार निवेदन परेका थिए । पछिल्लो आयोगका अनुसार, भूमि सम्बन्धी बढी समस्या भएका ३१९ स्थानीय तहमा गत २०७८ असार मसान्तसम्ममा भूमिहीन दलित र भूमिहीन सुकुमबासी २ लाख ४७ हजार ९६० र अव्यवस्थित बसोबासी ९ लाख ३२ हजार ८०१ समेत ११ लाख ८० हजार ७६१ परिवारको लगत संकलन भएको छ । यिनीहरु मध्ये प्रायजसो अतिक्रमित वन क्षेत्रमै रहेका छन् ।

नेपालमा सुकुम्बासीले वन अतिक्रमण गरेको कारणले वन क्षेत्र घटेको बारेमा धेरै चर्चा हुने गरेको भएपनि सस्थागत रुपमा बढी रहेको वन विनाशले कमै चर्चा पाउने गरेको छ । अहिले नेपालको वन जंगलमा विभुन्न संस्थाहरुले विभिन्न बहानामा अतिक्रमण गरिरहेका छन । धार्मिक सस्था, स्थानीय सामाजिक संस्था, देखि लिएर शैक्षिक संस्था, सरकारी कार्यालय, उद्योगहरुले संरक्षण क्षेत्र र मध्यवर्ती क्षेत्रमा समेत अतिक्रमण गरी भौतिक संरचनाहरु निर्माण गरि उपभोग गरिरहेका देखिन्छ । शहिदका नाममा खोलिएका प्रतिष्ठान र चिहान स्थलहरुले पनि वन जंगल नै विनास गरेको पाइन्छ । खासगरी तराई र चुरे क्षेत्रमा पूर्व मेची देखि महाकाली सम्मको यात्रा गर्दा महेन्द्र राजमार्गको छेउछाउका महत्वपूर्ण वन क्षेत्रमा मन्दिर, गुम्बा, सामुदायिक भवन,चिहान स्थल, पार्क, विद्यालय जस्ता स्थायी संरचनाहरु निर्माण गरेको सजिलै देख्न सकिन्छ ।

एकातर्फ नेपाल सरकार नेपालमा वन क्षेत्र ४० प्रतिशत भन्दा माथि राख्ने कुराको रट लगाइरहेको छ भने अर्कोतर्फ सरकार नै संस्थागत रुपमा नेपालमा वन अतिक्रमणमा संलग्न भएको देखिन्छ । शैक्षिक सस्था, अस्पताल र प्रतिस्ठानको लागि मात्र नभएर कहिले बाढी पिडित त कहिले मुक्त कमैयाको लागि भनेर सरकारले वन क्षेत्र नै बाड्ने गरेको छ । बैज्ञानीक भूमिसुधार गरेर हदबन्दि भन्दा माथिको जग्गा प्राप्त गरेर यस्ता कार्यको लागि जग्गाको व्यवस्था गर्न सकिने भएपनि सरकारले त्यसतर्फ ध्यान पुऱ्याउन सकेको देखिदैन । सरकारले अहिले सम्म विभिन्न औद्योगिक प्रतिष्ठानलाई झन्डै एक हजार हेक्टर वन कबुलियत गरि जीम्मा दिएको छ , जुन अब केहि गरे पनि राष्ट्रिय वनको रुपमा फिर्ता हुनेवाला छैन । आर्थिक वर्ष २०७०/७१ सम्ममा सरकारले १४ हजार १३ हेक्टर वन क्षेत्रको जग्गा अन्य निकाय र योजनालाई भोगाधिकार उपलब्ध गराएको थियो (आर्थिक सर्भेक्षण २०७२)। अहिले यो क्षेत्र बढेर १८ हजार ५२३ हेक्टर पुगेको छ (आर्थिक सर्भेक्षण २०७७/७८)। यसमा जलविद्युत,, सरकारी कार्यालय ,मुक्त कमैया ,सुकुम्बासी, सेना, प्रहरी, सामाजिक सेवा, भौतिक पूर्वाधार आदि रहेका छन । यिनिहरुबाट अब वन फिर्ता हहुनेवाला छैन ।

नेपालमा हेर्ने हो भने सबै जसो धार्मिल स्थलहरु अहिले पनि वन क्षेत्रमै रहेका छन । नेपाल सरकारले विभिन्न धार्मिक मठ, मन्दिर र गुम्बाको लागि २ हजार हेक्टर भन्दा बढि वन क्षेत्र उपलब्ध गराएको छ । एउटै जिल्लामा ४०० बिगाहा सम्म वन जंगल धार्मिक प्रयोजनका नाममा अतिक्रमण भएको वन विभागको दावि छ । देश संघियतामा गएपछि स्थानीय तहमा वन अतिक्रमण सस्थागत भएको गुनासोहरु बढिरहेका छन् । स्थानीय सरकारले वन सम्बन्धि प्रचलित नीति नियमको विपरित हुनेगरी वनक्षेत्रको उपयोग गर्ने, वनमा निर्माण कार्य गर्ने, वनको जग्गा अन्य प्रयोजनका लागि उपलब्ध गराउने प्रवृति निकै बढेको छ । सरकारले दिएका बाहेक परम्परागत रुपमा वन

जंगलको उपभोग गरिरहेका संस्थाहरु धेरै रहेका छन । सरकारले सडक, शैक्षिक सस्था, विमानस्थल निर्माण गर्दा पनि वनलाई नै मास्ने काम गरिरहेको पाइन्छ. यसले पनि वनलाई घटाएको छ. । ति संस्थाहरुले वन क्षेत्र कसरी प्रयोग गरिरहेका छन भन्ने कुनै अनुगमन हुन सकेको छैन ।

वन ऐन, २०७६ को दफा ४९ मा राष्ट्रिय वनक्षेत्रको अतिक्रमण गर्ने कार्य दण्डनीय अपराध मानिने उल्लेख छ । अतिक्रमण नियन्त्रण गर्न वन अतिक्रमण नियन्त्रण रणनीति, २०६८ कार्यान्वयनमा रहेको छ । आर्थिक वर्ष २०७६/७७ सम्म १ लाख ४ हजार ५४३ हेक्टर वन क्षेत्र अतिक्रमण भएको महालेखाको ५८ औं प्रतिवेदनमा उल्लेख छ । मन्त्रालयबाट प्राप्त विवरणअनुसार आर्थिक वर्ष २०७५/७६ मा २०४४ हेक्टर, २०७६/७७ मा ७९७ हेक्टर ( ०.७६ प्रतिशत) वन क्षेत्रबाट अतिक्रमण हटाएकोमा आ.ब. २०७७/७८ मा १८६ हेक्टर वन क्षेत्रको अतिक्रमण मात्र सरकारले हटाउन सकेको थियो । राजनीतिक संक्रमणकालको फाइदा उठाउदै वन अतिक्रमण गर्ने प्रवृति जतातत्तै देखिएपनि अतिक्रमित वन क्षेत्र खालि गर्न सरकार र वन प्रशासनको ध्यान पुग्न सकिरहेको छैन । अतिक्रमणकारिलाई राजनैतिक आड हुने कारणले गर्दा पनि वन प्रशासनले चाहेर पनि अतिक्रमण रोक्न र हटाउन सकिरहेको छैन । यसले अतिक्रमणलाई बलियो बनाएको मात्र छैन, शहरी र राजमार्ग क्षेत्रको नजिक वन हराउदै गैरहेको छ ।

मानवीय कारणले मात्र नभएर प्राकृतिक कारणले पनि पछिल्लो समयमा वन विनास भैरहेको छ. खासगरी जलवायु परिवर्तनको कारणले सिर्जित सुख्खापनको कारणले वनमा वनस्पतिको वृद्धि विकासमा प्रतिकुल प्रभाव परिरहेको छ । सुख्खापन भएका ठाउँहरुमा रुख विरुवा मासिदै गएका छन् ।. यस्ता ठाउमा वृक्षारोपण गरेपनि वन हुर्काउन कठिन हुने भएकोले वन क्षेत्र जोगिएपनि हराभरा वन हराउने डर बढेको छ । तराइका वनमा मिचाहा र बाहिरि वनस्पतिहरु तीव्र गतिमा फैलिरहेका छन् । यसले पनि वनमा वनस्पतिको वृद्धिमा प्रतिकुल प्रभाव परिरहेको छ । पहाडी क्षेत्रमा बढ्दो भूक्षय र तराइको बाढीले गर्दा पनि वनको विस्तार र वन घनत्व वृद्धिमा प्रतिकुल असर परिरहेको छ ।

पछिल्ला २५ वर्षहरुमा वनमा निराशा मात्र हैन केहि आशालाग्दा अभ्यासहरू समेत भैरहेका छन् । खासगरी सामुदायिक वनहरुले वनलाई जोगाउन र विकास गर्न महत्वपूर्ण भूमिका खेलेका छन् । आ.ब. २०७६/७७ को अन्त्य सम्ममा २४ लाख ९० हजार १९४ हेक्टर वन २२ हजार ६८२ सामुदायिक वन उपभोक्ता समुहले, ४४ हजार ३९९ हेक्टर वन ७७३१ वटा कबुलियत वन समुहले , ३ लाख ११ हजार २१३ हेक्टर वन १०३७ वटा मध्यवर्ती सामुदायिक वनले र ४४१४ हेक्टर वन ८८ वटा मध्यवर्ती कबुलियत वन समुहले व्यवस्थापन गर्दै आएका छन् । वन संरक्षणमा समुदायको सहभागिताले सकारात्मक परिणाम दिएपनि पछिल्ला वर्षहरुमा यी समुहहरु व्यवसायिक वन्न खोज्दा वन मासेर भौतिक निर्माण र पार्क निर्माण गर्ने काम बढिरहेको छ, यो प्रवृति वन संरक्षणमा घातक हुने निश्चित छ।

वन क्षेत्र सबै भन्दा ठुलो पर्यावरणीय सम्पत्ति हो । यो क्षेत्रलाई वर्तमान र भावी पुस्ताको लागि जोगाउनु जरुरि छ । अहिले अतिक्रमणमा परेर वन खुम्चीदैछ , पातलिदै छ । अहिले सुकुम्बासीलाई वन घट्नुको कारणको रुपमा प्रस्तुत गरिन्छ तर सरकार र समुदायको संस्थागत रुपबाट ठुलो क्षेत्रको वन विनास भएको कमैले मात्र देखेका छन । धर्म, शिक्षा, स्वास्थ्य, सामाजिक सेवा, खेलकूद , चिहान र प्रतिष्ठानका नाममा संघसंस्थाहरुलाई वन क्षेत्र कब्जा गर्न दिने वा कानुनि रुपमा भोगाधिकार दिदै जाने, विकासको नाममा वनकै दोहन गरिरहने हो भने केहि वर्ष पछि नगरपालिका र अन्य विकसित वस्ती नजिक सार्वजनिक जग्गा र वनजंगल बाँकि रहने छैन । यसतर्फ तिनै तहका सरकारहरुले बेलैमा ध्यान दिनु आवस्यक छ । *बुटवल टुडे, २५ भदौ २०७८*

# How Long Can Nepal's Forest Survive?

Yubaraj Kandel

*Summary*

The recent report indicates an increase in forest area in Nepal, however, government data suggests a decrease in forest area due to encroachment. Extensive forest destruction has been observed in the Chure region, which is linked to the Tarai. Encroachment is on the rise, particularly in valleys and near settlements close to motorways. The rate of forest area reduction in the hills appears to be lower compared to the Chure and Tarai regions.Various organizations are also encroaching on Nepal's forests under various pretexts. The government's tendency to utilize forest areas in contradiction to existing forest policies, for construction purposes, and for other activities, has significantly contributed to the decline in forest cover. Forests are being depleted not only due to human activities but also due to natural causes. In the Tarai forests, invasive species and outdoor vegetation are spreading rapidly, negatively impacting vegetation growth. The expansion of forests and increase in forest density in hilly areas are being adversely affected by soil erosion and lowland floods. Over the past 25 years, some positive practices have emerged in forest management. Community forests, in particular, have played a crucial role in forest protection and development. However, the shift towards commercial forestry within these communities poses a threat to forest conservation efforts. The ongoing encroachment is leading to the shrinking and thinning of forests. If encroachment continues unchecked, and forest exploitation persists under the guise of development, public lands and forests near municipalities and other developed areas will be depleted in the coming years. It is imperative to address these issues promptly to safeguard Nepal's precious forest resources for future generations.

*Butwal Today, 10 sept. 2021*

# वन दशक कार्यक्रम र यसका उपलब्धी
# Forest Decade Program and Its Achievements
**युवराज कंडेल**

*नेपालमा वन क्षेत्रको लागि नयाँनयाँ कार्यक्रमहरु ल्याउने तर त्यसलाई सफल बनाउन ध्यान नदिने गर्नाले वन क्षेत्रबाट लाभ लिन सकिएको छैन । वन दशक अभियानको अवधि लगभग सकिएको छ । अब वन क्षेत्रमा कानूनी र संरचनात्मक अडचन पनि छैन । यस्तो अनुकूल अवस्थामा तिनै तहका सरकारहरु इमान्दार भएर लाग्ने र सबै सरोकारवाला जनतालाई वन दशकको आवस्यकता र कार्यक्रमको वारेमा बुझाउन सकियो भने वृक्षारोपण, निजि वन विकास, नदि उकास क्षेत्रमा हरियाली, शहरी हरियाली वृद्धि जस्ता कार्यहरुमा जनसहभागिता अवस्यपनि बढ्नेछ । यस्तो कार्यले वन दशक कार्यक्रमले लिएका लक्ष्यहरु भविस्यमा पक्कैपनि केहि हदसम्म पुरा हुने आशा गर्न सकिनेछ ।*

नेपालको अर्थतन्त्र , कृषि र जीविकोपार्जन संग वनजंगलको अति नजिकको सम्बन्ध रहदै आएको छ । वनले पर्यावरणीय सन्तुलनमा मात्र नभएर जनताको दैनिक आवस्यकताहरु पुरा गर्न समेत महत्वपूर्ण भूमिका खेल्ने भएकोले वन क्षेत्रमा मानिसको अत्यधिक चाप पर्ने गरेको छ । सरकारले करिब ६ दशक वन संरक्षणमा फरकफरक अभ्यास गर्दै आएपछि नागरिकलाई वन पैदावारमा आफैमा निर्भर बनाउन सकिएन र बन श्रोतको व्यवसायीकरण गर्न सकिएन भने वन संरक्षण गर्न नसकिने रहेछ भन्ने अनुभव संगालेर तत्कालिन वन मन्त्री महेश आचार्यको अवधारणा अनुसार वन मन्त्रालयले 'वन क्षेत्रको दिगो विकास र संरक्षणको दशक, २०७१-२०८०' (वन दशक) को अवधारणाको मस्यौदा तयार गरेको थियो । नेपाल सरकारले आ. व. २०७१/०७२ को निति तथा कार्यक्रम र बजेट वक्तव्यमा उल्लेख गरे अनुसार नेपाल सरकारले २०७१ कात्तिक १३ गते विसं २०७१ देखि विसं २०८० सम्मलाई वन दशक घोषणा गरेको थियो ।

वनक्षेत्रबाट टाढा रही ग्रामीण क्षेत्रमा बसोबास गर्ने समुदायको दैनिक जीवनयापनका लागि अत्यावश्यक घाँस, दाउरा, काठ, जडीबुटी तथा गैरकाष्ठ वन पैदावार र वातावरणीय सेवा जस्ता अत्यावश्यक वस्तु एवं सेवा उपलब्ध गराउनुका साथै शहरी क्षेत्रमा समेत हरियाली प्रवर्द्धन गर्ने तथा दिगो वन व्यवस्थापन गरेर वन पैदावरको उत्पादन तथा वन क्षेत्रको उत्पादकत्व बढाउन, वन विनाश र अतिक्रमणविरुद्ध राष्ट्रिय अभियान सञ्चालन गर्न, जलवायु परिवर्तनबाट हुने प्रभावसंग अनुकूलन हुन तथा युवालाई संरक्षण र विकासमा सहभागी गराउने उद्देश्यले वन दशक कार्यक्रम सुरु गरिएको थियो । देशव्यापी रुपमै वृक्षारोपण र वन विकासमा आम नागरिक लगायत विभिन्न सरकारी तथा गैरसरकारी क्षेत्रलाई उत्प्रेरित तथा परिचालन गरी हरियाली बढाउन तथा वन तथा भू-संरक्षण मन्त्रालयको दीर्घकालीन सोच “समृद्धिका लागि वन” को उद्देश्य प्राप्तिका लागि यो कार्यक्रम परिलक्षित रहेको पाइन्छ । एक घर एक रुख, एक गाउँ एक वन, एक नगर अनेक उद्यान, निजी वन विकास तथा दर्ता प्रोत्साहन र जडीबुटी विकास

कार्यक्रममा वन दशक कार्यक्रमले विशेष जोड दिएको छ ।

| वन दशक कार्यक्रमका लक्ष्यहरु |
| --- |
| • तराइ, चुरे तथा पहाडका निजि, सार्वजनिक २६००० हेक्टर वन क्षेत्रमा पुनरोत्पादन संरक्षण तथा वृक्षारोपण गर्ने, <br>• २ लाख हेक्टर वन क्षेत्रमा वैज्ञानिक वन व्यवस्थापन गर्ने, <br>• निजि वन क्षेत्रको विकासमा कम्तिमा ३ गुणा वृद्धि गर्ने, <br>• कूल क्षेत्रफलको २५ प्रतिशत भाग संरक्षित वन व्यवस्थापन प्रणालीभित्र ल्याउने, <br>• वन डढेलो नियन्त्रणमा ९० प्रतिशत कमि ल्याउने, <br>• हरेक एक पालिकामा वन डढेलो नियन्त्रण दस्ता गठन गर्ने, <br>• हरेक जिल्लामा कम्तिमा ५/५ चरिचरण मुक्त वन क्षेत्रहरु बनाउने, <br>• थप १० वटा जैविक मार्गाको पहिचान, पुनर्स्थापन तथा व्यवस्थापन गर्ने, <br>• अतिक्रमण भएको वन क्षेत्र मध्ये कम्तिमा ५० प्रतिशत वन क्षेत्रको अतिक्रमण हटाइ पुनर्स्थापना गर्ने, <br>• कम्तिमा १० नगर क्षेत्रमा नगर उद्यान स्थापना गर्ने, <br>• कार्यक्रम कार्यान्वयनबाट कम्तिमा १ लाख हरित रोजगारी सिर्जना गर्ने, <br>• वन उद्यम, दिगो वन व्यवस्थापन, कृषि वन सम्बन्धि सिपमुलक तालिम ५०० वटा संचालन गरि कम्तिमा १०००० अतिरिक्त दक्ष जनशक्ति उत्पादन गर्ने । |

**अहिलेसम्मको उपलब्धि**

आर्थिक वर्ष २०७१/७२ देखि नै वन दशक कार्यक्रमलाई लक्षित गरि सरकारले बजेट विनियोजन गरि वन मन्त्रालयले कार्यक्रमहरु संचालन गर्दै आएको छ । वन दशक कार्यक्रमको अवधि करिब समाप्त भैसकेको छ र अहिलेसम्म कार्यक्रमले तय गरेका लक्ष्यहरूको प्रगति निकै कम रहेको वन मन्त्रालयकै तथ्यांकहरुले देखाउछन । सरकारले निकै प्राथमिकता दिएको वैज्ञानिक वन व्यवस्थापन कार्यक्रम निकै आलोचित भएकोले सरकारले ७ वर्षमै खारेज गरिसकेको छ । वन दशकमा निजि वन तीन गुणा वृद्धि गर्ने लक्ष्य राखिएको भएपनि वि.सं. २०७१ मा नेपालमा २५५८ वटा निजि वन दर्ता गरि २३६० हेक्टर वन ब्यवस्थापन गरेकोमा २०७९ फाल्गुन सम्ममा निजि वनको संख्या ५४६० वटा र निजि वनले ओगटेको क्षेत्रफल ४४५१ हे. मात्र पुगेको वन मन्त्रालयकै तथ्यांकले देखाएको छ । कार्यक्रम सुरु गर्दाको बखतमा २३.२३ प्रतिशत भूभाग संरक्षित क्षेत्रले ओगटेकोमा त्यो क्षेत्रफल अहिले २३.३९ प्रतिशत मात्र पुगेको छ । यद्यपी पछिल्लो समयमा डोल्पा जाजरकोट लगायतका क्षेत्रमा संरक्षण क्षेत्र स्थापना गर्न तयारि गरिरहेकोले संरक्षित क्षेत्रको क्षेत्रफलमा वृद्धि हुने सम्भावा देखिएको छ ।

वन दशक कार्यक्रमले वन डढेलो ९० प्रतिशत घटाउने कार्यक्रम राखेको भएपनि डढेलो लाग्ने दिनहरुको संख्या र मात्रा बढिरहेको छ । वन अतिक्रमण वन क्षेत्रको ठुलो चुनौती बनिरहेको छ । तथ्यांकमा वनको क्षेत्रफल ४४ प्रतिशत पुगेको भएपनि वन अतिक्रम रोक्न र अतिक्रमित वन फिर्ता ल्याउन सकिएको छैन । कार्यक्रममा कम्तिमा ५० प्रतिशत अतिक्रमित वन फिर्ता ल्याउने लक्ष्य राखिएको भएपनि २०७९ सालमा पनि  जम्मा १०४५४३हे. वन अतिक्रमण कायमै रहेको म.ले.प. को ६० औं प्रतिवेदनमा उल्लेख छ । जैविक मार्गमा नै बढी अतिक्रमण भएको र त्यहाको अतिक्रमण हटाउन कठिन भएकोले जैविक मार्ग

पुनर्स्थापनाको लक्ष्य हासिल हुन भने असम्भव नै देखिएको छ । हिमाली र पहाडी क्षेत्रमा बसाईसराईसंगै पशुपालन घटेको र तराईमा पनि वनमा चराउन लैजाने प्रचलन घटेकोले गर्दा वन क्षेत्रमा चरिचरनको समस्या भने १० वर्ष हिले जस्तो अहिले छैन । कम्तिमा १० वटा नगर उद्यान स्थापना गर्ने लक्ष्य वन मन्त्रालयको कार्यक्रमले गर्न नसकेपनि पछिल्लो समयमा धेरै नगरपालिकाहरुले नगर उद्यान बनाउने योजना ल्याएकोले यो लक्ष्य भने पुरा हुने लक्षण देखिएको छ । वन दशकमा एक लाख हरित रोजगारी सिर्जना गर्ने कुरालाइ प्रत्यक्ष मापन गर्न नसकिने र वनको व्यवस्थापनबाट सहज रुपमा यो लक्ष्य पुरा गर्न सकिने भएकोले यो लक्ष्य पुरा भएको अनुमान गर्न सकिन्छ ।

सरकारी नीति कार्यक्रम र बजेटमा वि.सं २०७१ दृखि नै वन दशकलाइ सम्बोधन गरिएको भएपनि देश संघीय संरचनामा गएको अवस्थामा नीतिगत र कानूनी अस्पष्टताले गर्दा वन दशक कार्यक्रमले निर्धारण गरीका धेरै कार्यहरु अघि बढ्न सकेका थिएनन । अहिले २०७५ यता नयाँ वन ऐन, नियमावलि र वन नीति आईसकेका छन् ।

वन दशक कार्यक्रम सुरु भए लगत्तै देश संघियतामा गएको र प्रदेशहरुले समयमै वन सम्बन्धि नीति तथा कानूनहरु नबनाएको र वनको अधिकारको बारेमा संघ, प्रदेश, स्थानिय तह र समुदाय बिचमा विवाद आएकोले वन दशकका लक्ष्य अनुसारका कामहर हुन सकेनन् ।

नेपालमा वन क्षेत्रको लागि नयाँनयाँ कार्यक्रमहरु ल्याउने तर त्यसलाई सफल बनाउन ध्यान नदिने गर्नाले वन क्षेत्रबाट लाभ लिन सकिएको छैन । वन दशक अभियानको अवधि लगभग सकिएको छ । अब वन क्षेत्रमा कानूनी र संरचनात्मक अडचन पनि छैन । यस्तो अनुकूल अवस्थामा तिनै तहका सरकारहरु इमान्दार भएर लाग्ने र सबै सरोकारवाला जनतालाई वन दशकको आवस्यकता र कार्यक्रमको वारेमा बुझाउन सकियो भने वृक्षारोपण, निजि वन विकास, नदि उकास क्षेत्रमा हरियाली, शहरी हरियाली वृद्धि जस्ता कार्यहरुमा जनसहभागिता अवस्यपनि बढ्नेछ । यस्तो कार्यले वन दशक कार्यक्रमले लिएका लक्ष्यहरु भविस्यमा पक्कैपनि केहि हदसम्म पुरा हुने आशा गर्न सकिनेछ ।

*बुटवल टुडे, २०८० चैत्र १८*

# Forest Decade Program and its Achievements

Yubaraj Kandel

*Summary*

The Forest Decade Program has made significant strides in providing essential goods and services to rural communities, as well as promoting greening in urban areas and managing sustainable forests. The program aims to increase productivity in the region, combat forest destruction and encroachment, adapt to climate change, and engage youth in conservation efforts. Initiated by the Ministry of Forestry and Land Conservation, the Forest Decade Program, under the banner of "Forest for Prosperity," has mobilized various governmental and non-governmental sectors to promote tree plantation and forest development nationwide. However, challenges arose with the transition to federalism in the country, leading to delays in forest policies and laws at the provincial level.Despite efforts to introduce new programs in the forest sector, the lack of attention to their successful implementation has hindered the sector's progress. As the Forest Decade campaign nears its end, there is now an opportunity to overcome legal and structural obstacles in the forest sector. Moving forward, it is crucial for governments at all levels to act transparently and communicate effectively with stakeholders about the importance of the Forest Decade Program. By doing so, there is hope that the program's objectives can be achieved to some extent in the future.

*Butwal Today, 31 March 2024*

# वन क्षेत्रको सुशासनमा कोभिड १९ को असर
# The impact of Covid-19 on the governance of the forest sector

युवराज कंडेल

*सन् २०१९ को अन्त्यतिर चीनमा देखा परेको कोरोनाको कहर सन् २०२०को सुरुसंगै नेपालमा पनि प्रवेश गऱ्यो । कोरोनाको पहिलो लहर नेपालमा आउदा ठुलो मानवीय क्षति नगरेपनि त्यसले समाजलाई आतंकित पार्ने काम भने गऱ्यो । कोरोनाको दोश्रो र तेश्रो लहरले नेपालमा मानवीय क्षति बढी गराएपनि आर्थिक र सामाजिक क्षेत्रमा भने सन् २०२० देखि नै ठूलो उथलपुथल पाऱ्यो । लामो समयसम्म मानिसहरु घरमा बसेकोले वनमा अरु क्षेत्रमा जस्तो मानवीय चाप नपरेकोले कोरोनाकालमा वन क्षेत्रमा समेत सकारात्मक प्रभावहरु देखिएका थिए । वन कटान, चोरी सिकारी र वन डढेलो कम भएको लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयको वार्षिक प्रगति प्रतिवेदनमा उल्लेख छ । कोरोना कहरको समयमा वन फँडानिमा कमि, डढेलोका घटना र क्षतिमा कमि जस्ता लाभहरु प्राप्त भएपनि वन क्षेत्रको सुशासन र दिगो विकासमा भने प्रतिकूल असर परेको देखिन्छ ।*

सन् २०१९ को अन्त्यतिर चीनमा देखा परेको कोरोनाको कहर सन् २०२०को सुरुसंगै नेपालमा पनि प्रवेश गऱ्यो । कोरोनाको पहिलो लहर नेपालमा आउदा ठुलो मानवीय क्षति नगरेपनि त्यसले समाजलाई आतंकित पार्ने काम भने गऱ्यो । कोरोनाको दोश्रो र तेश्रो लहरले नेपालमा मानवीय क्षति बढी गराएपनि आर्थिक र सामाजिक क्षेत्रमा भने सन् २०२० देखि नै ठूलो उथलपुथल पाऱ्यो । कोरोनाको कारणले व्यवसायिक क्षेत्र मात्र थला परन , जिविकोपार्जन, स्वास्थ्य, शिक्षा र नागरिक सेवा प्रवाहको गतिमा नराम्ररी धक्का पुगेको छ । अहिले कोभिड संक्रमण विस्तारै बढेपनि विचमा केही मत्थर भएको थियो तर ३ वर्ष अघिदेखि सुरु भएको आर्थिक, सामाजिक र पर्यावरणीय क्षतीको पुनर्भरण गर्न भने लामै समय कुर्नुपर्ने देखिएको छ ।

विस्वभरी कोरोना कहर बढ्दै जादा नेपालमा पनि बन्दाबन्दी भएको थियो । यातायात, बजार र उद्योग क्षेत्र बन्द हुदा र मानिसहरुको आवतजावत बन्द हुदा वातावरणिय क्षेत्रमा सकारात्मक प्रभाव परेको देखिन्थ्यो । शहरी क्षेत्रमा विगतमा देखिने वायु प्रदुषण र फोहरमैला निकै कम भएकोले शहरहरु सफा देखिएका थिए । धेरैपछि काठमाण्डौ उपत्यकाको आकाश सफा भएको, उपत्यकाबाट हिमाल स्पष्ट देखिएका खबरहरुले राम्रै चर्चा पाएका थिए । लामो समयसम्म मानिसहरु घरमा बसेकोले वनमा अरु क्षेत्रमा जस्तो मानवीय चाप नपरेकोले कोरोनाकालमा वन क्षेत्रमा समेत सकारात्मक प्रभावहरु देखिएका थिए । सामुदायिक वन समुहहरु र राष्ट्रिय निकुन्जहरुले वन क्षेत्रमा प्रवेश निषेधको

सुचना नै प्रकाशित गरेर वनमा हुने चहलपहललाई रोक्ने प्रयास गरेका थिए । यसले गर्दा वन कटान, चोरी सिकारी र वन डढेलो कम भएको लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयको वार्षिक प्रगति प्रतिवेदनमा उल्लेख छ ।

कोरोना कहरको समयमा वन फँडानिमा कमि, डढेलोका घटना र क्षतिमा कमि जस्ता लाभहरु प्राप्त भएपनि वन क्षेत्रको सुशासन र दिगो विकासमा भने प्रतिकूल असर परेको देखिन्छ । रुपन्देही जिल्लाको करहिया सामुदायिक वनले लुम्बिनी प्रदेशको तत्कालिन उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयबाट बोटानिकल गार्डेन बनाउनको लागि ५० लाख पाएको थियो । वनको आन्तरिक आम्दानी थपेर सामुदायिक वनमा व्यवस्थित गार्डेन बनाउने र त्यसबाट आम्दानि गर्ने समुहको योजना थियो । तर काम सुरु गर्दा नगर्दै देशमा कोरोनाको सन्त्रास फैलियो । कामदारलाई वनमा नै राखेर बल्लतल्ल बोटानिकल गार्डेन क्षेत्रमा तारजाली लगाउने काम भयो । तर, समुहले वनबाट काठपात निकालेर विक्री गर्न भने पाएन । समुहले आम्दानी गर्न नसक्दा बोटानिकल गार्डेनका अन्य पुर्वाधारहरु बनाउन सकेन । कोरोनाकालमै कार्ययोजनाको म्याद सकिएकोले कोरोनाको असर कम भएपछि पनि तत्कालै समुहले वनबाट आम्दानि गर्न सकेन । अहिले बोटानिकल गार्डेन झाडीमा परिणत भएको छ । प्रदेश सरकारको लगानीको सदुपयोग नभएको जस्तो देखिएको छ । यस्तो पिडा धेरै सामुदायिक वन समुहले भोग्न बाध्य भएका छन् । कोरोनाकालमा धेरै वन समूहको कार्ययोजनाको म्याद सकिएकाहरुले लामो समय नयाँ कार्ययोजना बनाउन र पुरानालाई नै निरन्तरता दिन पनि सकेनन । कोरोनाकालमै संघीय वन ऐन आएको , बैज्ञानिक वन खारेज भएको र वन प्रदेश वा संघ कसको मातहतमा रहने भन्ने किचलोले गर्दा कोरोना कहर कम भएपछी पनि सामुदायिक वन समुहहरुले तत्कालै कार्ययोजना निर्माण र संसोधन गर्न सकेनन. जसले सामुदायिक वन व्यवस्थापन , विकास र उपयोगमा नकारात्मक असर पुगेको छ । यो असरबाट तंग्रिन सामुदायिक वन समुहहरुलाई लामो समय लग्नेछ ।

कोरोनाको प्रत्यक्ष असर सामुदायिक वनको आर्थिक पाटोमा समेत देखियो । सामुदायिक वन समुहहरुले यो समयमा कार्ययोजना अनुसार वन पैदावार संकलन गरेर विक्री वितरण गर्न पाएनन् भने स्टकमा रहेका वनजन्य पैदावारहरू विक्री वितरण गर्न नपाउदा कुहिएर गएको देखिएको थियो । वनबाट वन पैदावार निकाल्न नसकिएको र आफुसंग भएका पैदावारहरू कुहिएकोले समुहहरुले ठुलो नोक्सानी बेहोर्नु पर्‍यो । पर्या-पर्यटनबाट लाभ लिएका सामुदायिक वन समुहहरुको आम्दानी कोरोनाकालमा ठप्प भएको थियो । वन पैदावार विक्री र पर्यटनबाट हुने आम्दानि गुमेपछि धेरै सामुदायिक वनले वन व्यवस्थापनका लागि खटाएका कामदारलाई बिदा दिएका थिए । मिनी जु समेत संचालन गरेर आम्दानी गरिरहेका रुपन्देहीको शंकरनगर सामुदायिक वनमा रहेको वन विहारले पालेका जीवजन्तुलाई खाना खुवाउन समेत नसक्ने अवस्था आएर ति जीवजन्तुको प्राण रक्षाको लागि

सहयोगको लागि सार्वजनिक आव्हान समेत गर्नु परेको थियो ।

लुम्बिनी प्रदेशको वनको हैसियत बिग्रन नदिनको लागि कोभिडको बन्दाबंदिले सहयोग गरेको भएपनि प्रदेशको वन तथा वातावरण मन्त्रालयले सम्पादन गर्नुपर्ने काममा भने ठुलो अवरोध उत्पन्न भएको देखियो । उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयले ठुलो लगानी र तयारि गरेका लुम्बिनी भ्रमण वर्ष र भिजिट नेपाल २०२० जस्ता कार्यक्रमहरु रोक्नुपर्दा प्रदेश सरकारको लगानी मात्र खेर गएन, पर्यटन क्षेत्र नै पछाडी धकेलिएको छ । जसरिपनि बजेट सक्ने भन्ने ध्याउन्नमा मन्त्रालयका कर्मचारीहरु तल्लिन हुने भएकोले अन्य मन्त्रालयको तुलनामा लुम्बिनी प्रदेश वन तथा वातावरण मन्त्रालयको कोरोना प्रभावित आर्थिक वर्षहरुको वित्तीय प्रगति अन्य मन्त्रालयको भन्दा राम्रो देखिएपनि भौतिक प्रगति भने कमजोर देखिन्छ । कोरोना कहर उच्च रहेका २ वर्षमा ठेकेदार मार्फत गरिने पोखरी निर्माण, गल्छी संरक्षण जस्ता केहि साना कामहरु भएपनि समुदायको बढी सहभागिता हुने वृहत वृक्षारोपण, जैविक छेकवार निर्माण, वानस्पतिक उद्यान निर्माण जस्ता कामहरु यो अवधिमा सम्पन्न हुन सकेन् । बन्दाबंदिको कारण वनमा वन प्रशासनको पहुँच कमजोर भएको मौका पारेर वन फडानी र चोरि शिकारी कार्य भएपनि त्यसको सुचना संकलन र नियन्त्रण गर्ने काम नभएकोले कोरोना कालमा चोरि शिकारी घटेको भन्ने प्रतिवेदनहरु तयार भैरहेका छन्, जसलाई वास्तविक मान्न सकिदैन ।

कोभिड १९ ले लुम्बिनी प्रदेशमा प्रदेश सरकारले आ.ब. २०७६/७७ र २०७७/७८ को वार्षिक नीति कार्यक्रममा उल्लेख गरेका वनको बहुउपयोगको नीति अवलम्बन गर्दै खाली जग्गाहरुमा वृक्षारोपण अभियान संचालन गर्ने, स्थानीय तह तथा निजी क्षेत्रसँगको सहकार्यमा जैविक विविधतासम्बन्धी प्रादेशिक संग्रहालय, वनस्पति उद्यान, चिडियाखाना स्थापनाको कार्य सुरु जडिबुटी तथा सुगन्धित वनस्पतिको संभाव्यता अध्ययन गरी प्रत्येक जिल्लामा जडिबुटी तथा सुगन्धित बनस्पतिको पकेट वनलाई कृषिसँग आवद्ध गर्दै प्रत्येक जिल्लामा कम्तीमा दुईवटा नमूना कृषि वन विकास कार्यक्रम संचालन जस्ता कार्यहरु सम्पन्न हुन सकेनन । वातावरण संरक्षण ऐनको मस्यौदा २०७६ माघमा प्रदेश सभामा दर्ता गरेको भएपनि कोभिडको कारणले सरोकारवालाहरु विचमा छलफल समेत नगरी हतारहतार २०७७ जेठमा पारित गरिएको थियो । प्रदेश सरकारको स्थापनासंगै प्रदेश वन ऐनको मस्यौदा तयारि गरिएको थियो । २०७७ सालको सुरुमै वन ऐनको मस्यौदा तयार गरेको भएपनि कोभिडको कारणले जिल्ला स्तरका वन कर्मचारी र अन्य सरोकारवालाहरुसँग ब्यापक छलफल गरि राय लिने र मस्यौदा संसोधन गर्न काम हुन सकेन । मन्त्रालयले तयार गरेको मस्यौदाको बारेमा मन्त्रालयका कर्मचारी र सिमित वन प्राविधिकहरुलाई मात्र जानकारी थियो । सरोकारवालाहरुलाई सामान्य जानकारी समेत नदिएर वन विधेयकलाई २०७८ असार १ गते प्रदेश सभामा दर्ता गरियो र कार्तिक २९ गते पारित गरिएको थियो । कोभिडको

कारणले वन ऐन बनाउने क्रममा सरोकारवालासँग व्यापक छलफल गर्न नसकिएको भएपनि ऐनमा सबैका कुरा समेटिएको वन मन्त्रालय सम्बद्ध पक्षको दावी रहेपनि वन ऐन तथा नियमावली बनाउदा सरोकारवालालाई सहभागी नगराईएको गुनासो धेरै छ। यिनै गुनासो र अस्पस्टताको कारणले वन ऐन प्रमाणीकरण भएको एक वर्ष पुग्दासम्मपनि प्रभावकारी कार्यान्वयनमा आउन सकेको देखिदैन। वन ऐन आउनु अघि तयार हुनुपर्ने प्रदेश वन तथा जैविक विविधता नीति तयार भएका छैनन् । लामो समयसम्म वन कर्मचारीहरु मन्त्रालय र डिभिजन कार्यालयमा मात्र सिमित हुदा निजि वन, कबुलियत वन, सामुदायिक वन कार्यक्रमहरु प्रभावित भएका मात्र छैनन्, वन क्षेत्रको वास्तविक अवस्था सम्बन्धि तथ्यांकहरू सरकारलाई प्राप्त हुन समेत सकेका छैनन् । यसले वन प्रशासन र वन व्यवस्थापनको क्षेत्रमा लामो समयसम्म असर पार्ने देखिन्छ।

कोभिड १९ को जनस्वास्थ्यमा परेको असर कम भएको छ । सामाजिक र आर्थिक क्षेत्रहरु विस्तारै तंग्रिन थालेका छन् । सतही रुपबाट हेर्दा कोरोना कहरमा वनक्षेत्र नपरेजस्तो देखिएको छ। डढेलोमा कमि र देखिनेगरी वन विनाश नभएकोले वन संरक्षण मा फाईदा पुगेको जस्तो देखिएको पनि छ।. तर वन क्षेत्रमा संघियताको प्रयोग हुने लागेको बेलामा कोभिडको कारणले धेरै नीतिगत, कार्यक्रमिक र प्रशासनिक ढिलाई भएको छ । यसले गर्दा कोरोनाकै बहानामा वनक्षेत्रमा देखिएका बेथितिहरूको असर लामो समयसम्म देखिने निश्चित छ।

*बुटवल टुडे, २०७९ पृष २०*

yrkandel@gmail.com

# The Impact of Covid-19 on the Governance of the Forest Sector

Yubaraj Kandel

*Summary*

The outbreak of the coronavirus in China at the end of 2019 had a significant impact on Nepal's economy and society. As people stayed home for extended periods, there was a noticeable decrease in human activity in forested areas, leading to positive effects on the forests during the pandemic. While the reduction in deforestation and fire incidents were beneficial outcomes of the crisis, the governance and sustainable development of the forest sector suffered adverse effects.The economic aspect of community forests also felt the direct impact of the pandemic. Community forest groups were unable to collect and distribute forest products according to their action plans, resulting in stockpiles of rotting goods that could not be sold or distributed. Additionally, community forests that relied on tourism for income saw a halt in revenue during the pandemic, leading to layoffs of forest management workers. The limited presence of forest staff at Ministry and division offices further exacerbated the challenges faced by community-based forestry programs. This not only hindered the implementation of forest management plans but also impeded the government's ability to gather accurate data on the state of the forest sector. The long-term effects of these disruptions are expected to have lasting implications on forest administration and management. Although the forest area may appear unaffected by the coronavirus on the surface, the implementation of federalism in the forest sector has been hindered by policy, programmatic, and administrative delays caused by the pandemic. As a result, the repercussions of the issues faced in the forest sector during the pandemic are likely to persist for an extended period.

*Butwal Today, 4 january 2023*

# बेथितिको जालोमा वन

## Forest Sectors of Nepal in the web of distortion

युवराज कंडेल

*वनलाई सामान्य नागरिकदेखि वन कर्मचारी, जनप्रतिनिधि, वन प्रशासक, राजनैतिक दल र सरकारले कमाई खाने भाँडो बनाउन खोज्दा वन क्षेत्रमा सधै बेथिति दोहोरिने गरेको छ । वनका बेथितिहरुले गर्दा वनबाट न्युनतम लाभ लिन सकिएको छैन नै वातावरणिय र सामाजिक पद्धतिमा समेत नकारात्मक असर परिरहेको छ । महालेखा परीक्षक र अख्तियारका हरेक वर्षका प्रतिवेदनहरुले वनमा बेथिति बढेको औल्याई रहेपनि सरकार, समाज र दलहरुले वनमा सुशासन स्थापना गरि वनक्षेत्रलाई सुरक्षित, उत्पादनमुखी र बहु उपयोगी बनाउने कुरामा प्रतिवद्ध भएर लाग्न सकेका छैनन् ।*

भूसंरक्षण, जलाधार संरक्षण, पानीको उपलब्धता, काठपात र जडिबुटी उपलब्धता, खानी र पर्यटन जस्ता सम्भावनाहरू वनसंगै जोडिएर आउने भएकोले वनलाई सबै सरकारहरुले आफ्नो रुचिको क्षेत्रमा राख्ने गरेको पाइन्छ । वन सम्पदालाई आर्थीक, सामाजिक, राजनैतिक र पर्यावरणीय दृष्टिबाट आफु अनुकुल प्रयोग गर्ने प्रचलन नेपालमा धेरै पहिलेदेखि नै चलिरहेको छ । पछिल्लो समयमा नेपालमा संघीय, प्रादेशिक र स्थानीय गरि तिनै तहका सरकारहरुको तानातानमा वन परिरहेको छ । तिनै तहका सरकारले वनजंगललाई समृद्धिको आधार बनाउने अल्पकालीन र दिर्घकालिन योजनाहरु सार्वजनिक गरिरहेका छन् । वनलाई आफ्नो पकडमा राखेर लाभ लिन खोज्दा सरकार, वन प्रशासन र वन उपभोक्ताहरु विचका विवादहरु छताछुल्ल भैरहेका छन् । पछिल्लो समयमा सामुदायिक वन महासंघले सरकारले ल्याएको संघीय वन नियमावलीको विरुद्ध संघर्ष चलाएर वनका सरोकारवालाहरुको ध्यान तानिरहेको बेलामा भर्खर सार्वजनिक भएको महालेखा परिक्षकको ५९ औं वार्षिक प्रतिवेदनले औल्याएको वन क्षेत्रका वेथितिहरुले एकपटक फेरी वनका शुभचिन्तकहरुलाई झस्काएको छ ।

वनमा सुशासन कायम गर्ने र वनलाई समृद्धिको आधार बनाउने कुराहरु धेरै पटक भनिएपनि वन मन्त्रालय र त्यस अन्तर्गतका कार्यालय तथा परियोजनाहरु सधै विवादमा पर्ने गरेका छन् । महालेखा परीक्षकको कार्यालयले सार्वजनिक गरेको ५९ औ प्रतिवेदनमा समेत सो कुरा स्पष्ट रुपमा देखिएको छ । नेपालका वन जंगलमा काठपात प्रसस्त भएपनि नीतिगत भ्रस्ट्राचार र ढिलासुस्तीले गर्दा काठको कालोबजारी चलिरहेको छ । बजारमा सधै काठको हाहाकार हुने गरेको छ । वर्सेनी विदेशबाट अर्बौं रुपियाको काठ र फर्निचर आयात भैरहेको छ । आर्थिक वर्ष २०७७/७८ मा २२५ लाख घनाफिट काठ उत्पादन गर्न लक्ष्य निर्धारण गरेकोमा १९४ लाख घन फिट र आ.ब २०७८/७९ को फाल्गुन सम्ममा १९४ लाख २० हजार हेक्टर काठ र १० हजार ६७७ चट्ट दाउरा उत्पादन भएबाट वन क्षेत्रबाट लक्ष्यअनुरुप उत्पादन हुन सकेको देखिदैन् । महालेखाको प्रतिवेदनलाई हेर्दा वन क्षेत्रमा १० लाख ९४ हजार घनफिट काठ बचत रहेकोमा सोको प्रयोगको सुनिश्चितता नगरी आयात इजाजत दिने गरेको र काठ आयात अनुमति दिँदा आवश्यकता विश्लेषण नगरेको देखिन्छ । आ.ब. २०७७/७८ मा २ अर्ब ३३ करोड मुल्यको काठ विदेशबाट आयात भएको थियो ।

पछिल्ला ४ वर्षका तथ्यांकहरुलाई विश्लेषण गर्दा वर्षेनी औशत २ अर्ब २५ करोड रुपियाको काठ र एक अर्ब ६९ करोड रुपियाको फर्निचर आयात भैरहेको छ भने अर्कोतर्फ .ढलापडा रुखको समयमै व्यवस्थापन नगर्ने, काठको ग्रेडिंग नगर्ने, समयमै काठ संकलन र बिक्री नगर्ने जस्ता कार्यहरु वन कार्यालयले गर्दा नेपालले वन क्षेत्रबाट पाउनुपर्ने ठुलो लाभ वर्षेनी गुमाउदै गएको छ ।

नेपालमा सामुदायिक वन कार्यक्रम निकै सफल मानिन्छ । मन्त्रालयबाट प्राप्त विवरण २२ हजार ६८२ सामुदायिक वन उपभोक्ता समुहलाई २४ लाख ९० हजार १९४ हेक्टर वन क्षेत्र हस्तान्तरण गरेको देखिन्छ । हस्तान्तरित सामुदायिक वनबाट कार्य योजनामा स्वीकृत कटान परिमाण, वास्तविक कटान परिमाण, आन्तरिक खपत परिमाण, बिक्री परिमाण, बिक्री आय र मौज्दात परिमाण खुल्ने गरी काठ दाउराको केन्द्रिय अभिलेख अहिलेसम्म राखेको पाइदैन । त्यसैगरी उद्देश्यअनुरुप लक्षित उपभोक्ता लाभान्वित भए नभएको सम्बन्धमा मूल्याङ्कन समेत वन मन्त्रालयले गरेको पाइदैन । सामुदायिक वनमा वास्तविक उपभोक्ताहरुको भन्दा ठालुहरुको रजगज चलिरहेको छ । वास्तविक उपभोक्ताहरुलाई पन्छाएर केहि ठालुहरुले सामुदायिक वनको नाममा लाभ लीईरहदा सरकारले टुलुटुलु हेरेर बसिरहेको छ।

वनक्षेत्रमा बेथिति देखिने अर्को कार्यक्रम भनेको वृक्षारोपण हो । नेपालमा हरेक वर्ष वनको पुनरुत्थान र हरियाली प्रवर्द्धन भन्दै सरकारी र सामाजिक सस्थाबाट लाखौ विरुवाहरु रोपिन्छन् । वृक्षारोपणमा ठुलो धनराशी समेत खर्च भैरहेको छ । तामझामका साथमा वृक्षारोपण गरेपनि विरुवा हुर्काउन वास्ता गरिदैन । वि.स २०७६ लाई सरकारले वृक्षारोपण वर्षको रुपमा मनाउने र ५ करोड विरुवा रोप्ने सरकारी घोषणा अनुसार अभियान चलाईएको थियो र त्यो आर्थिक वर्षमा ४ करोड ६६ लाख ४ हजार विरुवा रोपेको सरकारी रेकर्ड छ । सरकारी रेकर्डलाई हेर्ने हो भने वि.स. २०६६ देखि २०७५ सम्म मात्र ११ करोड ७४ लाख ११ हजार विरुवा सरकारी स्तरबाट रोपिएको देखिन्छ । हरेक वर्ष ३ करोड भन्दा बढी विरुवा वृक्षारोपणामा खपत भैरहेको छ. तर वृक्षारोपण गरिएका विरुवा कस्ता भए? त्यसबाट कति लाभ भयो भन्ने कुराको लेखाजोखा हुने गरेको छैन । त्यसैले वृक्षारोपण जस्तो महत्वपूर्ण र सम्वेदनशिल कुरा पनि धेरैको कमाईखाने साधान बनिरहेको छ ।

वन अतिक्रमण नेपालको वन क्षेत्रको मुख्य चुनौती हो । मन्त्रिपरिषदको २०७७ जेठ २८ गतेको निर्णय अनुसार गठित उच्च स्तरीय छानबिन समितिले तयार गरेको प्रतिवेदन अनुसार नेपालका ६५ जिल्लामा १ लाख ४ हजार ५४३ ( आ.ब. २०७७/७८ मा मात्र ६६ हजार ४३४ हे. वन क्षेत्र अतिक्रमण भएको सरकारी अभिलेख छ ।) हेक्टर वन अतिक्रमणमा परेको महालेखाको प्रतिवेदनमा उल्लेख छ । यसैगरी संरक्षित क्षेत्रको ४ हजार ५८६ हेक्टर जग्गा अतिक्रमणमा परेकोमा गत आर्थिक वर्षमा ३५ हेक्टरमात्र अतिक्रमण हटाए तापनि निकुञ्जभित्र रहेका बस्ती स्थानान्तरण नभएबाट वन्यजन्तुको प्राकृतिक वसोवास र आहार विहारमा असर परेको छ । एकातर्फ व्यक्ति र संघ सस्थाहरुले विभिन्न बहानामा वन अतिक्रमण गरिरहेका छन् भने अर्कोतफ सरकारले जलविद्युत, सडक, खानेपानीलगायतका अन्य निकायलाई भौतिक पूर्वाधारहरु निर्माण गर्न वन क्षेत्रको जग्गा उपलब्ध गराउदै आएको छ । आर्थिक सर्भेक्षण २०७८/७९ अनुसार सरकारले २०७८ फागुनसम्म विभिन्न विकास आयोजनाहरुलाई वन क्षेत्रको १८ हजार ५२३ हेक्टर जग्गा उपलब्ध गराएको छ । सरकारले वन क्षेत्र उपलब्ध गराएपछि त्यो जग्गाको उद्धेश्य अनुसार प्रयोग भैरहेको छ वा छैन, आवस्यक मात्रामा रुख विरुवा हटाएको वा वृक्षारोपण गरिएको छ वा छैन भन्ने कुराको खोजीनिती समेत हुने गरेको छैन । वन क्षेत्र प्रयोग गर्ने सम्बन्धी कार्यविधि, २०७४ अनुसार मुनाफा कमाउने उद्देश्यले कार्यान्वयन हुने योजनाले वन क्षेत्रको भूउपयोग स्थायी रुपमा परिवर्तन हुने गरी सम्झौता गरेमा एक वर्षभित्र सो बराबरको सट्टा जग्गा उपलब्ध गराएपछि मात्र राष्ट्रिय वन

प्रयोग गर्न पाउने व्यवस्था छ । हालसम्म सरकारले करिब ४ हजार हेक्टर जग्गा यस्ता सस्थालाई उपलब्ध गराएकोमा धेरै आयोजना र उद्योगले सट्टा जग्गा उपलब्ध गराएको छैनन् । वन क्षेत्रको दिगो विकासका लागि सट्टा जग्गा प्राप्त गर्न नसक्नु वा सट्टा जग्गा लिने प्रयास नगर्नु वास्तवमा नेपालको वन प्रशासनकै नालायकीपन हो ।

वनमा बेथिति बढ्दै गएको कुरा अख्तियारका वार्षिक प्रतिवेदनहरुले पनि प्रस्ट देखाउछन् । पछिल्ला ५ वर्षका प्रतिवेदनहरुलाई हेर्दा अख्तियारमा बढी मुद्धा पर्ने क्षेत्रहरु मध्ये वन तथा वातावरण चौथो स्थानमा रहेको देखिन्छ । आ.ब. २०७७/७८ मा अख्तियारमा परिका उजुरीहरु मध्ये ५.०१ प्रतिशत उजुरीहरु वन तथा वातावरणसंग सम्बन्धित थिए । बन काठको लगत जाँच, कटान आदेश, छुटपुर्जी, वन उपभोक्ता समूहको विधान र कार्ययोजना दर्ता सिफारिसमा रिसवत लिने, बनका काठ बदनियतसाथ कटान गरी ओसारपसार गर्ने, बन सम्पदाको विनाश/ चोरी निकासीमा संलग्नलाई सहयोग पुऱ्याई अनुचित लाभ लिने, बनको मौज्दात र बार्षिक स्वीकार्य कटान वास्तविकताभन्दा बढी देखाई त्रुटिपूर्ण कार्ययोजना तयार गरी अत्यधिक परिमाणमा कटान आदेश दिने, अनियमित रूपमा कटान गरेका काठको झुठा लगत तयार गरी स्वीकृत गर्ने गराउने, सामुदायिक वन समूहको रकम हिनामिना गर्ने, बिरुवा उत्पादन, वितरण तथा वृक्षारोपण तालिम जस्ता कार्यक्रमका झुठा बिल / भरपाई बनाई बजेट अपचलन गर्ने गरेको कुरा हरेक वर्ष अख्तियारको प्रतिवेदनले उठाईरहदा पनि बेथिति घट्नुको साटो अझ फस्टाउदै गएको छ । सामुदायिक वन समुह र वन कर्मचारीहरुको मिलोमतोमा प्रक्रिया मिलाएर गरिएका भ्रस्ट्राचारलाई कोट्याउन थाल्ने हो भने बेथितिको अर्को महाभारत नै तयार हुन्छ ।

संघियता लागु भएपछी वन सम्बन्धि केहि अधिकारहरु प्रदेश र स्थानि तहसम्म झरेका छन् । तर प्रदेश सरकार स्थिर र भविस्यद्रष्टा बन्न नसक्दा पछिल्ला साढे ४ वर्षमा प्रदेश सरकारले वन क्षेत्रमा केहि गर्ने सकेका छैनन् । सबैजसो प्रदेशहरुले प्रदेश वन ऐन बनाएको भएपनि स्पस्ट वन नीति र कार्ययोजना बनाउन नसक्दा प्रदेश सरकारका वन सम्बन्धि कार्यक्रमहरु पर्यटनका झिना मसिना काम, वृक्षारोपण, खोला खोल्सामा जैविक तटबन्ध निर्माण, गोष्ठी, वनमा पोखरी निर्माण, प्रतिक्षालय निर्माण जस्ता कामहरुमै सिमित रहन पुगेका छन् । सघिय सरकारले समयमै वन ऐन र नियमावली नबनाउदा प्रदेशहरुलाई वनक्षेत्रमा काम गर्न पाएका थिएनन । पछिल्लो समयमा संघीय वन ऐन र नियमावली आएपनि प्रदेशका अधिकारहरुलाई सिमित गर्ने किसिमले आएकोले आउदा दिनहरुमा पनि प्रदेशहरुले वन क्षेत्रमा उल्लेख्य काम गर्ने आशा देखिदैन ।

वनमा कुनै बेथिति वा परिवर्तन हुने बित्तिकै त्यसको प्रत्येक्ष असर नेपालको आर्थिक, सामाजिक र पर्यावरणीय क्षेत्रमा पर्ने गर्छ । वनलाई सामान्य नागरिकदेखि वन कर्मचारी, जनप्रतिनिधि, वन प्रशासक, राजनैतिक दल र सरकारले कमाई खाने भाँडो बनाउन खोज्दा वन क्षेत्रमा सधै बेथिति दोहोरिने गरेको छ । वनका बेथितिहरुले गर्दा वनबाट न्युनतम लाभ लिन सकिएको छैन नै वातावरणिय र सामाजिक पद्धतिमा समेत नकारात्मक असर परिरहेको छ । महालेखा परीक्षक र अख्तियारका हरेक वर्षका प्रतिवेदनहरुले वनमा बेथिति बढेको औल्याई रहेपनि सरकार, समाज र दलहरुले वनमा सुशासन स्थापना गरि वनक्षेत्रलाई सुरक्षित, उत्पादनमुखी र बहु उपयोगी बनाउने कुरामा प्रतिवद्ध भएर लाग्न सकेका छैनन् । अहिलेकै तथ्य र तथ्यांकहरू हेर्दा आउँदा दिनहरुमा वनमा अझ बेथिति बढ्न सक्ने संकेतहरु देखा परेका छन्, जुन सामाजिक, आर्थिक र पर्यावरणीय क्षेत्रको लागि अनिष्टको संकेत पनि हो ।

*बुटवल टुडे, २०७९ श्रावण २०*

yrkandel@gmail.com

# Forest Sectors of Nepal in the web of distortion

Yubaraj kandel

**Summary**

Forests are a vital component of any nation's landscape, offering a myriad of benefits such as land conservation, watershed protection, water availability, timber and herb resources, mining opportunities, and tourism potential. In Nepal, the utilization of forest resources has long been a practice that is viewed through economic, social, political, and environmental lenses. However, in recent times, forests in Nepal have become a focal point of contention among the federal, provincial, and local governments. Various levels of government are implementing short-term and long-term strategies to harness the prosperity potential of forests, leading to conflicts between government entities, forest administrators, and forest users. Despite repeated calls for good governance in forest management and the transformation of forests into engines of prosperity, the Ministry of Forestry and its affiliated offices and projects continue to be embroiled in controversy. The utilization of forests by citizens, forest personnel, elected officials, political parties, and the government for financial gain often results in chaos within the forest sector.This chaotic situation not only hinders the realization of the full potential of forests but also has adverse effects on the environment and social systems. While reports from the Auditor General and other authorities may indicate improvements in forest conditions, the establishment of good governance practices and the creation of safe, productive, and multi-functional forest areas remain elusive goals. Given the current trends and data, it is evident that unrest within the forest sector is likely to escalate in the future, posing significant challenges to the social, economic, and environmental fabric of the nation. It is imperative that all stakeholders come together to address these issues and work towards sustainable forest management practices that benefit both present and future generations.

*Butwal Today, 22 July 2022*

# वनमा कमजोर सुशासन

## Poor Governance in Nepal's Forests Sector

युवराज कंडेल

*भूसंरक्षण, जलाधार संरक्षण, पानीको उपलब्धता, काठपात र जडिबुटी उपलब्धता, खानी र पर्यटन जस्ता सम्भावनाहरू वनसंगै जोडिएर आउने भएकोले वनलाई सबै सरकारहरुले प्राथमिकतामा राख्ने गरेको पाइन्छ । त्यतिमात्र नभई वनलाइ पहुँचवालाहरुले वनलाई मालदार अड्डा मान्ने गर्छन र उनीहरुले सकेसम्म वन मन्त्रालयमा आफु र आफ्ना मान्छेहरुलाई नै पुऱ्याउन चाहन्छन् । वनलाई सरोकारवालाहरुले कमाई खाने भाडोको रुपमा लिने भएकोले वन क्षेत्रमा धेरै वेथिति र अनियमितताका खबरहरु दिनहुजसो आइरहेको देखिन्छ । वनमा सुशासन कायम गर्ने र वनलाई समृद्धिको आधार बनाउने कुराहरु धेरै पटक भनिएपनि वन मन्त्रालय र त्यस अन्तर्गतका कार्यालय तथा परियोजनाहरु सधैं विवादमा पर्ने गरेका छन् ।*

हरियो वन नेपालको धन भन्ने वाक्यांश नेपालीले सुन्न थालेको धेरै भैसकेको छ । २००७ सालताका दुई तिहाई क्षेत्रफलमा फैलिएको नेपालको वन अहिले ४४ प्रतिशत भूभागमा सिमित हुन पुगेको छ । वन सम्पदालाई आर्थीक, सामाजिक, राजनैतिक र पर्यावरणीय दृष्टिबाट आफु अनुकुल प्रयोग गर्ने प्रचलन नेपालमा चलिरहेको छ । पछिल्लो समयमा नेपालमा संघीय, प्रादेशिक र स्थानीय गरि तिनै तहका सरकारहरुले वनजंगललाई समृद्धिको आधार बनाउने अल्पकालीन र दिर्घकालिन योजनाहरु सार्वजनिक गरिरहेका छन् । भूसंरक्षण, जलाधार संरक्षण, पानीको उपलब्धता, काठपात र जडिबुटी उपलब्धता, खानि र पर्यटन जस्ता सम्भावनाहरू वनसंगै जोडिएर आउने भएकोले वनलाई सबै सरकारहरुले प्राथमिकतामा राख्ने गरेको पाइन्छ । त्यतिमात्र नभई वनलाइ पहुँचवालाहरुले वनलाई मालदार अड्डा मान्ने गर्छन र उनीहरुले सकेसम्म वन मन्त्रालयमा आफु र आफ्ना मान्छेहरुलाई नै पुऱ्याउन चाहन्छन् । वनलाई सरोकारवालाहरुले कमाई खाने भाडोको रुपमा लिने भएकोले वन क्षेत्रमा धेरै वेथिति र अनियमितताका खबरहरु दिनहुजसो आइरहेको देखिन्छ ।

वनमा सुशासन कायम गर्ने र वनलाई समृद्धिको आधार बनाउने कुराहरु धेरै पटक भनिएपनि वन मन्त्रालय र त्यस अन्तर्गतका कार्यालय तथा परियोजनाहरु सधैं विवादमा पर्ने गरेका छन् । चैत्र २९ गते महालेखा परीक्षकको कार्यालयले सार्वजनिक गरेको ५६ औ प्रतिवेदनमा समेत सो कुरा स्पष्ट रुपमा देखिएको छ । वन मन्त्रालयको कार्यक्षेत्रमा वन तथा वातावरण सम्बन्धी नीति, योजना तथा कार्यक्रम तर्जुमा गर्ने, कार्यान्वयन अनुगमन र मूल्याङ्कन गर्ने, वनजन्य उद्योगको प्रवर्द्धन, राष्ट्रिय निकुञ्ज तथा आरक्षको व्यवस्थापन, प्रकृति तथा वातावरण संरक्षण, जलवायु परिवर्तन, प्रदूषण नियन्त्रण, नियमन र अनुगमन, वातावरण प्रभाव मूल्याङ्कन लगायतका कार्य रहेका छन् । मन्त्रालयसमेत १९६ निकायबाट सेवा प्रवाह हुँदै आएको छ । गत आर्थिक वर्षमा वन मन्त्रालय र मातहत

निकायको रु.१९ अर्ब ८६ करोड ४९ लाखको लेखापरीक्षण सम्पन्न भएको छ । मन्त्रालय मातहतका सागठित संस्था, अन्य संस्था ९४ र समिति १ को रु.३ अर्ब १३ करोड १० लाख कारोबारको लेखापरीक्षण सम्पन्न गरिएको छ । लेखा परिक्षण गरिएको रकम मध्ये सरकारी कार्यालयतर्फ १९६ निकायमा रु.६७ करोड ४ लाख ९४ हजार तथा ९ वटा संगठित संस्था, अन्य संस्था र समिति तर्फ रु.१४ करोड १४ लाख ७१ हजार बेरुजू देखिएको महालेखाको प्रातिवेदनले देखाएको छ । त्यस्तै वन तथा वातावरण मन्त्रालय र मातहतमा १६ निकायमा कार्यक्रम सञ्चालन गर्न रु.२ करोड ८८ लाख ९४ हजार प्राविधिक सहायता प्राप्त हुने उल्लेख भएकोमा प्राप्ति र उपयोगको विवरणसहितको स्रेस्ता पेस गरी लेखापरीक्षण नगरिएको, जिल्ला वन कार्यालय रुपन्देही र ढोरपाटन शिकार आरक्षको रु.४ करोड ९ लाख ५३ हजारको स्रेस्ता लेखापरीक्षणको लागि पेस नभएको प्रतिवेदनले देखाएको छ । सतहमा आएका यस्ता प्रतिनिधिमुलक घटनाले वन मन्त्रालय भित्र कसरि बजेटको दुरुपयोग हुन्छ भन्ने कुराको स्पष्ट संकेत गर्दछ ।

बजारमा सधै काठको हाहाकार हुने गरेको छ । वर्सेनी विदेशबाट अर्बौ रुपियाको काठ र फर्निचर आयात भैरहेको छ । नेपालका वन जंगलमा काठपात प्रसस्त भएपनि नीतिगत भ्रस्ट्राचार र ढिलासुस्तीले गर्दा काठको कालोबजारी चलिरहेको छ । उपभोक्ताले ६ हजार प्रति घनफिटसम्म मुल्य हालेर काठ किन्न बाध्य छन् । सरकारले औशत रु ८५९ प्रति घनफिट मा काठ विक्री गर्ने गरेको छ, जुन उपभोक्ताको पहुँच भन्दा बाहिर रहेको छ । गत वर्ष ३० लाख घनफिट काठ र ३ हजार ५०० चट्टा दाउरा उत्पादन गर्ने लक्ष्य निर्धारण भएकोमा ११ लाख ३ हजार (३६.७७ प्रतिशत) घनफिट काठ र १ हजार ५२९ (४३.६८ प्रतिशत) चट्टा दाउरा उत्पादन भएबाट वन क्षेत्रबाट लक्ष्यअनुरुप उत्पादन हुन सकेको देखिदैन् । महालेखाको प्रतिवेदनलाई हेर्दा वन क्षेत्रमा १० लाख ९४ हजार घनफिट काठ बचत रहेकोमा सोको प्रयोगको सुनिश्चितता नगरी आयात इजाजत दिने गरेको र काठ आयात अनुमति दिँदा आवश्यकता विश्लेषण नगरेको देखिन्छ । एकातर्फ वर्षेनी २ अर्ब २३ करोड ६० रुपियाको काठ र एक अर्ब ६९ करोड रुपियाको फर्निचर आयात भैरहेको छ भने अर्कोतर्फ .ढलापडा रुखको समयमै व्यवस्थापन नगर्ने, काठको ग्रेडिंग नगर्ने, समयमै काठ संकलन र विक्री नगर्ने जस्ता कार्यहरु वन कार्यालयले गर्दा नेपालले वन क्षेत्रबाट पाउनुपर्ने ठुलो लाभ वर्षेनी गुमाउदै गएको छ । समयमै काठ विक्री नगर्ने र पछि काठ कुहिएको प्रतिवेदन तयार गरेर आफूखुशी काठ वेचेर व्यक्तिगत मुनाफा कमाउने ध्याउन्नमा वन पदाधिकारिहरु लाग्ने गरेकोले काठपात व्यवस्थापन हुन् नसकेको र राज्यले आम्दानी गुमाइरहेको कुरा महालेखाको प्रतिवेदनले वर्षेनी औल्याईदिदा समेत वन मन्त्रालयले मातहतका निकायाहरुको यस्तो प्रवृतिमा कमि आउन सकेको छैन । नेपालमा सामुदायिक वन कार्यक्रम निकै सफल मानिन्छ । मन्त्रालयबाट प्राप्त विवरण अनुसार २९ लाख ८ हजार घरधुरीलाई २२ लाख ३८ हजार हेक्टर वन क्षेत्र हस्तान्तरण गरेको देखिन्छ । हस्तान्तरित सामुदायिक वनबाट कार्य योजनामा स्वीकृत कटान परिमाण, वास्तविक कटान परिमाण, आन्तरिक खपत परिमाण, बिक्री परिमाण, बिक्री आय र मौज्दात परिमाण खुल्ने गरी काठ दाउराको केन्द्रिय अभिलेख अहिलेसम्म राखेको पाइदैन । त्यसैगरी उद्देश्यअनुरुप लक्षित उपभोक्ता लाभान्वित भए नभएको सम्बन्धमा मूल्याङ्कन समेत वन मन्त्रालयले गरेको पाइदैन । सामुदायिक वन समुहहरुले आफूखुशी ढंगले काठपात विक्री गर्ने प्रवृतिले गर्दा वनको काठपात उपभोक्ता भन्दा पनि काठ व्यवसायीको हातमा पुगिरहेको छ, जहाबाट उपभोक्ताहरुले महँगो मुल्य तिरेर काठपात किन्न बाध्य भैरहेका छन् ।

वन अतिक्रमण नेपालको वन क्षेत्रको मुख्य चुनौती हो । वन मन्त्रालयबाट प्राप्त विवरण अनुसार ९४ हजार २३३ हेक्टर वन र ३ हजार ८७६ हेक्टर जमिन अतिक्रमण भएको

मध्ये २०७१/७२ देखि २०७३/७४ सम्म ४ हजार २९१! हेक्टर र २०७४/७५ मा ९२० हेक्टरसमेत ५ हजार २११ हेक्टर (५.३१ प्रतिशत) क्षेत्रफल मात्र अतिक्रमण मुक्त भएको देखिन्छ । निकुञ्ज क्षेत्रको ३ हजार ८७६ हेक्टर वन अतिक्रमित भएको मध्ये मध्यवर्ती क्षेत्रमा ३ हजार ६९४ हेक्टर (९०.६ प्रतिशत) क्षेत्र अतिक्रमण भएको छ । गत आर्थिक वर्षमा २५ हेक्टरमात्र अतिक्रमण हटाए तापनि निकुञ्जभित्र रहेका बस्ती स्थानान्तरण नभएबाट वन्यजन्तुको प्राकृतिक वसोवास र आहार विहारमा असर परेको छ । एकातर्फ व्यक्ति र संघ सस्थाहरुले विभिन्न बहानामा वन अतिक्रमण गरिरहेका छन् भने अर्कोतफ सरकारले जलविद्युत, सडक, खानेपानीलगायतका अन्य निकायलाई भौतिक पूर्वाधारहरु निर्माण गर्न वन क्षेत्रको जग्गा उपलब्ध गराउदै आएको छ । महालेखाको ५६ औ प्रतिवेदन अनुसार सरकारले हालसम्म ५१६ निकायलाई १६ हजार ७१७ हेक्टर वन क्षेत्र उपलब्ध गराएको छ । सरकारले वन क्षेत्र उपलब्ध गराएपछि त्यो जग्गाको उद्धेश्य अनुसार प्रयोग भैरहेको छ वा छैन, आवस्यक मात्रामा रुख विरुवा हटाएको वा वृक्षारोपण गरिएको छ वा छैन भन्ने कुराको खोजीनिती समेत हुने गरेको छैन । वन क्षेत्र लिएका ५१६ मध्ये ४७५ निकायबाट त सरकारले राजस्व समेत उठाउन सकेको छैन । वन ऐन, २०४९ को दफा ६८ तथा वन क्षेत्र प्रयोग गर्ने सम्बन्धी कार्यविधि, २०७४ अनुसार मुनाफा कमाउने उद्देश्यले कार्यान्वियन हुने योजनाले वन क्षेत्रको भूउपयोग स्थायी रुपमा परिवर्तन हुने गरी सम्झौता गरेमा एक वर्षभित्र सो बराबरको सट्टा जग्गा उपलब्ध गराएपछि मात्र राष्ट्रिय वन प्रयोग गर्न पाउने व्यवस्था छ । मन्त्रालयले वन क्षेत्रको जग्गा अन्य प्रयोजनका लागि दिएको सम्बन्धमा गरेको अनुगमन प्रतिवेदन, २०७५ अनुसार १६४ जलविद्युत आयोजना, २२ सिमेन्ट उद्योग, १९ पर्यापर्यटन उद्योगलाई क्रमशः ३ हजार २२३, ३९८.८५ र २१४.७४ हेक्टर जग्गा उपलब्ध गराएकोमा उक्त आयोजना र उद्योगले सट्टा जग्गा उपलव्ध गराएको छैनन् । वन क्षेत्रको दिगो विकासका लागि सट्टा जग्गा प्राप्त गर्न नसक्नु वा सट्टा जग्गा लिने प्रयास नगर्नु वास्तवमा नेपालको वन प्रशासनकै नालायकीपन हो ।

वनको उचित व्यवस्थापनबाट स्थानीय तथा राष्ट्रिय अर्थतन्त्रमा उल्लेखनीय योगदान रहने तथ्यलाई आत्मसात गरी नेपालले २०७१ देखि वैज्ञानिक वन व्यवस्थापन कार्यविधि कार्यान्वयनमा ल्याएको थियो । कार्यविधि तयार गर्दा तत्काल कायम रहेको वन क्षेत्र ४२ लाख ७५ हजार हेक्टर (५१ प्रतिशत) को हुने २१ लाख ८० हजार हेक्टर वनक्षेत्र उत्पादनमूलक वैज्ञानिक वन व्यवस्थापन गर्न योग्य रहेको उल्लेख थियो ।

कपिलवस्तु जिल्लाबाट सुरु भएको यो कार्यक्रम हाल डोटी, जुम्ला, रुपन्देही, ललितपुर, बारा, इलाम, धनुषासमेत ४४ जिल्लामा कार्यान्वयनमा रहेको छ । कूल वन क्षेत्रको ५१ प्रतिशत क्षेत्रमा उत्पादनमूलक वैज्ञानिक वन व्यवस्थापन गरी वार्षिक ६ देखि १२ करोड घनफिटसम्म काठ उत्पादन, १२ लाख ९५ हजारसम्मले वार्षिक रोजगारी र वार्षिक करिब एक खर्ब राजस्व आर्जन हुने अनुमानका साथ कार्यविधि बनाई कार्यान्वियनमा ल्याएको यस कार्यक्रम लागू भएको ६ वर्ष बितिसक्दा जम्मा ८४ हजार ३३४ हेक्टर (३.९० प्रतिशत) मा मात्र वैज्ञानिक वन व्यवस्थापन कार्ययोजना स्वीकृत गरी लागू गरेको र वन क्षेत्रको प्रभावकारी उपयोगका लागि वैज्ञानिक वन व्यवस्थापन कार्यक्रमलाई पूर्ण रुपमा लागू गर्दा वार्षिक रु. १ खर्ब राजस्व प्राप्त हुने प्रक्षेपण गरेकोमा २०६९/७० देखि २०७४/७५ सम्म वार्षिक औसत रु. १ अर्ब २२ करोड (१.२२ प्रतिशत) मात्र प्राप्त भएको देखिएकोले वैज्ञानिक वन व्यवस्थापनबाट प्राप्त आय न्यून देखिएको छ । वैज्ञानिक वन व्यवस्थापनको नाममा व्यवस्थित रुपमा रुखहरु काट्ने भनिएपनि पश्चिमी तराईका वनहरुबाट लक्ष्य भन्दा दोब्बर रुखहरु कटानी भैरहेको र भित्रि मधेस तथा पूर्वी तराइका जिल्लाहरुमा लक्ष्यको एक तिहाइ मात्र रुखहरु कटानी र काठ उत्पादन , रुख कटान गरेको स्थानमा माउ रुखको संरक्षण गरी पुनरोत्पादन भए नभएको सम्बन्धमा निरीक्षण

तथा अनुसन्धान नगरेको महालेखाको प्रतिवेदनले औंल्याएको छ । वैज्ञानिक वन व्यवास्थापानाको नाममा भैरहेका यस्ता गतिविधिले नेपालको वन क्षेत्रलाई नै चुनौतिको दलदलमा फसाउने संकेतहरु देखिएका छन् ।

गत बैशाख महिनामा वनमन्त्रीले वन तथा वातावरण क्षेत्र सुधार कार्ययोजना २०७५ सार्वजनिक गर्दै वन क्षेत्रको संरक्षण, सम्बर्धन र उपयोगका साथै आर्थिक, सामाजीक र पर्यावरणीय पक्षमा उचित सन्तुलन कायम गर्दै वनको वैज्ञानिक व्यवस्थापन सहित वन क्षेत्रको बहुआयामिक उपयोगबाट जनताको आर्थिक अवस्थामा सुधार, रोजगारीका अवसरहरुको सिर्जना र स्थानीय, प्रादेशिक र राष्ट्रिय अर्थतन्त्रमा योगदान पुऱ्याउने सरकारको मुख्य कार्यदिशा रहने बताएका थिए । वनलाई आर्थिक विकास र रोजगारीको आधार बनाउने सपना हरेक सरकारले गर्ने भएपनि वनबाट अपेक्षित लाभ प्राप्त हुन सकेको देखिदैन । नेपालमा वन क्षेत्र बढेको देखिएपनि वनमा भैरहेको लगानीको अनुपातमा आम्दानि न्यून रहेको देखिन्छ । आर्थिक वर्ष २०६८/२०६९ मा लगानीको अनुपातमा ३८ प्रतिशत मात्र आम्दानि भएकोमा २०७२/७३ मा ओरालो लागेर ७ प्रतिशतमा झरेको थियो । पछिल्ला २ आर्थिक वर्षमा आम्दानीमा केहि सुधार भएर १५ प्रतिशत पुगेको देखिन्छ । यी तथ्यांकलाई हेर्दा वनले आम्दानि दिएर देशले आर्थिक लाभ प्राप्त गर्ने कुरा सधै सपना नै बनिरहने देखिन्छ ।

महालेखा परीक्षकको प्रतिवेदनले बजार मूल्यसँग तादात्म्यता हुने गरी काठको मूल्य निर्धारण नगरेको, अभिलेख नराखी काठ वितरण गरेको, अतिक्रमित वन क्षेत्र मुक्त गर्न प्रभावकारी कार्य नभएको, काठको मौज्दात जिम्मेवारी घटी सारेको, समयमा लिलाम बिक्री नगरेको, अन्य निकायलाई उपलब्ध वन क्षेत्रको जग्गा उपयोगको अनुगमन नगरेको, राजस्व तथा रोयल्टी असुली नगरेको, रोपण बिरुवाको संरक्षण नभएको, राष्ट्रिय निकुञ्ज तथा संरक्षित क्षेत्रको व्यवस्थापन एवं वैज्ञानिक वन व्यवस्थापन प्रभावकारी रुपले कार्यान्वयन नभएको लगायतका समस्याहरु देखाएर त्यसमा सुधार गर्नुपर्ने कुरा औंल्याएको छ । हरेक वर्ष महालेखाले वन मन्त्रालय र सरकारलाई सुझाव दिने तर मन्त्रालयले सुझाव अनुसार सुधार गर्ने तत्परता नदेखाउने परम्परा नै बनिसकेको छ । वन क्षेत्रमा अहिले आर्थिक, नीतिगत र कार्यगत वेथिति बढिरहेको छ जसले गर्दा वनको व्यवस्थापन, लाभ प्राप्तिमा अवरोध उत्पन्न भैरहको छ । वनलाई आर्थिक, पर्यावरणीय समुन्नतिको आधार बनाउनको लागि जतिसक्दो छिटो वन क्षेत्रमा देखिएका बेथितिहरू हटाएर वनमा सुशासनको प्रत्याभूति गराउनु जरुरि छ ।

*बुटवल टुडे, ४ बैशाख २०७६*

yrkandel@gmail.com

# Poor Governance in Nepal's Forests Sector

Yubaraj Kandel

***Summary***

There is a concerning trend in Nepal regarding the utilization of forest resources, with various economic, social, political, and environmental implications. Forests have consistently been prioritized by governments due to the numerous opportunities they offer, such as land conservation, watershed conservation, water availability, timber and herb resources, mining potential, and tourism attractions. Individuals with access to forests often view them as a valuable asset and strive to maximize their utilization, frequently seeking assistance from the Ministry of Forestry. However, this focus on forests as a source of income has led to reports of irregularities within the sector. The Auditor General's report highlighted several issues, including discrepancies in wood pricing, lack of record-keeping for wood distribution, inadequate action against forest encroachment, insufficient wood inventory management, delayed auctions, unmonitored land use by other agencies, failure to collect royalties, neglect of plantation protection, and inadequate management of national parks and protected areas. Despite receiving annual suggestions from the Accountant General for improvement, the Ministry of Forestry and the government have shown reluctance to address these issues. The growing economic, political, and operational challenges in the forest sector are hindering effective forest management and reaping benefits from these valuable resources. To establish forests as a cornerstone for economic and environmental development, it is imperative to address governance issues promptly and effectively. By tackling the identified problems within the forest sector, we can pave the way for sustainable forest management and maximize the benefits derived from these vital natural resources.

*Butwal Today, 17 April 2019*

*This book is a collection of forest-related articles written by the author and published in newspapers at different times. The articles in this book have exposed the issues related to forest seen at the time of publication of the article. This book will be useful for people involved in forest and environment protection and research.*






## About the author

The author of this book, Yubaraj Kandel, is a resident of Tilottama municipality in Rupandehi district. He is a PhD student and has been involved in research and writing on forest, environment and tourism for two and a half decades. He has published more than 1000 articles related to forest and environment. The author can be contacted at yrkandel@gmail.com or 9805460212.